रवि शाक्य
इखाछेँ, यल

# रत्न मल्ल
# र
# उनको समकालिक नेपाल मण्डल

[ने.सं. ६०२-६४०]

◆
◆
◆


ग्रन्थकार

देविचन्द्र श्रेष्ठ


◆
◆
◆


ने.सं. ११२२

*आर्थिक नेपाल, काठमाडौं*

[सं. २०५९]

प्रकाशक :
**आर्थिक नेपाल**
[कैलाशकूट सभाको सहयोगार्थ]

पहिलो पटक - १००० प्रति
सं. २०५९ आषाढ


मूल्य रु : ७५।-

मुद्रक -
सामुदायिक प्रिन्टर्स प्रा.लि.
थापाथली, काठमाडौं
☎ २५३४९९

आवरण : चिलंचो चैत्य, कीर्तिपुर (रत्न मल्लका पालाको वास्तुकला)
कलाकार : हरिहर

# प्राक्कथन

नेपालको इतिहास खोजी गर्ने कामको थालनी विदेशीहरूद्वारा भएको हुनाले त्यसको लडों थामेर बसेका विदेशी अध्येताहरू अहिले पनि औंलामा गनिने संख्यामा छन् । यता आफ्नै देशमा नेपालीहरूले, इतिहास शिरोमणि बाबुराम आचार्यदेखि थाल्दै आएको, इतिहासको अध्ययन गर्ने क्रममा अब त पेशेवार लेखकहरूको प्रवेश मनग्य भइरहेकै छ । त्यसमा पनि व्यावसायिक ढांचामा पाठ्यक्रममुखी पुस्तकहरूको त अनगिन्ती खात लागिसकेको छ, अझ त्यसमा थपिंदै छन, थपिइरहने छन् । यसतर्फ कुनै विराम आउने कुरा सोच्नै सकिंदैन ।

अर्कोतिर, स्वगत भावुकता र वैयक्तिक रुचिअनुसार इतिहासका कृतिहरू पनि बराबर देखा पर्दैछन् । तैपनि देशमा इतिहास चेतना भने नितान्त दरिद्रताले छ्याएर त्यसको पीडा आजभोलि दिन दुगुना रात चौगुना नेपाली मात्रले भोग्नु परिराखेको छ । इतिहासको चेतनाभित्र राष्ट्रिय समस्याको समाधान खोज्ने परिपाटी भने यहाँ बस्न र बसाल्न थालिएको कुनै छनक पाइँदैन ।

त्यस्तै, इतिहास खोजीको पनि निश्चित प्रविधि र चिन्तनको मौलिक तहबह हुन्छ । त्यसमा इमानदारीको बर्चस्व पनि रहनुपर्छ । यसरी इतिहासको प्राविधिक पक्षलाई साथमा लिएर हिंड्ने इतिहासविद्को कृतिमा इतिहास चेतना खोज्ने संस्थागत प्रयास हाम्रो यहाँ चौपट्ट खट्किराखेको अवस्थामा नेपालको मध्यकालिक इतिहासप्रति धेरैभन्दा धेरै अन्याय भइराखेको छ । यस्तो प्रवृत्ति जानेर गरिएको होस् वा नजानेर होस्, दुवै पक्ष आलोच्य नै हुन्छ । यसै लहरमा राष्ट्रिय इतिहासको मूल प्रवाहमा समाहित हुन नसकिराखेका कैयन् थालापाटाहरू पर्खंदा पर्खंदै बिलाउन समेत बेर नलाग्ने अवस्थामा पुगेका छन् । तसर्थ, 'आर्थिक नेपाल' ले इतिहास चेतनाको मञ्च थालनी गर्न खोजेको छ नितान्त चाहनाको वर्तमान परिप्रेक्ष्यमा । यसको लागि पहिलो कोसेलीका रूपमा 'रत्न मल्ल र उनको समकालिक नेपाल मण्डल' यहाँ प्रस्तुत छ । नेपालको इतिहासमा मध्यकालको एक दोबाटामा (Cross Road) उभिएका राजा रत्न मल्ललाई केन्द्र विन्दुमा राखेर त्यतिखेरको संसामयिक नेपालकै राष्ट्रिय-अन्तर्राष्ट्रिय परिप्रेक्ष्यमा गरिएको यो एकसरो अध्ययन हो । यसमा हाम्रो इतिहास चिन्तनको विद्यमान तहमा (Debatal Stage) उत्रेर कृति आफै बोल्छ । कृतित्वले भूमिकामा भनिराख्नु आवश्यक पर्दैन । तर, यहाँनिर एउटा कुरा भने अवश्य भन्नैपर्ने हुन्छ । त्यो के हो भने, यसमा राष्ट्रिय पक्ष अँगालेर 'नेपाल सम्वत्' लाई कालमापक मानेको छु । यसमा कसैले अन्यथा सोच्नु हुनेछैन भन्ने विश्वास पनि गर्दछु । श्री ५ को सरकारले नै यसमा परोक्ष अनुमति प्रदान गरिसकेको तथ्य यहाँनिर खूद मननयोग्य छ ।

नेपाल सम्वत्का प्रणेतालाई राष्ट्रिय विभूतिको हैसियतमा सम्मान व्यक्त गर्नुले नै मार्ग प्रशस्त गरेको मान्नुपर्नेछ ।

यस अध्ययनमा लेखकको त्रुटि प्रशस्त भेटिन सक्तछ । प्रथमत: यो पुस्तक नै अहिलेको लागि मेरो एकल अध्ययन मात्र हो । यस्तै एकल-एकल प्रयासले गर्दा नै नेपालको इतिहास अध्ययनमा साह्रै दारिद्र्यले छाएको छ भनेर सकार गर्दा मलाई त केही संकोच लाग्दैन । यसलाई वैयक्तिक परिवेशबाट संस्थान्तर स्वरुप दिन नसक्नुमा कमजोरी आफ्नै हो भन्नुपर्छ । अर्कोतिर, कुनै हदमा पेशेवार कृति पनि त यो होइन । यस हालतमा प्रस्तुत कृतित्वको लागि प्रकाशक खोज्दा खोज्दा थाकेको यस बटुवाले विवश भएर 'आर्थिक नेपाल' लाई नै प्रकाशकीय भार समेत दिएर नितान्त एकल कृतिलाई संस्थान्तरित गर्ने जमर्को ठहरिने छ भन्ने विश्वास पनि यहाँनिर लिएको छु ।

– **देविचन्द्र श्रेष्ठ**

किंडोल, स्वयम्भू (काठमाडौं)

सं. २०५९ वैशाख १

(मेष संक्रान्ति)

# विषय सूची

# अभिलेख सूची

परिच्छेद १

# नेपालको इतिहासमा रत्न मल्लको स्थान

मध्यकालिक नेपालको इतिहासलाई अत्यन्त प्रभावित पार्ने एउटा सशक्त व्यक्तित्व हुन् रत्न मल्ल । अविभाजित नेपाल मण्डलको अन्तिम अधिराजका रूपमा उनको ऐतिहासिक भूमिका यति जल्दोबल्दो थियो कि उनको दाँजोमा पछिल्ला करीब तीनसय वर्षसम्म कोही सिङ्गो नेपालको राजा हुन सकेनन् । तर, नेपालको इतिहास लेख्दा रत्न मल्लमाथि आजसम्म न्याय हुन सकेको छैन ।

यहाँनेर, नेपालको इतिहासमा पारम्परिक केन्द्रको अलिकता चर्चा गर्नु अनिवार्य हुन्छ । यो चर्चा स्वाभाविकतः भौगोलिक क्षेत्रको आधारमा काठमाडौं उपत्यकामा केन्द्रित रहेको छ । नेपालको भौगोलिक इतिहास पुष्टि गर्ने जमर्कोलाई थाति राखेर काठमाडौं उपत्यकामा राजनैतिक अधिकार जमाउन वा कायम राख्न सफल भएको सार्वभौमसत्ता नै नेपालको राजसत्ता हो, नेपालको राजा हो । कारण स्पष्ट छ, यहीं नै नेपालको इतिहास अनादिकालदेखि श्रृङ्खलाबद्ध हुँदै आएको छ राजधानी भएर । यसै श्रृङ्खलाको अन्तिम चरणमा पश्चिम नेपालको एउटा सानो राज्य 'गोरखा' बाट उठेर आई काठमाडौं उपत्यकामा आधिपत्य जमाउन सफल हुने बित्तिकै पृथ्वीनारायण शाह नेपालको राजा बनेका हुन् । त्यहाँदेखि उनको वंशजमा नेपालको राजसत्ता केन्द्रित भएर आएको छ । पृथ्वीनारायण शाहदेखि नेपालको संकीर्णता अथवा विभाजित नेपालको एकीकरण हुँदै गएको तथ्यले गर्दा नेपालको इतिहासमा मध्यकालको पनि अन्त्य भयो ।

तर, रत्न मल्लको सम्बन्धमा ऐतिहासिक विश्लेषण गर्दा, उपर्युक्त प्रक्रिया उल्टो देखापर्छ । रत्न मल्ल नेपाल मण्डलको राजा भएर पनि इतिहासमा आएको अन्तरले गर्दा पछिबाट उनलाई 'कान्तिपुर' को मात्र राजाको रूपमा उतारिएको छ । उनको व्यक्तित्वलाई अवमूल्यन गरिएको छ । यसो हुनुको मुख्य तात्पर्य के हो भने रत्न मल्लपछि उनका छोरा सूर्य मल्लले आफ्नो बाबुको राजनैतिक क्षेत्राधिकारलाई थाम्न सकेनन् । यसलाई पश्चिमबाट मगरहरूको हमलाले अरू कमजोर बनाइदियो । भक्तपुर राज्य पुस्तौनी अधिकार लिएर छुट्टियो । तथापि, कान्तिपुर राज्यको विस्तार त्यतिखेर भक्तपुरको तुलनामा निकै ठूलो रह्यो ।

यसरी रत्न मल्लपछिका राजाहरूको कमजोरीले गर्दा राज्य खुम्चिएर 'कान्तिपुर' मा मात्र उनीहरूको शासन केन्द्रित रह्यो । इतिहासको यस संकुचित वृत्तको परिणतिलाई राम्ररी छानबिन नगरेर लेख्दा रत्न मल्लमाथि न्याय नभएको मात्र होइन, इतिहास नै वास्तविकतादेखि बहकिएर गइराखेको छ आजसम्म । त्यसलाई आफ्नो ठाउँमा ल्याएर स्थापित गर्ने अभिप्रायले प्रस्तुत ऐतिहासिक विश्लेषण अघि सारिएको छ ।

ने.सं. ६०२ (सं. १५३८) मा यक्ष मल्लको मृत्यु भएपछि कान्तिपुरमा राजधानी बनाएर, यक्ष मल्लले छाडेको सिङ्गो नेपाल मण्डलमाथि आफ्नै बाहुबलद्वारा एकछत्र शासन गर्ने राजा रत्न

मल्ललाई इतिहासकारहरूले विखण्डित नेपालको राजाको रूपमा प्रस्तुत गर्दै आएका छन् । उनलाई 'कान्तिपुर' राज्यको मात्र राजा मान्ने भ्रमको सिर्जना मध्यकालिक इतिहासकारहरूदेखि नै भएको पाइन्छ । कान्तिपुर राज्यको इतिहास लेखाउने पहिलो राजा हो प्रताप मल्ल । पछि त प्रताप मल्ल आफै पनि इतिहासकारको रूपमा उत्रिएको छ । प्रताप मल्लको शासनको प्रारम्भमा उनका दरवारी कवि-इतिहासकार मयूरध्वजले रत्न मल्लको सम्बन्धमा गरेको वर्णन हेरौं :

*एतस्मात् समजीजनत् विजयिनो दर्भाग्र संतीक्ष्णया*
*बुद्धया वाक्पति भावमभ्युपगतः श्रीरत्न मल्लो नृपः*
*अम्भोधेरिव शर्व्वरी परिवृढो वीर्य्यैक सद्भाजनम्*
*येनाकारि हि काष्ठमण्डपपुरी रक्षा प्रसिद्धात्मना ॥७॥*

**-प्रताप मल्लको**
**हनूमान्ढोका दरवार, त्रिशूल डवली अभिलेखबाट** (ने.सं. ७६२)

[उहाँबाट (यक्ष मल्लबाट) अत्यन्त तीखो बुद्धि भएका विजयी रत्न मल्ल राजा पैदा भए जसले आकासबाट वर्षा भए जस्तै वाणको वर्षा गरी आफ्नो बाहुवलले 'काष्ठमण्डप' पुरीलाई राजधानी बनाएर यसको सुरक्षा गरी प्रसिद्ध गराइदिए ।]

यहाँ इतिहासकारले रत्न मल्लको विषयमा बोलेको कुरा विचारणीय छ । उनलाई निःसन्देह यक्ष मल्लको लगत्तै पछिको राजा भनेका छन् । अनि उनले आफ्नो बाहुवलद्वारा 'काष्ठमण्डप' महानगरलाई नयाँ राजधानीको रूपमा स्थापित गरेको कुरा स्पष्ट गरिएको छ । यसलाई 'कान्तिपुर' राज्यको राजाको रूपमा रत्न मल्लको वर्णन भनेर स्वीकार गर्दा अन्याय पर्छ ।

प्रताप मल्लले आफै कवि-इतिहासकारको रूपमा उत्रेर लेखेको कान्तिपुरको इतिहास पनि हाम्रो मध्यकालिक इतिहासको अध्ययन गर्दा उत्तिकै महत्वपूर्ण छ । उनले रत्न मल्ललाई कान्तिपुरमा गएर ठूलो युद्ध गरी यहाँका राजाहरूलाई (सामन्त) समाप्त गरी बडो समृद्धिशाली राज्यको उपभोग गरेको वर्णन गरेका छन् । उनकै शब्दमा पढौं :

*तस्माच्छ्री रत्न मल्लो समजनि विवुधाराधने दत्त बुद्धि-*
*द्दन्तीनां दानकर्ता प्रवलरिपुकुलोत्सादने पार्थ तुल्यः ।*
*यद्दानाम्बु प्रवाह प्रकर विकसितां वाहिनीं वीक्ष्य नूनं*
*गंगा संगात् प्रवृद्धं प्रचल जलनिधिष्प्रेम गर्व्वम्मुमोच ॥*

*यो नु प्रौढतरान्निहत्य धरणीपालान्महासंगरे*
*गत्वा कान्तिपुरं चकार विमलं राज्यन्तु स्वर्गोपमं ॥*

**- प्रताप मल्लको**
**पशुपति अभिलेखबाट** (ने.सं. ७७७)

[उहाँबाट (यक्ष मल्लबाट) देवताहरूमा चित्त लगाउने, हात्तीहरू दान गर्ने, शत्रु सखाप पार्नमा अर्जुन बराबरको रत्न मल्ल पैदा भए। उनको दान रुपी जल प्रवाहले बगेको नदी देखेर त्यसलाई उछिन्न समुद्रले पनि गंगालाई छाडिदिए।
यस्ता रत्न मल्लले 'कान्तिपुर' मा गएर त्यहाँका बलिया राजाहरूलाई (सामन्त शासकहरू) ठूलो युद्धमा सखाप पारेर स्वर्गमा जस्तै राज्य गरे।]

रत्न मल्लको सम्बन्धमा मयूरध्वजलेभन्दा प्रताप मल्लले गरेको वर्णनमा अलि खुलाएर लेखिएको छ। रत्न मल्लले 'कान्तिपुर' मा आएर यहाँका पुस्तौनी शासकहरूलाई (सामन्त) ठूलो युद्धमा परास्त गरी आफ्नो राजधानी बनाएको कुरा प्रताप मल्लले लेखेका छन्। फरक के मा छ भने यक्ष मल्लले पुस्तौनी राजधानी भक्तपुरमा बसी शासन गरे भने रत्न मल्लले भक्तपुरलाई छाडेर काठमाडौंलाई नयाँ राजधानीको रूपमा स्थापित गरिदिए।

अब, रत्न मल्लले कान्तिपुरमा आएर राजधानी बनाउनुको तात्पर्य के थियो त ? त्यसतर्फ पनि हाम्रो दृष्टि जानुपर्छ। यसमा त्यतिखेर देखिएको मुख्य कारण त 'काष्ठमण्डप' ले महानगरको रूप लिएर समृद्धिशाली हुनु नै हो। तात्कालिक भारत-तिब्बत व्यापारमा नेपालको मध्यस्थ व्यापारिक स्थितिले गर्दा 'ललितपत्तन' र पछिबाट 'काष्ठमण्डप' नगरहरूको विकास सम्भव भयो। तिनमा पनि पछिपछि 'काष्ठमण्डप' ले महानगरको रूप लिएर विकसित भइदिँदा 'भक्तपुर' राजधानी फिक्का पर्नथाल्यो। त्यसो हुँदा यक्ष मल्लपछि उनको छोरा रत्न मल्लको दृष्टि यतातिर पऱ्यो। र, उनी अरू भाइहरूभन्दा अधिक महत्वाकांक्षी पनि हुनाले तिनीहरूलाई उछिनेर आफूलाई यक्ष मल्लको पूर्ण उत्तराधिकारीको रूपमा स्थापित गर्न सफल भए।

यक्ष मल्लको उत्तराधिकार प्राप्त पौरखशाली राजा हुनाले नै त्यतिखेर नेपालमण्डलकै राजधानीको रूपमा स्थापित काष्ठमण्डपका प्रसिद्ध शक्ति पीठहरू भद्रकाली र पचली भैरवमा रत्न मल्ललाई 'खड्गसिद्धि' प्रदान गरिएका तात्कालिक घटना टिपिएका प्रलेखहरू पाइन्छन्। भद्रकाली तथा पचली भैरवका गूठी परम्पराको अध्ययन गर्दा भेटिने उपर्युक्त 'खड्गसिद्धि' का घटनाहरू ऐतिहासिक दस्तावेजको रूपमा अङ्गीकार गर्नुपर्ने हुन्छ। ने.सं. ६०५ मा भद्रकालीको खड्गसिद्धि प्राप्त गर्ने पहिलो राजाको रूपमा रत्न मल्लको चर्चा गठीको थ्यासफुमा भेटिन्छ। त्यस्तै पचली भैरवको पनि खड्गसिद्धि राजा रत्न मल्ललाई प्रदान गरेको वर्णन सोही गुठीकै नाट्य परम्पराको दस्तावेजमा पाइनाले त्यतिखेर राजा रत्न मल्लले नेपालको राजनीतिमा ल्याएको नयाँ मोडकै द्योतक भन्न सकिन्छ।

उपर्युक्त वस्तुस्थितिको सङ्केत कान्तिपुरका राजा पार्थिवेन्द्र मल्लका अभिलेखहरूमा पाइन्छ। पार्थिवेन्द्र मल्ल पनि बाबु प्रताप मल्ल जस्तै कवि-इतिहासकारका रूपमा उत्रेका छन्। उनले आफ्नो वंशको कवितात्मक वर्णन गरी एउटा पशुपतिमा अर्को आफ्नै दरवारको तुलजा मन्दिरअगाडि अभिलेख राखेका छन्। उनले पहिलोपल्ट कान्तिपुरको इतिहास लेख्दा रत्न मल्लदेखि थालनी गरेका छन्। दोस्रोपल्टको इतिहासमा यक्ष मल्लको उत्तराधिकार रत्न मल्ललाई दिएर उनी भक्तपुरभन्दा आर्थिक वैभवले गर्दा बढी समृद्ध कान्तिपुरमा आएर आफ्नो नयाँ राजधानी बनाएको चर्चा गरेका छन्। यसरी, आर्थिक कारणले गर्दा भक्तपुरलाई छाडी रत्न मल्लले

'कान्तिपुर' अर्थात् 'काष्ठमण्डप' महानगरलाई राजधानी बनाएको ऐतिहासिक निर्क्यौल यहाँनिर अघि सारिएका छन् ।

अब पार्थिवेन्द्र मल्लले गरेको रत्न मल्लको पहिलो वर्णन् अध्ययन गरौं :

*आसीच्छ्री रत्न मल्लो नृपतिरूपचित श्रीसमागत्य भक्त-*
*ग्रामाद्यनेह लब्ध त्रिभुवन जननी पाद पद्म प्रसादात् ।*
*वैश्यान्संहृत्य शस्त्रोपचय परिचयान्प्राप्तराज्याधिकारा-*
*न्कान्तीं कान्त्युग्र वर्णाश्रम समुपचिता सद्य एव व्यधायि ॥१॥*

**-पार्थिवेन्द्र मल्लको**
**पशुपति अभिलेखबाट (ने.सं. ७९९)**

(राजा रत्न मल्ल श्रीहरसिद्धिको अनुग्रह पाएर भक्तग्राम (भक्तपुर) बाट (कान्तिपुर) मा आई यहाँ पुस्तौनी शासनको अधिकार प्राप्त वैश्यहरू (ठकुरी) लाई युद्धमा परास्त गरी तुरुन्त वर्णाश्रम व्यवस्था लागू गरे ।)

तर, पार्थिवेन्द्र मल्लले रत्न मल्लको सम्बन्धमा व्यक्त गरेको पछिल्लो वर्णन चाहिँ बढ्ता अर्थपूर्ण र इतिहासको तादात्म्यसित मेल खान्छ । यसमा उनले रत्न मल्लभन्दा अगाडि यक्ष मल्लको प्रतापयुक्त सार्वभौम शासनलाई अघि सारेका छन् :

*राजासीद्यक्ष मल्लस्समर भुवि समृद्धादरस्सार भूतो*
*भूमौ सामन्त भूभृत्मुकुट मणिगणो दीप्ति नीराजितांघ्रिः ।*
*भक्त ग्रामेभिरामे भुवनधनगुणैष्केलि कौतुहलाद्यै,*
*राजन्ते राजराज प्रणय परिचिता भूतयोद्यापियस्मिन् ॥१॥*

*तत्पुत्रो रत्न मल्लो भवदमल मतिर्योजहादेष भक्त-*
*ग्रामं स्वल्पार्थ कामं शुचि विमल वपुष्पल्लवं दिक्करीव ।*
*देवीपादाब्ज सेवी वलमतुलभुजव प्रौढचन्द्र प्रताप-*
*ष्कान्तीमासाद्य सद्यः क्षपित नृपपद स्थायि वैश्यामथाशात् ॥२॥*

**- पार्थिवेन्द्र मल्लको**
**हनूमान् ढोका दरवार, तलेजूको स्तम्भलेखबाट (ने.सं. ८०२)**

[राजा यक्ष मल्ल, जसले युद्ध कार्यमा ठूलो समृद्धि हासिल गरेको छ, सामन्त राजाहरूको शिरपेचका मणिले जसको पाउ शोभायमान भएको छ, धन र गुणले कौतुहलपूर्ण भक्तग्राममा (भक्तपुर) बसेर राम्ररी शासन गर्दथे ॥१॥
उनको छोरा रत्न मल्लले भक्तग्राम (भक्तपुर) लाई थोरै अर्थोपार्जन गर्ने हुनाले सानातिना रुखपातलाई हात्तीले छाडिदिए झैं छाडेर भवानीका (हरसिद्धि) सेवक ठूलो बाहुवल भएको, प्रखर चन्द्रमाको प्रताप लिएर कान्ति(पुर)मा आई तुरुन्तै यहाँका शासक वैश्यहरूलाई (ठकुरीहरू) हटाएर राज्य गरे ॥२॥ ]

## नेपालको इतिहासमा रत्न....

पार्थिवेन्द्र मल्लले रचेको उपर्युक्त श्लोकमा राजा यक्ष मल्लको जुन सन्दर्भ जोडिएको छ त्यो बडो मननयोग्य छ । यहाँ राजा रत्न मल्लको उच्च आदर्श व्यक्त गर्नलाई नै यक्ष मल्लको सार्वभौम शासकीय छवि प्रस्तुत गरेको कुरा विश्वस्त हुन्छ जसको लागि कान्तिपुरका राजाहरूमा प्रताप मल्लसम्मले अन्तिम प्रयत्न जारिराखे । यसरी यक्ष मल्लको अखण्ड राज्य नेपाल मण्डलको उत्तराधिकारी नै रत्न मल्ल हुन् भनेर दर्शाउने प्रयास मध्यकालिक कान्तिपुरका राजा एवं इतिहासकारहरूले गर्दै आएका छन् ।

यस निर्क्यौलको पुष्टि रत्न मल्लको समकालिक अन्य कृतिबाट पनि हुन्छ । रत्न मल्लले ने.सं. ६०७ ज्येष्ठ शुक्ल दशमी, विहिवारको दिन आफ्नी छोरी विरमादेवीको विवाह कुमार अजय मल्लसित गरिदिएका थिए । सो उपलक्ष्यमा तयार गरिएको चार अङ्क रामायण नाटकको एउटा थ्यासफू काठमाडौंमा एक निजी संग्रहमा भेटिएको छ । सोही नाटकको बीच-बीचमा तात्कालिक राजनीतिसित सम्बन्ध राख्ने अनेकौं प्रशस्तिहरू गाइएका छन् । तिनबाट त्यतिखेर नेपालको राजनैतिक इतिहासमा प्रशस्त प्रकाश पारेका छन् । यिनै प्रसंगहरूमा राय मल्ललाई 'भक्तपुर मण्डल' को मात्र राजा भनेका छन् भने रत्न मल्ललाई 'नेपाल मण्डल' को सार्वभौम राजाका रूपमा चित्रण गरिएको छ । अब, त्यसको एक अंश उद्धरण पनि यहाँ उत्तिकै प्रासंगिक हुन्छ:

*"विवुधनाथ सम राय शिरोमणि जय यक्ष मल्ल देव नंदना २*
*श्रीजय रत्न मल्ल देवा मालतिदेवी पति*
*कंसनारायण दान किरति रविनंदना*
*रघुवंश कमल दिवाकरा*
*निखिल नृपति सेवित वर चरणा*
*प्रवल वैरि गजकेशरी, चतुरदश विद्या गुण सागरा*
*नेपाल मण्डल प्रतिपालिता ॥*

[इन्द्र समान, राजाहरूमा शिरोमणि यक्ष मल्ल देवका छोरा,
श्रीरत्न मल्लदेव, मालतिदेवीका पति,
कंसनारायण, कर्णजत्तिकै दानकीर्ति प्राप्त,
रघुवंशरूपी कमलको लागि सूर्य,
सारा सामन्त राजाहरूले पाउ पूजिएका,
वैरिहरूको निमित्त प्रवल सिंह,
चौधै विद्याका गुणको सागर
नेपाल मण्डल प्रतिपाल गर्ने (अधिराज) । ]

**- महेशराज पन्त:**
**रत्न मल्लको पालामा लेखिएको रामायण नाटकको ऐतिहासिक सार**
**पूर्णिमा पूर्णाङ्क** ३६ (सं. २०३४)

[यसको पूर्ण विवरण तल परिशिष्ट खण्डमा दिइएको छ । ]

यति हुँदाहुँदै पनि एउटा सत्यचाहिँ वर्तमान इतिहासविद्हरूले सधैँ स्वीकार गर्नैपर्ने छ । त्यो के हो भने कान्तिपुर राज्यको इतिहास कोर्दा रत्न मल्ललाई 'आदिपुरुष' को रूपमा अवश्य लिनुपर्ने हुन्छ । त्यसै अनुरूप पार्थिवेन्द्र मल्लले रचेको कान्तिपुरको इतिहासमा हामी पाउँछौं । साथसाथै, नेपाल उपत्यकामा खडा भएका उत्तर मध्यकालका तीनओटा राज्यहरू भक्तपुर, कान्तिपुर र ललितपुरमध्ये एउटा राज्य 'कान्तिपुर' को मात्र इतिहास लेख्दा पुरानो राजधानी भक्तपुरबाट आएर रत्न मल्लले 'काष्ठमण्डप' महानगरलाई आफ्नो राजधानी बनाएको घटना कतै छोड्न सकिने होइन । त्यसो हुँदा प्रताप मल्लको समयमा पहिलोपल्ट कान्तिपुरको इतिहास लेख्दा रत्न मल्लले 'काष्ठमण्डप' लाई नेपाल मण्डलकै राजधानी बनाएको कुरा संक्षेपमा उल्लेख गरेका हुन् । त्यसैगरी प्रताप मल्लका माहिला छोरा पार्थिवेन्द्र मल्लले पनि कान्तिपुरको इतिहासमा रत्न मल्लले भक्तपुरलाई छाडी कान्तिपुरमा आएर नयाँ राजधानी खडा गरेको चर्चा गरेका छन् ।

यसप्रकारले मध्यकालमा 'कान्तिपुर' को इतिहास लेख्दा संक्षिप्त रूपमा रत्न मल्लले 'काष्ठमण्डप' महानगरमा नेपाल मण्डलकै राजधानी खडा गरेको वर्णनलाई यहाँ पृथ्वीनारायण शाहको प्रवेशपछि नेपालको वंशावली लेखाउँदा रत्न मल्ललाई केवल 'कान्तिपुर' राज्यको मात्र राजाका रूपमा उतारिएकोले एउटा बिडम्वना खडा भएको छ, इतिहासको तथ्यमा नै कालो बादल लाग्न गएको छ ।

यस प्रसंगमा अब भाषा वंशावलीको सम्बद्ध अंश उद्धृत गर्नु चाख लाग्दो हुनेछ:

*"......जयस्थिति मल्ल धन्य हुन् । अस्यपुत्र यक्ष मल्ल.........*
*अस्य पुत्र ३: ज्येष्ठ राय मल्ल, माहिला रण मल्ल, कान्छा रत्न मल्ल ।*
*ज्येष्ठ राय मल्ल भक्तपुरका राजा भया । भोग वर्ष १५*
*माहिला रण मल्लले बनेपुर जाई सात ग्रामका राजा हुन गया । भोग वर्ष २१ ॥.........*

*कान्छा रत्न मल्लले जेठा दाज्यू राय मल्लसित विरोध भाव परस्पर गर्न लाग्या किन भन्या यिनका कुलमा तुलजा जगाउन्या मन्त्र प्राण त्याग हुन्या समयविना अरू कालमा लिन हुन्या रीत थिएन रत्न मल्लले आफ्ना बाबाका प्राण त्यागका बेलामा दाज्यूकन छलछाम गरी बाबुदेखि कुल दुर्गा तुलजा जगाउन्या मन्त्र पायाको थियो र ज्येष्ठ क्रमले हुन्या हो तैंले मलाई छलिस् भनी रीस गर्दा दुवै भाइको परस्पर चित्तमा विरोध भाव हुन गयाको थियो ।*

*यस्तै वखतमा कान्छा रत्न मल्लकन तिनैमन्त्रका प्रभावले श्रीनीलतारा देवी (हरसिद्धि) प्रसन्न भै स्वप्न विषे देवीबाट हे राजन् तिमी कान्तिपुरजाई १२ ठकुरीहरूकन जिती राजा हुन पाउला भनी आज्ञा प्रसन्न हुँदा रत्न मल्लले देववाणि हो भनी निश्चय ठहराई प्रातः कालैमा उठी नीलतारा देवीका स्थानमा जाई दर्शन गरी सरासर कान्तिपुरमा आई बान्ह ठकुरीका एक मुख्य काजीका घर पुगी एकान्त पाई तिनलाई देवीले आज्ञा भएको वचन भन्दा देवीका अनुग्रह प्रभावले ती काजी रत्न मल्लका वशमा आई काजीले हवस् म जुक्ति गरुँला भनी राजपुत्रकन गुप्त गरी राखी*

*वान्ह ठकुरीकन यस काजीले खान्या वस्तुमा विष राखी भोजन गराई चाडै ठकुरीहरूकन मारी रत्न मल्लकन राजा गराया ।....*

*राजा रत्न मल्लले वर्ष ११ रजाइ गरी शान्त भैगया ।"*

**– भाषा वंशावली (भाग २)**
**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

यसरी भाषा वंशावलीकारले रत्न मल्ल भक्तपुरबाट आई कान्तिपुरमा नयाँ राज्य स्थापना गरेको भनी वर्णन गरेका छन् । यो कुरा सर्वथा गलत प्रस्तुती हो । राजनैतिक इतिहासको विश्लेषण यो होइन । यहाँनेर वंशावलीकारले जानेर वा नजानेर होस् रत्न मल्ललाई कान्तिपुर राज्यको मात्र राजाको रूपमा उतारेका छन् । यसैलाई अनुसरण गरी नेपालका इतिहासकारहरू एकमुख भएर रत्न मल्ललाई केवल कान्तिपुरको राजा भनी लेखेका मात्र होइनन् मध्यकालको सिङ्गो नेपाललाई टुक्राउने खल नायकको रूपमा पनि चित्रण गर्ने गरेका छन्:

*"यक्ष मल्लका छोराहरूमा रत्न मल्ल चतुरा र महत्त्वाकांक्षी पुरुष थिए । यसैले, दाजुभाइहरूसंगको संयुक्त शासनले मात्रै उनी सन्तुष्ट भएनन् । यसकारण दाजुहरूसंग मिली भक्तपुरमा पनि शासन चलाउँदै रहने तथा अन्ततिर आफ्नो स्वतन्त्र शासन पनि कायम गर्ने उद्योग रत्न मल्लले गर्न लागे ।*

*आफ्ना बाबुको मृत्यु भएको ३ वर्ष जतिपछि नै वि.सं. १५४१ मा रत्न मल्लले कान्तिपुरका महापात्रहरूलाई सिद्धयाई कान्तिपुर दखल गरे । रत्न मल्लले त्यहाँ आफू र आफ्ना एकजना भाइ, अरि मल्लको मात्र शासन कायम गरे । केही कालपछि कान्तिपुरमा रत्न मल्लको एकलौटी अधिकार भयो ।*

*यक्ष मल्लका छोराहरूमा जेठा राय मल्ल हुनाले भक्तपुरमा उनको केही विशेष अधिकार रहनु स्वाभाविक थियो तथा संयुक्त अधिकार रहेको कान्तिपुरमा रत्न मल्लले आफ्नो मात्र स्वतन्त्र शासन कायम गरेको राय मल्ल र उनका सन्तानलाई मन पर्ने कुरा थिएन । तर, चतुर रत्न मल्ल भाइहरूलाई आफ्नो पक्षमा मिलाउन समर्थ भए । यसैले भाइहरूको सहायताले रत्न मल्लले ललितपुरमा भक्तपुरको अधिकार हटाई आफ्नो प्रभाव फैलाए । परन्तु, ललितपुरका महापात्रहरू केही व्यवस्थित हुँदा रत्न मल्लले कान्तिपुरका महापात्रहरूलाई जस्तै उनीहरूलाई सिद्ध्याउन सकेनन् ।*

*यसरी यक्ष मल्लका छोराछोरीको कलहले नेपाल उपत्यकाभित्रै तीन स्वतन्त्र राज्यको बीउ रोपियो ।*

**– इतिहास संशोधनको प्रमाण प्रमेय : ऐतिहासिक सार**
**पृष्ठ ७७-७८, संशोधन मण्डल (सं. २०१९)**

परिशिष्ट खण्ड

# रत्न मल्लले लेखाएको चतुरङ्क रामायण नाटकको ऐतिहासिक सार संकलन

(१)

श्रीभक्तापुर मण्डल...............
स श्रीमान्जय राय मल्ल नृप ...............
(नेपाल मण्डल) पालिता जयति यः श्रीकंसनारायणस्तेन
श्रीजय रत्न मल्ल विभुना त्रैविक्रमीयं पुरी ॥

(२)

सान्द्रानन्दा ‿ विरताभिवन्द्यमान ‿ श्रीश्रीश्रीपशुपति चरण सारस किंजल्क ‿
पराग पिञ्जरित मस्तकस्य ‿
श्रीमानेश्वरी ‿ वर लब्ध प्रभाव संमद विराजितस्य ‿
रविकुल क्षीरार्णव ‿ संभव कुमुदबान्धवस्य ‿
राजन्यवंश शिरोरत्नस्य ‿
श्रीमत्कंसनारायणावतार श्रीश्रीजय रत्न मल्ल देवस्य ‿
हृदयानन्दकारिणी ‿ राजान्ववाय ‿ पयोनिधि ‿ संजात पद्मावतारात्मजा ‿
श्रीश्रीविरमादेव्या
रघुवंशोक्त ‿ कर ग्रहण महोत्सवे ‿ हर्षनिर्ब्भर जन समूहे ‿
प्रत्यग्र विरचितं ‿ चतुरंक रामायणस्य ‿ नव रसाभिनय संगीत शब्दोयं प्रवर्तते ॥

(३)

नेपाल राज्ये त्रिदिव प्रकाशे ‿ श्रीरत्न मल्ल प्रभुरेष शक्रः।
श्रीमालतीति • प्रथितास्य देवी ‿ तस्यात्मजः श्रीजय सूर्य मल्लः॥

(४)

विवुधनाथ सम राय शिरोमणि जय जक्षमल देव नंदना २
श्रीजय रत्न मल्ल देवा ‿ मालतिदेवी पति ‿
कंसनारायण ‿ दान किरति रविनंदना ‿
रघुवंश कमल दिवाकरा ‿

निखिल नृपति सेवित वरचरणा ˎ
प्रवल वैरिगज केशरी ˎ चतुरदश विद्या गुण सागरा ˎ
नेपाल मण्डल प्रतिपालिता ॥

(५)

त्रिदशपुरोपम ˎ नयरीनाथा, श्रीकान्तिदेवी ˎ गवरी अवतारा २
हृदयनन्दन ˎ वीर विक्रम ˎ नृप सरोज विकशित दिवाकरा ॥
अखिल वैरिवन संहार दावानल ˎ श्रीरत्न मलदेव नरेश्वरा २
अनुज श्रीअरि मल्ल देव सह प्रितयन रार प्रतिपालिता ॥

(६)

कमलवंधुकुल ˎ जलनिधिसंभव ˎ श्रीविरमादेवी ˎ वर कमला २
श्रीअजय मलदेव कुमारा ˎ पाणिग्रहण महोच्छव कारिता
अतुल नारायण ˎ सयल आनंदा ˎ भवतु विजय शुभ मंगला ॥०॥

(७)

दिनमनि वंश कमल दिवाकरा ˎ कंसनारायण वीर विक्रमा २
श्रीरत्न मल्लदेव ˎ मालतिदेवी पति ˎ
तनय कुमार श्रीसूर्य मल्ल देवा ˎ
शक्र नंदन सम चारु वदना ॥०॥

(८)

मदन कलेवर भञ्जन चरणा ˎ वंदित मौलि विराजिता २
श्रीअरि मल देव मयनादेवी नाथा ˎ
हृदय नंदिनी श्रीमनोहरादेवी ˎ शगतिदेवी वालभारती सदृशाा ॥०॥

(९)

समर सुंदर नृपनयगुण सागरा ˎ दान किरती हरिचंद्र सदृशा २
रूपनारायण श्रीहरष मल देव ˎ रतनादेवी मुखचन्द्र चकोरा ॥०॥

(१०)

अचल गगन रस हायना २ [ने.सं. ६०७]
ज्येष्ठ शुक्ल तिथि अंतका ˎ
मयूरासन तारावर संजुत परिघ जोग ˎ

सुरगुरु दिवसोत्तम ़ गर करण शुभ मंगलकारा ़
चतुरअंक रामायणा ़ मोहनी साधन जग्यविधाना ़
विवाहमहोच्छव सयल आनंदा ॥०॥

रिपुगज कुंभ निहत हरी २
प्रचंड प्रताप नरेश्वरा
वीर कंसनारायण ़ **श्रीरत्न** मल देव
अनुज श्रीअरि मल **देव** ़ **गुणाकर** ़
चतुर्दिग महिमंडल व्यापित विमल किरति विराजिता ॥२३॥

(११)

दानेनादित्य सूनुं त्रिदशपति गुरुं प्रज्ञया यो विजित्य,
सौन्दर्येणाप्यनंग रजनिकरमपि ऱ्हेषयान्नात्मदीप्त्या ।
दोर्द्दर्पेणापिभीमं दिवसकरमपि स्पर्द्धमानः प्रतापैः
सश्रीमान् भू महेन्द्रो जयति नृपवरः श्रीअरीमल्ल देवः॥

तस्याज्ञां शिरसाधृत्वा ़ शशिराजेन लिख्यते ।
वर्षेन्द्रिये विधौ तर्क्के ़ मघौ राकातिथौ शुभे ॥ [ने.सं. ६१५]

***

**स्रोतः**

**धर्मरत्न वज्राचार्यको संग्रहमा रहेको "रामायण नाटक" थ्यासफू ।**

**-महेशराज पन्तः**

**रत्न मल्लको पालामा लेखिएको**

**रामायण नाटकको ऐतिहासिक सार**

**"पूर्णिमा" पूर्णाङ्क ३६ (सं. २०३४)**

## परिच्छेद २

# रत्न मल्लद्वारा काष्ठमण्डप अर्थात् काठमाडौंमा राजधानीको पुनर्स्थापना

नेपालको शासनकेन्द्र अथवा राजधानीको स्थलगत निवेश हाम्रो इतिहासमा संधै समस्याको रूपमा रहिआएको छ । प्राग्ऐतिहासिक युगमा यहाँ शासन गर्ने किरात राजाहरूको लामो सूची पाइन्छ । तर, तिनीहरूले काठमाडौं उपत्यकाको कुन ठाउँमा वसेर त्यत्रो लामो शासन गरे भन्ने कुरा इतिहासको गर्भमा नै अहिलेसम्म लुकेर वसेको छ । किरातहरूलाई धपाई यहाँ शासन गर्ने लिच्छविहरूको राजधानी अथवा शासन केन्द्र भने धेरै समय विवादमा रहेर अब अचेलको 'विशालनगर' भेकतिर रहेको कुरा करीव करीव टुङ्गो लागे जत्तिकै छ । तर, राजा जयदेव (द्वितीय) पछि एक्कासि यो शासन केन्द्र हराउँछ र हाम्रो इतिहासको मध्यकालमा पुग्दा 'भक्तपुर' मा पो नेपालको राजधानी हामी भेट्टाउँछौं ।

नेपालमा इतिहासमा प्राचीनकाल खर्लप्प समेट्ने लिच्छविहरूले पशुपति सन्निधान एवं वागमतीको पश्चिमतर्फ राजधानीको आवादी बढाउँदै लगेका कुरामा कुनै विवाद रहँदैन । यो इलाका पछि 'यम्बू' भनेर स्थानीय बोलचाल अथवा देशज भाषामा परिचित गराइएता पनि संस्कृत संज्ञा 'काष्ठमण्डप' र 'कान्तिपुर' को विस्तारले गर्दा मध्यकालको पछिल्लो समयमा आएर राजधानी रहेको 'भक्तपुर' नै फिक्का पर्न थाल्यो । अतः प्राचीन कालदेखि राजधानीको रूपमा प्रसिद्धि प्राप्त गरेको ठाउँमा नै राजधानीको पुनर्स्थापना एक प्रकारले अभीष्ट हुँदै आइरहेको थियो । यो अभीष्ट पुरा गरिदिने राजाको रूपमा उत्रिएको छ रत्न मल्ल ।

'काष्ठमण्डप' नगरको प्राचीन नाउँ थियो 'यम्बू' । त्यसमा पनि 'बू' प्रत्ययले देश (land) लाई जनाउँने हुँदा मूल शब्द त 'यँ' मात्रै हो । त्यसैले 'काठमाडौं' लाई बुझाउन अहिले पनि देशज भाषामा 'यें' नै प्रचलित छ । हाम्रो इतिहासको मध्यकालमा 'काष्ठमण्डप' नगरको आवादी बढ्दै गएर यहाँ बौद्ध संस्कृतिको चरम विकास भयो । बुद्ध धर्मको 'महायान' शाखाले 'वज्रयान' को रूप लिंदै गयो । यहाँ तत्कालको प्रशासनिक दर्जा 'पात्र' भन्ने संबोधनले व्यापार नायकहरूको नियुक्ति हुन थाल्यो राजधानी भक्तपुरबाट । भक्तपुरमा पनि शासकहरू वस्ने दरवार 'त्रि-पुर' कहलिन्थ्यो । त्यसैले, तात्कालिक शासकीय केन्द्र 'त्रि-पुर' दरवारप्रति ठूलो आकर्षण थियो राजधानी भक्तपुरमा ।

काष्ठमण्डपमा व्यापारको आयतन वृद्धिका साथ 'पात्र' बाट 'महापात्र' दर्जामा बढोत्तरी भएर यक्ष मल्लको समयमा यसले सामन्त राजा अर्थात् शासकीय स्वरुप ग्रहण गर्दा महापात्रहरूको

एउटा युग नै खडा भयो । व्यापारिक दलमा सुरक्षाको निमित्त शस्त्रसज्जित सैनिक डफ्फा पनि रहने हुनाले व्यापार-नायक प्रशासक महापात्रहरूले सैनिक सेवा राख्नु पनि स्वाभाविक छ । यसरी, व्यापारी महापात्रहरूको राजनैतिक सत्ता कायम हुन गएर सामन्त शासकको समकक्षमा पुगेका थिए । उनीहरूको दवदवाको संक्षिप्त चर्चा मध्यकालकै एक राजा एवं कवि-इतिहासकार पार्थिवेद्र मल्लले यसरी गरेका छन्:

*"वैश्यान् संहृत्य शस्त्रोपचय परिचयान् प्राप्त राज्याधिकारान् ।"*

यस्तो राजनैतिक स्थिति तात्कालिक शासन केन्द्र 'त्रि-पुर' दरवारको निमित्त अनुकूल थिएन । कालान्तरले गर्दा महापात्रहरूमाथि कडा नियन्त्रणको एकदम खाँचो देखापर्दै थियो ।

यसरी महापात्रहरूमाथि विस्तृत निगरानीको आवश्यकता देखेर, यक्ष मल्लको समयमा नै जेठा राजकुमार राय मल्ललाई 'कान्तिपुर' को प्रशासन हेर्न खटाइदिएका थिए ।[१] त्यस उपलक्ष्यमा ने.सं. ५७९ (सं. १५१६) को जेठ महिनामा यहाँ सिन्दूरयात्रा गरी एउटा भव्य समारोह नै भएको थियो । यस समारोहको निमित्त 'काष्ठमण्डप नगर' मा विशेष कर समेत लगाइएको थियो । केन्द्रद्वारा नियुक्त हुने गरेका र केन्द्रीय अनुशासनमा रहनु पर्ने यी महापात्रहरूमाथि यस्तो उच्च स्तरीय निगरानीले कान्तिपुरको तात्कालिक राजनैतिक स्थिति व्यक्त हुन्छ ।

ने.सं. ६०२ (सं. १५३८) को हिउँदमा नेपालको प्रतापी राजा यक्ष मल्लको मृत्यु भयो ।[२] लगत्तै उनका छोराहरूले संयुक्त शासनको पद्धति अपनाए । यक्ष मल्लका धेरैजना छोराहरू भएका र उनले अधिकार सम्पन्न गरेका ज्येष्ठ राय मल्लले अरू भाइहरूलाई थान्को लाउन नसक्दा पारंपरिक रूपमा यसरी संयुक्त शासन देखा पऱ्यो ।

यक्ष मल्लका ६ जना छोराहरू देखिएका छन् । तिनमा जेठा र माहिला राय मल्ल र रत्न मल्ल भए । त्यसपछि क्रमशः रण मल्ल, राम मल्ल र अरि मल्ल आउँछन् । कान्छो चाँही पूर्ण मल्ल देखापर्छ ।[३] यो कुरा यक्ष मल्लको शासनको आखिरी चरण ने.सं. ५९१ मा नारायण भट्टले पशुपतिमा राखेको अभिलेखबाट व्यक्त हुन्छ :

*श्रीसूर्य वंश नृपतिर्जय यक्ष मल्ल :*
*प्रौढ प्रताप भुवनैक महाप्रवीणः।*
*नेपाल-मण्डल विभूषित राजराजो*
*भूयाद्विपक्ष मथनो भुवि सुप्रसिद्धः॥*

---

१. परिशिष्ट खण्डः अभिलेख संख्या- १

२. परिशिष्ट खण्डः अभिलेख संख्या-२

३. **द्रष्टव्य** :

यक्ष मल्लको अर्को एक जना छोरा राज मल्ल पनि भएका थिए । तर, उनी सानै छँदा ने.सं. ५८८ मा देहान्त भएकाले उनको शरीर प्रमाणले विष्णुको हृषिकेश मूर्ति, सोही वर्ष भक्तपुर तुलाछेंमा स्थापित गरिएको थियो । यसप्रकार, यक्ष मल्लका छोराहरू सात जनासम्म भएको हामीलाई थाहा छ ।

-लेखक

*तत्पुत्राः श्रीमंत कुमारा सन्ति ।*
*ज्येष्ठः श्रीजय राय मल्ल नृपतिः श्रीरत्न मल्ल प्रभुः*
*श्रीमच्छ्री रण मल्ल देव गुणवान् श्रीराम मल्लो नृपः ।*
*ख्यातः श्रीअरि मल्ल देव सुकृती श्रीपूर्ण मल्लोवर-*
*स्तेषां वैरिगणाः प्रयान्तु निधनं शंभोप्रसादादिह ॥*

**[अभिलेखको विस्तृत विवरण परिशिष्ट खण्डमा हेर्नुहोस्]**
**अभिलेख संख्या-३**

[सूर्य वंशमा राजा यक्ष मल्ल अत्यन्त चतुर, वडा प्रतापी नेपाल मण्डलको अधिराज हुनुहुन्छ. शत्रु दमन गर्नमा उनको प्रसिद्धि हवस् ।

उनका छोरा राजकुमारहरू यति छन्- जेठा राय मल्ल, अनि रत्न मल्ल, त्यसपछि रण मल्ल, राम मल्ल र अरिमल्ल हुन् । कान्छो चाहिँ पूर्ण मल्ल । श्रीपशुपतिको अनुग्रहबाट तिनका शत्रुहरूको अन्त्य हवस् ।]

यक्ष मल्लको अन्तिम समयताका यसरी उनका ६ जना छोराहरू भए तापनि शुरुमा राय मल्ल, रत्न मल्ल र रण मल्ल गरी तीनवटा मात्र ज्येष्ठानुक्रमले दाजुभाइहरू संयुक्त शासनमा देखापर्छन् । तिनीहरूकासाथ यक्ष मल्लको छोरीकी छोरा भीम मल्ल पनि पछिबाट थपिएर चार जनाको संयुक्त शासन कायम भएको देखिन्छ ।

*योसौ श्रीजय राय मल्लनृपतिर्नेपाल चूडामणि-*
*स्तन्मध्योनुज कंसविक्रम बली श्रीरत्न मल्लो नृपः ।*
*कानिष्ठो रण मल्ल सुकृती श्रीवीरनारायण-*
*स्तत्तेषां वर भागिनेय विदित श्रीमीम मल्लो नृपः ॥*
*तेषां विजय राज्ये दत्तकृतं ॥*

**-भक्तपुर, यक्षेश्वर मन्दिरको[४] अभिलेखबाट (ने.सं. ६०७)**

[नेपालको प्रमुख राजा राय मल्ल भए । उनका माहिला भाइ, कंस तुल्य पराक्रमी राजा रत्न मल्ल भए । कान्छा रण मल्ल असल काम गर्ने वीर नारायण समान भए । तिनीहरूका सुयोग्य भानिज राजा भीम मल्ल भए । तिनीहरूको विजय राज्यमा यो गूठी राखियो ।]

यसरी तीन जना मामाहरूकासाथ भानिज भीम मल्लसमेत शासक-मण्डलमा सम्मिलित भएको यो पहिलो उदाहरण विचारणीय छ । यसले तात्कालिक राजगद्दीको हकदार क्रममा राजाको छोरा वा भाइहरू भएनन् भने छोरीका छोरा अर्थात् दौहित्रले पनि राज्यको हकदार हुन पाउने व्यवस्थाको संकेत पाइन्छ ।

४. अभिलेखको पूर्ण पाठ परिशिष्ट खण्डमा दिइएको छ । अभिलेख संख्या- ४

यहाँ चर्चित भीम मल्लको राम्रो परिचय खोजी गर्नुपर्ने विषय छ । यक्ष मल्लको कुन चाहिँ छोरीपट्टिका दौहित्र भीम मल्ल हुन् त्यो खुट्याटिन सकेको छैन । उस बखतको प्रचलन विचार गर्दा ललितपुरका कुनै सामन्त 'महापात्र' को छोरा यी भीम मल्ल हुनु धेरै सम्भव छ ।

भक्तपुरमा उपर्युक्त चौभय शासनको अस्तित्व लामो समयसम्म देखापर्छ । तर, यक्ष मल्लको मृत्यु हुने बित्तिकै शुरुका वर्षहरूमा उनका छोराहरू मध्ये जेठा, माहिला र साहिँला छोराहरू क्रमशः राय मल्ल, रत्न मल्ल र रण मल्लहरूको त्रिभय सरकार गठन भयो । कान्तिपुरस्थित कीर्तिपुण्य महाविहारका (लगन बहाल) एउटा शाक्य परिवारले ने.सं. ६०३ (सं. १५४०) मा संग्रह गरेको **धारणी पंचरक्षा** सहितको ग्रन्थ पुष्पिकामा तत्काल यो त्रिभय शासनको संकेत पाइन्छ :[५]

*"देय धर्मोयं प्रवर महायान यायिन परमोपासकः श्रीकाष्ठमण्डप महानगरे श्रीकीर्तिपुण्य महाविहारावस्थितः । शाक्य भिक्षु श्रीउल्हासरम्यचन्द्रस्य तस्य माता पद्मलक्ष्मी नामस्य ॥ भार्या हृदयलक्ष्मी पुत्र जीतरम्यचन्द्र पुत्री विजयलक्ष्मी सगण परिवारस्य यदत्र पुण्यन्तद्भवत्वाचार्योपाध्याय मातापितृ पूर्व्वङ्गमं कृत्वा सर्वसत्वराशेरनुत्तर फलावाप्तय इति ॥०॥*

*श्रीमत् श्रीश्रीजय राय मल्ल देवस्य श्रीश्रीजय रत्न मल्ल देवस्य श्रीश्रीजय रण मल्ल देव त्रिभय ठाकुरस्य विजय राज्ये ॥०॥*

*सम्वत् ६०३ वैशाख कृष्ण त्रयोदश्यान्तिथौ अश्विनी नक्षत्रे आयुष्मान् योगे आदित्य दिने ॥"*

**स्रोतः**

**राष्ट्रिय अभिलेखालय**

**ताडपत्र माइक्रोफिल्म रील संख्या ई.** २१२४।८

**'पूर्णिमा' पूर्णाङ्क** ७४ (सं. २०४५)

यक्ष मल्लको मृत्युपछि उनका छोराहरूको संयुक्त शासन जनाउने अहिलेसम्म प्राप्त पहिलो ऐतिहासिक साक्ष्य यही देखापर्छ । यसको लगत्तै अर्को वर्षदेखि कान्तिपुरमा रत्न मल्लको शासन देखिने ऐतिहासिक प्रमाण पाइन्छ ।

रत्न मल्लले कान्तिपुरमा आएर आफ्नो एकलौटि अधिकार गरेको खास विवरण प्रस्तुत गर्ने उनको समकालिक वा तात्कालिक लिखत, अभिलेख कुनै हालसम्म प्राप्त भएको छैन । भक्तपुर, ठिमीमा मध्यकालदेखि संग्रह भइराखेको एउटा 'थ्यासफू' मा रत्न मल्लले कान्तिपुर दखल गरेको मितिसम्म टिपिएको छ-

*"सं. ६०४ वैशाष शुक्ल ॥ एकादसिं ॥ ए देश तेल रत्न मल्लदेवसन"*

**स्रोतः**

**चन्द्रमान जोशीको 'थ्यासफू' बाट**

**इतिहास संशोधनको प्रमाण-प्रमेय, पृष्ठ १३६ (संशोधनमण्डल,** २०१९)

[ने.सं. ६०४ (सं. १५४१) वैशाख शुक्ल एकादशीका दिन रत्न मल्लले **कान्तिपुर** अँठ्याए]

---

५. परिशिष्ट खण्ड : अभिलेख संख्या- ५

पछिल्लो मल्लकालमा टिपिएको यस 'थ्यासफू' मा कसरी कुन स्रोतबाट रत्न मल्लले कान्तिपुर दखल गरेको घटना समावेश भएको हो ज्ञात हुँदैन तापनि यही समय रत्न मल्लसंग सम्बन्धित ऐतिहासिक लिखतपत्रसित मेल खान्छ । तसर्थ, यसै टिप्पनलाई हालसम्म प्रामाणिक मानिएको छ ।

कान्तिपुरमा रत्न मल्लको शासन जनाउने पहिलो अभिलेख भने ने.सं. ६०५ (सं. १५४२) असोज महिनामा देखापर्छ ।[६] यो अभिलेख खूद राजकीय नभए तापनि त्यतिखेरको प्रभावशाली योगी हेतनाथले गोसाइंकुण्डको मेलाबाट फर्केर आउने तीर्थ यात्री जोगीहरूलाई 'चक्रभोज' खुवाउन गूठी राखेको ताम्रपत्र हो । सो ताम्रपत्र 'काष्ठमण्डप' को एउटा काठेखम्बामा टाँसिराखेको छ । यसमा रत्न मल्ल र अरि मल्लको संयुक्त शासन देखिने हुँदा कान्तिपुर अँठ्याउन रत्न मल्ललाई उनका भाइ अरि मल्लले सघाउ पुऱ्याएको संकेत पाइन्छ ।

यसको करीव ६ महिना अगाडि ने.सं. ६०५ वैशाखमा रत्न मल्ल र अरि मल्ल दुवै भाइले संयुक्त रूपमा ललितपुर मत्स्येन्द्रनाथलाई चाँदीको गहना 'रत्नवैत फो' चढाएका थिए । त्यसको केही दिन अगाडि रत्न मल्लकै बहिनी (रत्नादेवी) र भाइ अरि मल्ल तथा बहिनी ज्वाइँ हर्ष मल्लहरूले पनि मत्स्येन्द्रनाथमा 'ग्रैवेयक' जन्तर चढाएको अभिलेख सहितका गहनाहरू पाइनाले यसलाई कान्तिपुरमा नयाँ राजनैतिक उमंगको प्रतीक मान्नु परेको छ ।[७]

रत्न मल्लले कान्तिपुरमा आएर आफ्नो राजधानी बनाउने कुरा यहाँ पुस्तौनी शासनको अधिकार समेत पाएर बसेका महापात्रहरूलाई अवश्य रुचिकर हुँदैन । उता भक्तपुरमा जेठा राय मल्लको पक्षले पनि यसमा कतै समर्थन जनाउने कुरा थिएन । यसमा त कान्तिपुरका महापात्रहरूले राय मल्लको समर्थनमा रत्न मल्लको विरोध गर्नु पनि स्वाभाविक छ । त्यसैले, रत्न मल्लको कान्तिपुर प्रवेश सहज नभएको छनक पाइन्छ । रत्न मल्लको मृत्यु भएको करीव सवा-शताब्दीपछि कान्तिपुरको इतिहास तैयार गर्ने काममा अघि सर्ने राजा प्रताप मल्लले आफ्ना पुर्खा रत्न मल्लको संघर्षलाई यसरी व्यक्त गरेका छन् :

*"तस्माच्छ्री रत्नमल्लो समजनि विवुधाराधने दत्त बुद्धि-*
*द्दन्तीनां दानकर्ता प्रवल रिपुकुलोत्सादने पार्थतुल्यः ।*
*यद्वाम्बु प्रवाह प्रकर विकसितां वाहिनीं वीक्ष्य नूनं,*
*गंगा संगात्प्रवृद्धं प्रचल जलनिधिष्प्रेम गर्व्वम्मुमोच ॥१३॥*

*यो नु प्रौढतरान्निहत्य धरणीपालान्महासंगरे*
*गत्वा कान्तिपुरं चकार विमलं राज्यन्तु स्वर्गोपमं ।*
*श्रीसिद्धिः हरपूर्विका हरवधू राराधनैस्तद्वशे,*
*जाताभाव हृतां मुदा सुविदिताचाद्यापि या तिष्ठति ॥१४॥*

---

६ परिशिष्ट खण्ड : अभिलेख संख्या- ६

७ परिशिष्ट खण्ड : अभिलेख संख्या- ७

*प्रोद्यत्प्रौढ प्रताप प्रचुर परिलसत्कुंकुम क्षोद पूर्ण्ण-*
*ष्कीर्ण्णष्पाटीर पंकैस्सितकर किरणाकार कीर्ति प्रतारः ।*
*मित्राणामत्य शैल्यं किमपिविरचयत्पूर्वपूर्वागतानां*
*तत्पुत्रस्सूर्य मल्लो नरपति तिलकः प्रादुरासीत्प्रवीरः ॥१५॥*

**- प्रताप मल्लको**
**पशुपति अभिलेखबाट (ने.सं. ७७७)**

[उहाँ (यक्ष मल्ल) बाट देवताहरूमा चित्त लगाउने, हात्तीहरू दान गर्ने शत्रु सखाप गर्नमा अर्जुन बराबरको रत्न मल्ल पैदा भए। उहाँको दान रुपी जल प्रवाहले बगेको नदी देखेर त्यसलाई उछिन्न समुद्रले पनि गंगालाई छाडिदिए। (१३)

उहाँले (रत्न मल्लले) कान्तिपुरमा गएर त्यहाँका बलिया शासकहरूलाई (महापात्रहरू) ठूलो युद्धमा सखाप गरेर स्वर्गमा जस्तो राज्य गरे। उहाँले हरसिद्धिको अराधना गर्दा वशमा आएर मित्रले जत्तिकै सहायता गर्दथे। (१४)

जसको (रत्न मल्लको) प्रचुर प्रतापले गर्दा चन्द्रमाको स्वच्छ किरणले कुंकुम फुले भैँ राजकीय कीर्ति टाढाटाढासम्म फैलिएको छ। पहिले शत्रुता गर्ने राजाहरू अब मित्रताको लागि आतुर भएका छन्।

उहाँको छोरा सूर्य मल्ल राजाहरूमा टीका समान वीर पैदा भए। (१५)]

यसरी प्रताप मल्लले आफ्नो पुर्खा रत्न मल्लको वर्णन गर्दा ठूलो युद्धमा विजय लाभ गरेर मात्र रत्न मल्लले कान्तिपुर दखल गर्न सकेको कुरा लेखेका छन्। यो संघर्ष अरू कसैसंग होइन यहींका सामन्त शासक महापात्रहरूसंग भएको हो। उनीहरूलाई रत्न मल्लको विरोध गर्न राय मल्लका पक्षधरहरूले पनि उक्साउनु स्वाभाविक छ।

उपर्युक्त, संघर्षको पुष्टि पार्थिवेन्द्र मल्लको लेखाइबाट पनि हुन्छ। कान्तिपुरमा पुस्तौनी शासनको अधिकार प्राप्त महापात्रहरूलाई 'वैश्य' हुन् भनेर, क्षत्रिय शासक वर्गभन्दा तल्लो श्रेणीमा राख्ने चेष्टा गर्दै रत्न मल्लले तिनीहरूलाई समाप्त गरेको कुरा पार्थिवेन्द्र मल्लले यसरी प्रचार गरेका छन्:

*"आसीच्छ्री रत्न मल्लो नृपतिरुपचित श्रीस्समागत्य भक्त-*
*ग्रामाद्यनेह लव्धा त्रिभुवन जननी पादपद्म प्रसादात् ।*
*वैश्यान्संहृत्य शस्त्रोपचय परिचयान्प्राप्त राज्यधिकारा-*
*न्कान्तीं कान्त्युग्र वर्णाश्रम समुपचिता सद्य एव व्यधायि ॥"*

**- पार्थिवेन्द्र मल्लको**
**पशुपति अभिलेखबाट (ने.सं. ७९९)**

[राजा रत्न मल्लले श्रीहरसिद्धिको अनुग्रह पाएर भक्तपुरबाट कान्तिपुरमा आई यहाँ पुस्तौनी शासनको अधिकार प्राप्त गरेर बसेका वैश्यहरूलाई (ठकुरी) युद्धमा परास्त गरी तुरुन्त वर्णाश्रम व्यवस्था लागू गरे।]

कान्तिपुर महानगरका वैश्य ठकुरीहरूले रत्न मल्लको विरोध गर्दा तिनीहरूलाई समाप्त गरी यहाँ आफ्नो स्थायी राजधानी बनाएको कुरामा हाम्रा मध्यकालिक कवि-इतिहासकारहरू एकमुख छन् । यस घटनाको विवरण अलि विस्तृत रूपमा कान्तिपुरको हेमवर्ण महाविहारको (गं-बहाल) परम्परागत संग्रहमा पाइन्छ । त्यसमा रत्न मल्लसित भएको संघर्षमा यहाँका आठजना 'ठकुरीहरू' मारिएको घटना वर्णन गरिएको छ :

*"षपन श्रीरत्न मल्ल राजान ञ देश त्यल ओओ, म्ह ८ ठाकुर जुजु स्याङाओ.... थोते राजा बुतकाव हितिचुकस रायकुर हङाव च्वं ॥"*

- कालक्रमः

'संस्कृत सन्देश' वर्ष १ संयुक्ताङ्क १०-१२ (सं. २०१०)

[भक्तपुरबाट आएर राजा रत्न मल्लले कान्तिपुर दखल गरे । आठजना ठकुरी राजाहरू मारिए... यति राजाहरूलाई (सामन्त शासकका रूपमा रहेका) हराएर हिटी चोकमा रत्न मल्लले आफ्नै राजदरवार बनाई बसे ।]

मध्यकालको मुख्य मुख्य घटना टिपिएको यस टिप्पनको व्यहोराबाट त्यतिखेर रत्न मल्लको कान्तिपुरका महापात्रहरूसित संघर्ष भएको कुरामा नै विश्वास गर्न सकिन्छ । यस संघर्षमा यहाँ आठजना 'ठकुजु'हरू मारिएका थिए । तिनीहरू मुख्य गन्तीमा परेका भएर नै यसरी विशेष उल्लेख गरिएको कुरा प्रतीत हुन्छ तापनि यस उद्धरणबाट कान्तिपुरमा तत्काल 'ठकुजु' हरूको संख्या कति थियो त्यो भने खुल्दैन ।

यस टिप्पनमा एउटा अर्को सूचना पनि हामीलाई उपलब्ध छ । त्यो हो रत्न मल्लले कान्तिपुरमा आएर हिटीचोकमा राजकुल अर्थात् शासन केन्द्र बनाई बसेको कुरा । हिटीचोक हनूमान् ढोका दरवारकै एउटा प्रमुख अंग भएर पछिसम्म कायम रहेको थियो जहाँ राज्यको तर्फबाट सदावर्त वितरण हुन्थ्यो । यो सदावर्त बाँड्ने चलन शायद रत्न मल्लले नै प्रारम्भ गरेका हुनाले उनका सन्तान दरसन्तानले पनि यसलाई कायम राख्दै आएको हुनसक्छ ।

अब, रत्न मल्ल कान्तिपुरमा आउँदा यहाँका बाह्रजना वैश्य ठकुरीहरूको अस्तित्व समाप्त गरेको उल्लेख भाषा वंशावलीकारले गरेका छन् । सर्वप्रथम डानियल राइटले (Daniel Wright) अंग्रेजीमा अनुवाद गरी प्रकाशित गरेको पं. गुणानन्द शाक्यको संग्रहमा रहेको वंशावलीमा पनि कान्तिपुरमा वैश्य ठकुरीहरूको संख्या १२ नै दिइएको छ । त्यस्तै, पद्म गिरीको संग्रह वंशावली हडसनको (B.H. Hödgson) कुम्लो लण्डनमा (India Office Library) रहेको छ । विक्रमजित हसरतले अंग्रेजीमा अनुवाद गरी भारतमा प्रकाशित गरेको त्यस वंशावलीमा पनि कान्तिपुरका वैश्य ठकुरीहरूको संख्या १२ नै पाइन्छ । तिनमा आठजनालाई प्रमुख मान्ने प्रचलन यहाँ रहेको थियो । यसरी बाह्रजना महापात्रहरूमध्ये आठजनाको प्रमुख नायकत्वमा 'काष्ठमण्डप' महानगरको व्यापार प्रबन्ध एवं प्रशासकीय कार्य संचालन हुने गर्थ्यो । त्यतिखेरकै प्रभावमा परेर यहाँका गूठीहरूमा आठजनाको थकाली-क्रम निर्धारण गर्ने प्रचलन आज पर्यन्त पाइन्छ ।

तर, भाषा वंशावलीमा रत्न मल्लले कान्तिपुरका वैश्य ठकुरीहरूलाई जसरी समाप्त गरेको बयान पाइन्छ त्यो भने बडो नाटकीय ढंगको छ । त्यसको वास्तविकता छानबिन नगरी यसै ठोकुवा भन्न सकिंदैन । अब, भाषा वंशावलीकारले यस सम्बन्धमा गरेको वर्णन फेरि एकपटक हेरौं :

*"रत्न मल्लले जेठा दाज्यु राय मल्लसित विरोधभाव परस्पर गर्न लाग्या किन भन्या तिनका कुलमा तुलजा जगाउन्या मन्त्र प्राण त्याग हुन्या समयविना अरू कालमा लिन हुन्या रीत थिएन र रत्न मल्लले आफ्ना बाबाका (यक्ष मल्ल) प्राण त्यागका बेलामा दाज्युकन (राय मल्ललाई) छलछाम गरी बाबुदेखि कुल दुर्गा तुलजा जगाउन्या मन्त्र पायाको थियो र ज्येष्ठ क्रमले हुन्या हो तैंले मलाई छलिस भनी रिस गर्दा दुवै भाइको परस्पर चित्तमा विरोधभाव हुन गयाको थियो ।*

*यस्तै बखतमा कान्छा रत्न मल्लकन तिनै मन्त्रका प्रभावले श्रीनीलतारा देवी (हरसिद्धि) प्रसन्न भै स्वप्नविषे देवीबाट हे राजन् ! तिमी कान्तिपुर जाई १२ ठकुरीहरूकन जिती राजा हुन पाउला भनी आज्ञा प्रसन्न हुंदा रत्न मल्लले देव वाणी हो भनी निश्चय ठहराई प्रातः कालैमा उठी नीलतारा देवीका स्थानमा जाई दर्शन गरी सरासर कान्तिपुरमा आई बाऱ्ह ठकुरीका एक मुख्य काजीका घर पुगी एकान्त पाई तिनलाई देवीले आज्ञा भयाको वचन भन्दा देवीका अनुग्रह प्रभावले ती काजी रत्न मल्लका बशमा आई काजीले हवस म जुक्ति गरूला भनी राजपुत्रकन (रत्न मल्ललाई) गुप्त राखी बाऱ्ह ठकुरीकन यस काजीले खान्या बस्तुमा विष राखी भोजन गराई चाडै ठकुरीहरूकन मारी रत्न मल्लकन राजा गराया ।*

*यी रत्न मल्ल आफू हुकूम बेस गरी चलाई रहदा एक दिन यस्तो संझ्या कि मेरा निमित्त यस काजीले आफ्ना स्वामी वैश्य ठकुरीहरूकन विष खुवाई माऱ्या । अनविश्वासी पापी काजी रहेछ, यसका मन नपऱ्या मलाई पनि राख्न्या छैन भनी ठानी वैश्यकाजीकन राजा रत्न मल्लले यमलोक पठाया ।"*

**-भाषा वंशावली (भाग-२) पृष्ठ ५१**
**नेपाल राष्ट्रिय पुस्तकालय .सं. २०२३)**

यसरी, कान्तिपुरका महापात्र वैश्य ठकुरीहरूले रत्न मल्लको विरोध गर्दा उत्पन्न भएको निर्णायक संघर्षमा आठजना प्रमुख महापात्रहरू मारिएको घटनालाई पछि नाटकीय कथानक जस्तो गरी शाहकालिक वंशावलीकारले जुन वर्णन यहाँ गरेका छन् त्यो केवल श्रुति परम्परा सिद्ध हुन्छ । वैश्य ठकुरीहरूका कुनै भारादार रत्न मल्लको मन्त्रणामा पसेको हुनु पनि एकदम सम्भव कुरा हो । उसबाट आफ्नो मतलव साध्य भइसकेपछि रत्न मल्लले नै ती काजीलाई मारेको कुरा पनि मात्र कपोलकल्पित नहोला । यस्तै किसिमको सत्ता विद्रोह र राजनैतिक धोकेवाजीको परम्परामा पृथ्वीनारायण शाहले पनि आफ्नो मतलव साध्य गरिसकेपछि आफ्ना मतियार मल्ल राज्यका पूर्व भारादारहरूलाई सजिलैसित पन्छ्याइदिने गरेको उदाहरण यथेष्ठ पाइन्छ । यही 'गोरखाली प्रवृत्ति' को अनुकूल भएर एउटा पुरानो अनुश्रुतिलाई यहाँनेर वंशावलीकारले जोडिदिएको कुरा पत्यारिलो हुन्छ ।

यति कुरा उहिलेको अनुश्रुतिबाट लिएर पनि, पाटनमा प्रसिद्ध पीठ 'हरसिद्धि' को वर प्राप्त गरेको भन्ने धार्मिकताजन्य राजनीतिको पुरानै महक पनि यसमा पाइन्छ । यसलाई त पछिल्ला वंशावलीकारहरूले मात्र होइनन्, मध्यकालिक कवि-इतिहासकारहरू प्रताप मल्ल, पार्थिवेन्द्र मल्ल जस्ताले पनि छाडेका छैनन् । त्यतिखेरको यो सामान्य राजनीतिसम्मत कुरामा भाषा वंशावलीकारलाई मात्र दोषको भागीदार सम्झनु उचित हुँदैन ।

तैपनि, रत्न मल्ल पछिका राजाहरू कान्तिपुर राज्यमा मात्र सीमित रहनजाँदा सोही आँखाले रत्न मल्ललाई पनि हेरेर एउटा अक्षम्य ऐतिहासिक भ्रम फैलाउनमा यी भाषा वंशावलीकारहरूले सानो भूल गरेका छैनन् ।

**कान्तिपुरमा रत्नमल्लको संयुक्त शासन तथा एकल शासन :**

रत्न मल्लले कान्तिपुरमा आएर राजधानी बनाई यहाँबाट शासन गर्दा शुरुदेखि उनको एकजना भाइ अरि मल्लले सघाएका थिए । त्यसैले, कान्तिपुरमा रत्न मल्लको समकालिक अभिलेख तथा ऐतिहासिक लिखत आदिमा उनको र अरि मल्लको संयुक्त शासन देखापर्छ । ने.सं. ६०५ देखि ६२३ सम्म (सं. १५४२-१५५९) रत्न मल्लकासाथ अरि मल्लको उभय शासन कान्तिपुरमा कायम रहेको देखिन्छ भने ने.सं. ६२४ (सं. १५६०) मा आएर रत्न मल्लकासाथ इन्द्र मल्लको उभय शासन भेटिन्छ । इन्द्र मल्ल अरि मल्लका छोरा हुन् । त्यतिखेर अरि मल्लको मृत्यु भइसकेको अनुमान हुन्छ ।

अरि मल्लको हालसम्म अन्तिम रूपमा देखिने प्रमाण उनले ने.सं. ६२३ पौष शुक्ल त्रयोदशीका दिन गरिदिएको एउटा लिखतपत्र भेटिएको छ ।[८] यसबाट उनी ने.सं. ६२३ (सं. १५५९) को पौष महिनासम्म जीवित रहेको देखिन्छ । त्यसको लगत्तै अर्को वर्ष ने.सं. ६२४ (सं.१५६०) मार्ग महिनामा इन्द्र मल्ल कान्तिपुरमा संयुक्त शासक भएर रत्न मल्लकासाथ देखापरेकाले त्यस बीचको वर्ष दिनभित्र अरि मल्लको मृत्यु भएको कुरा यकिन हुन्छ ।

इन्द्र मल्लको परिचय चाँगु नारायणको भण्डारमा रहेको एउटा पानस- अभिलेखबाट हामीलाई प्राप्त हुन्छ :

*श्रीश्रीगरूड नारायण परम भट्टारकस अग्रस कार्तिक लछिः मेतं छोयके यातं, श्रीश्रीजय अरि मल्ल देव प्रभु ठाकुरस विवाहिनी मयना देवी ठकुरिनीस्यं थ्व ट्वाकदिवा, गुठिचिनकं दुन्ता जुरो् थ्व दिपदान पुण्य फलन कामन । सिद्ध याङन श्रीश्रीजय इन्द्र मल्ल देव काय देवट्वं चिरायु याङन् सन्तति सन्तान महाराज्य लक्ष्मी् प्रताप आयु आरोग्य वृद्धिरस्तु ॥ श्रेयोस्तु ॥ सम्वत् ६१९ आश्विन शुक्ल पूर्णिमास्यान्तिथौ शुभमस्तु सर्वदा ॥*

**- मोहन प्रसाद खनालः**

**चाँगु नारायणको ऐतिहासिक सामग्री, संख्या-५०**

CNAS **त्रि.वि. (२०४०)**

---

८. परिशिष्टं खण्ड : अभिलेख संख्या ८

[श्रीश्रीगरूड नारायण परम भट्टारकको अगाडि कार्तिक महिनाभर बत्ती बाल्नको लागि श्रीश्री जय अरि मल्ल देव प्रभु ठाकुरको विवाहिता (रानी) श्रीश्री मयनादेवी ठकुरिनीले यो पानस गूठी बनाएर चढाइन्, यस दीप दानको पुण्य फलले मनोवान्छा सिद्ध गरेर छोरा श्रीश्रीजय इन्द्र मल्ल देवको चिरायु भई सन्तति-सन्तान राज्यलक्ष्मी र प्रताप आयु आरोग्य वृद्धि हवस् ॥ श्रेयोस्तु ने.सं. ६१९ (सं. १५५६) आश्विन शुक्ल पूर्णिमा शुभमस्तु सर्व्वदा ।]

अरि मल्लको मृत्यु भएपछि उनकै उत्तराधिकार लिएर माहिला बाबु रत्न मल्लसित कान्तिपुरमा इन्द्र मल्लको संयुक्त शासन कायम भयो । रत्न मल्ल र इन्द्र मल्लको संयुक्त शासन देखिने हालसम्मको पहिलो ऐतिहासिक लिखत एउटा बौद्ध ग्रन्थको पुष्पिकामा देखिएको छ :

*"आर्य वसुधारा नाम धारणी परिसमाप्ता....*
*राजाधिराज परमेश्वरौ परम भट्टारकौ श्रीश्रीजय रत्न मल्ल देव*
*श्रीश्रीजयेन्द्र मल्ल देवस्य विजय राज्ये ॥*
*दानपति जीवराज सिंह....*
*सम्वत् ६२४ मार्गशिर शुक्ल पञ्चम्यां तिथौ श्रवण नक्षत्रे*
*ध्रुवयोगे गुरु वासरे । लिखितेयं इहैव...*
*श्रीमत्मणिसँघ विहाराधिवासित सन्तल बज्राचार्य श्रीजिनचन्द्रेणेति ॥*

**स्रोतः**
**राष्ट्रिय अभिलेखालय, चौथो,** १६०७
**'पूर्णिमा' पूर्णाङ्क** ४७ (सं. २०३७)

उपर्युक्त धारणी पुस्तकको पुष्पिकामा उल्लिखित मणिसंघ विहार काठमाडौं यङ्गाल मञ्जेश्वरीस्थित मिखा बहाल हो । यसबाट कान्तिपुरमा ने.सं. ६२४ (सं. १५६०) मा इन्द्र मल्लले माहिला बाबु रत्न मल्ललाई शासनमा सघाइराखेको देखिन्छ । यसै वर्षको वैशाख महिनामा इन्द्र मल्लको सीतादेवीकासाथ विधिपूर्वक विवाह पनि सम्पन्न भयो ।[९] तर, यसको अर्को साल ने.सं. ६२५ (सं. १५६१) को माघ महिनासम्म मात्र यी इन्द्र मल्ल कान्तिपुरमा रत्न मल्लसित उभय शासनमा सरिक रहेको ऐतिहासिक लिखत पाइन्छ ।[१०]

राजधानी कान्तिपुरमा रत्न मल्लको एकलौटी शासन देखिने ऐतिहासिक लिखत ने.सं. ६२९ (सं. १५६५) मा पहिलोपल्ट देखापर्छ ।[११] त्यहाँदेखि उनी बाचुन्जेल यही राजनैनिक स्थिति कायम रह्यो । यसरी, कान्तिपुरमा संयुक्त शासनको अन्त्य भएको घटना रत्न मल्लको जीवनमा अत्यन्त महत्त्वपूर्ण सावित हुन्छ । साथै, यसले रत्न मल्लको शासनको आदर्शतर्फ पनि संकेत गर्छ । तर, उनको भतिजा इन्द्र मल्ल भने ने.सं. ६३१ मा (सं. १५६७)* भक्तपुरमा एक्कासि दोखापरेर त्यहीं उनको अवसान पनि भयो । त्यसैले, भक्तपुरको प्रकरणमा यसको विश्लेषण गर्नु उपयुक्त हुनेछ ।

❖❖

९.. परिशिष्ट खण्ड : अभिलेख संख्या- ९
१०. परिशिष्ट खण्ड : अभिलेख संख्या- १०
११. परिशिष्ट खण्ड : अभिलेख संख्या- ११

# परिशिष्ट खण्ड

अभिलेख- १

## यक्ष मल्लको पालामा क्वाथ बहालले जगा बिक्री गरेको कान्तिपुरको लिखतपत्र ने.सं. ५७९

(१) ᥫ श्रेयोऽस्तु ॥ सम्वत् ५७९ जेष्ट शुक्ल । दसम्यायाः श्रीयम्बुमहानगरे । श्रीसातिगलके । श्रीक्वाथ बहाराद्धिवासनः साक्य बज्राचार्ज्य भिक्षु श्रीजिपाल थरपाजुत्वं प्रमुखनं ् सर्व्व संङसमुचयसः नामनेन स्वक्रियं स्वभुज्यमानिकं । तत्रैव स एव नगरे ् वंथलाछ तोलकै ् तंङिनि छे गृह वास्तव्य ् तोयु नाम्नेन सका(सात् ।)

(२) थंथ बाहार उफलगाद क्षेत्र नाम प्रदेशे । विक्रमशिल महाविहार भूमेः पश्छिमत । उफल गादः भूमेः उत्तरत । मार्गस्य भूमेः पूर्व्वत । दक्ष (न) त । एतेषां मधेः मेक रोप्निक ् क्षेत्र ् जत क्षेत्राङ्क तोपि वू रोव १ तत् क्षेत्रस्य जथा देस काल प्रवत्मानेन ् सञ्चारार्घेनः सुवर्ण्ण मूलमादाय क्रिय विक्रस्वादिनात्तेनवर्त्त (कन्या-)

(३) येन क्रियन विक्रियत भवति । तदाधारणकस्य निमितेनः जदि शङ्कत व्यावादपीडा स्यात् तदा धारणकेन प्रसोधनियञ्च । अत्र पत्रार्थे साखि स एव ् वहार साक्य भिक्षु श्रीजयदित पालजुस दृष्टमेक प्रमानश्चेति ॥ प्रते श्रीश्री राय मल कुम्हर थाकुर सिंध्रयात विज्यायस काया जुरो ॥ शुभ ॥

***

*(पछाडिपट्टि)*

ᥫ थंथ बाहार उफलगाद बूया तस्य क्रियपत्रं ॥

**स्रोतः**

**राष्ट्रिय अभिलेखालय,**

**माइक्रो फिल्म रील संख्याः, ई. २१२७/५५**

**महेशराज पन्तः**

**वि.सं. १५१६ को काठमाडौंको एउटा लिखत पत्र**

**'पूर्णिमा' पूर्णाङ्क ७४ (सं. २०४५)**

अभिलेख- २

# यक्ष मल्लको मृत्युसम्बन्धी अभिलेख
## नेे.सं. ६०२

ॐ नमो नारायणाय ॥

शिवत्वं गत, जय यक्षमल्ल देवस्य, प्रतिमा, लक्ष्मीनारायण मूर्ति, रूप्य निर्मिता, सहगामिनी सती, सरस्वती देवी, संग्रहणी जीवलक्ष्मी, जयतनाख्या तिसृभिः सहिता, सपिण्डीकरण दिने, शय्या समारोपिता श्रीश्रीश्रीगरूड नारायणालये निवेदिता, वैकुण्ठवास प्राप्तिरस्तु ॥ सम्वत् ६०२ चैत शुक्ल दशमी शुक्र वासरे ॥ शुभमस्तु सर्व्वदा ॥

***

**स्रोत:**

**चाँगुनारायणको भण्डारमा रहेको यक्ष मल्लको प्रतीक चाँदीको लक्ष्मीनारायण मूर्तिको पादपीठ अभिलेख ॥**

**-मोहन प्र. खनाल:**

**चाँगु नारायणको ऐतिहासिक सामग्री संख्या- ४२**

CNAS त्रि.वि. (२०४०)

**टिप्पणी**

*प्रस्तुत अभिलेख यक्ष मल्ल परलोक भएको ४५ दिनपछि सपिण्डीकरण विधिको उपलक्ष्यमा स्थापित हुँदा यस आधारमा ने.सं. ६०२ माघ कृष्ण दशमीमा यक्ष मल्ल मृत्यु भएको दिन मान्नु पर्ने छ ।*

*--लेखक*

अभिलेख-३

# पशुपति दक्षिणद्वारस्थित नारायण भट्टको अभिलेख
## नेे.सं. ५९१

**ॐ नमः भैरवाय ॥**

शूलश्रीवरदासिपाश डमरूं हस्तेवरे दक्षिणे,<br>
खट्वांकाभय पाशविंदु विधिकं वामेकरे धारितः ।<br>
प्रेतस्थो गिरिजा गणेश वटुकैः सार्द्धंच नेत्रत्रयं,<br>
श्रीनारायण भट्ट विप्र विदितं श्रीभैरवोरक्षतु ॥

(१)

भूतानाम्पशु पाश मोचनकरं यत्रार्द्धनारीश्वरं,
वाग्मत्याः सविधे सुरासुर नुतं सर्व्वार्थ काम प्रदं ।
शक्त्या वच्छलया सहैव वहुभिर्देवैश्च वन्देसदा
श्रीमद् वासुकिना समम्पशुपति श्रीपंचवक्त्रं शिवं ॥

(२)

स्वस्ति ॥
श्रीसूर्य वंश नृपतिर्जय यक्षमल्लः
प्रौढ प्रताप भुवनैक महाप्रवीणः ।
नेपाल मण्डल विभूषित राजराजो
भूयाद्विपक्ष मथनो भुविसुप्रसिद्धः ॥

(३)

तत्पुत्राः श्रीमंतः कुमाराः सन्ति ।
ज्येष्ठः श्रीजय रायमल्ल नृपतिः श्रीरत्न मल्लः प्रभुः
श्रीमच्छ्री रण मल्लदेव गुणवान् श्रीराम मल्लो नृपः ।
ख्यातः श्रीअरिमल्ल देव सुकृती श्रीपूर्ण मल्लोवर-
स्तेषां वैरिगणाः प्रयान्तु निधनं शंभोः प्रसादादिह ॥

(४)

तद् विजय राज्ये ।
उद्भूतोद्विज वंश निर्मल तरे वाधूल सत्संसतौ,
देशेचोऽवरे हि तैत्तिरि समाख्याता प्रसाखाभिधे ।
पंचप्रावरके षडंग पठितो नारायणो भट्टको,
लोकानां शुभदायिनः पशुपतेः पादांवुजेभक्तिमान् ॥

(५)

नागे वसौ मदन वाण गते च वर्षे,
चैत्रेतमे हरतिथौ श्रवणे च ऋक्षे
योगे शुभे भृगु दिने क्रियते तदा चे-
न्नारायण द्विजवरेण च भैरवोयं ॥

(६)

नेपाल हायन गते विधुरन्ध्र वाणे,
माघेसिते तिथिवरे नवमी प्रशस्ते ।
ऋक्षे विधेः शशिसुतेहनि ऐन्द्र योगे,
तस्मिन् सुवर्ण कलशत्रयरोहणं स्यात् ॥

(७)

श्रीनारायण भट्टस्य जयलक्ष्म्याश्च स्वामिनः ॥
भुक्ति मुक्ति फलं भूयात्तेन पुण्येन शाश्वतं ।

(८)

अतः परं देश भाषा ॥
[अभिलेखको संस्कृत खण्डः १-१९ पंक्ति]

***

**-ज्ञानमणि नेपालः**
**पशुपतिनाथको दर्शन-स्पर्शन- पूजन सम्बन्धमा समीक्षा**
***(परिशिष्ट-२)* बाट**
**प्रकाशकः महेशराज पन्त (सं. २०४३)**

अभिलेख- ४

# भक्तपुर यक्षेश्वर महादेवको राय + रत्न + रण + भीम मल्लहरूको अभिलेख ने.सं. ६०७

ॐ नमः शिवाय ॥
सानन्दं चन्द्रमौलिं प्रमथ गण वरैः सेवितं पार्वतीशं ।
पञ्चास्यं व्योमकेशं त्रिनयन विधृतं शेष नागेन्द्र हारं ॥
गीर्व्वाणेशैर्द्धनेशैः कमलजवरुणैर्व्वन्दितं धर्म्म संस्थं ।
सश्रीशं शंकरन्तं सकल भयहरं नौमियक्षेश्वरेशं ॥

(१)

श्रीमत्श्रीजय यक्ष मल्ल नृपतेर्भार्यापरा धर्म्मिनी,
यद्दैवात् विधवा भवत्तदैव विभुना तत्कीर्तिलक्ष्मीर्व्वरा ।
सार्धञ्चैव न पार्यते च गमनं तत्कारनात्कारिता,
भूयात् स्वामिनमेव मे प्रिय सदा यज्जन्म जन्मान्तरं ॥

(२)

श्रीमद्यक्षेश्वरस्यालय विमलतरेऽलंकृताकारि ताम्रै,
वक्त्रं सिंहावलिंचेत् पुनरपि चवविंशत् स्वर्णवक्त्रं मनोज्ञं ।
चक्रे यत्कीर्तिलक्ष्म्या शिवपुरी गमनाकांक्षया शाश्वतं हि,
सम्वत् नेपाल वर्षेऽचल गगन रसे शुक्ल चाषाढा सूर्ये ॥

(३)

योसौश्रीजय राय मल्ल नृपतिर्नेपाल चूडामणि-
स्तन्मध्योनुज कंस विक्रमबली श्रीरत्न मल्लो नृपः ॥
कानिष्ठो रण मल्लदेव सुकृती श्रीवीर नारायण-
स्तत्तेषां वर भागिनेय विदित श्रीभीम मल्लोनृपः ॥

(४)

तेषां विजय राज्ये दत्त कृतं ॥

पुनरपि श्रीश्रीश्रीयक्षेश्वर भट्टारक प्रतिदिन स्नानार्थम् ताम्ब्र घटिट घटमेकं पोष्पारोहनार्थं ताम्ब्र घटिट भाजनमेकं प्रतिदिन तंडुल पोष्पावरोहनार्थम् प्रतिमासे संक्रान्त्यां पञ्चामृत स्नानकरणार्थ दधिपाटमेक १ चिपिटिका कुडवमेक १ देवस्याग्रे उपढोकनार्थ दुम्ह क्षेत्र द्वादश रोपनीक १२ गोष्ठीकृतेन सम्प्रदत्तम् तत्क्षेत्रस्य प्रति वार्षिक धान्य वृहिना एतत्कर्तव्यं ॥ अनेनापि च पुण्येन भूयाच्च शुभ मंगलं । कीर्तिलक्ष्म्याश्च चान्तेषु प्राप्नुयात् शिव मन्दिरं ॥

ये भूमिपालाः परिपालयंति
षद्दर्षनानां स्थितिमादिभूता ।
तेव्याधिमुक्ता जयमाप्नुवन्तु
प्रयान्तुचान्ते विवुधेन्द्रलोकं ॥

श्रेयोस्तु संवत् ६०७ आषाढ शुक्ल सप्तम्यां तिथौ, शुभमस्तु सर्व्वदा ।

***

**-भोलानाथ पौडेलः**
**यक्षेश्वर मन्दिर**
**'पूर्णिमा' पूर्णाङ्क ५ (सं. २०२२)**
**(संशोधन-मण्डल)**

अभिलेख- ५

# राय + रत्न + रण मल्लहरूका पालाको पञ्चरक्षा-नामसंगीति-ग्रहमातृका ग्रन्थको पुष्पिका ने.सं. ६०३

ये धर्म्मा हेतु प्रभवा हेतुस्तेषान्तथागतो ह्यवदत्तेषाञ्च यो निरोध एवम्वादी महाश्रमण: ॥-॥

देय धर्म्मोयं प्रवर महायान यायिन: परमोपासक: श्रीकाष्ठमण्डप नगरे श्रीकीर्तिपुण्य महाविहारावस्थित: । शाक्यभिक्षु श्रीउल्हासचन्द्ररम्यस्य तस्य माता पद्मलक्ष्मी नामस्य ॥ भार्या हृदयलक्ष्मी पुत्र जीतरम्यचन्द्र पुत्री विजयलक्ष्मी सगण परिवारस्य यदत्र पुण्यन्तद्भवत्वाचार्योपाध्याय मातापितृ पूर्वङ्गमं कृत्वा सकल सत्वराशेरनुत्तर फलावाप्तय इति ॥०॥

श्रीमर्त् श्रीश्रीजय राय मल्ल देवस्य श्रीश्रीजय रत्नमल्ल देवस्य श्रीश्रीजयरण मल्लदेव त्रिभय ठाकुरस्य विजय राज्ये ॥०॥
सम्वत् ६०३ वैशाख कृष्ण त्रयोदश्यान्तिथौ अश्विनी नक्षत्रे आयुष्मान् योगे आदित्य दिने ॥ भगवति आर्य पञ्चरक्षा पुस्तक ॥ श्रीनामसङ्गीति ॥ पुस्तक ॥ श्री ग्रहमात्रिका पुस्तक लिखि(त) सम्पूर्णमिति ॥

लेखकोयं श्रीसालंषु विहारीय बज्राचार्य । श्रीहृदयसेनेनेति ॥

यथा दृष्टन्तथा लिखितं लेखको नास्ति दोषक ।
यदि शुद्धमशुद्धम्वा शोधनीय महद् वुधै ॥

***

स्रोत:
राष्ट्रिय अभिलेखालय,
माइक्रोफिल्म रील संख्या ई. २१२४।८ (ताडपत्र)
महेशराज पन्त:
राय-रत्न र रण मल्लका पालाको सबभन्दा पहिलो लिखत
'पूर्णिमा' पूर्णाङ्क ७४ (२०४५)
(संशोधनमण्डल)

अभिलेख- ६

# रत्न मल्ल + अरिमल्लका पालाको काष्ठमण्डपमा रहेको स्वर्णपत्र

## नें.सं. ६०५

१ शुभ स्वस्ति श्रीश्रीजय रत्न मल्ल देवस्य श्रीश्रीजय अरिमल्ल देवस्य विजय राज्ये ॥ अद्य वाराह कल्पे वैवश्वत मन्वन्तरे कलि युगे जम्बू द्वीपे भरत खण्डे हिमवत्पादे वासुकि क्षेत्रे श्रीनेपाल देशे पशुपति सन्निधाने वाङ्मत्याः पश्चिम कूले विष्णुमत्याः पूर्व कूले इहैव स्थाने श्रीकाष्ठमण्डप नगरे श्रीश्रेयोस्तु संवत् ६०५ आश्विन शुक्ले चतुर्थ्यायां तिथौ अङ्गार वासरे थ्व दिवस कोन्हु श्रीहेतनाथ जोगी भलादसन स्वहस्तेन स्वविद्यमानेन स्ववाचा प्रतिपन्नी भूतेन वृक्षवर सम्प्रदत्त भवति ‸ भाषा शिवलिति लीलावरङाव जोगी भलादत्वं सकल सिद्ध नङाव चक्र विययातं घितन दूं बु रोव १५ तलपति समेत थ्व बुया बरसानन दुथ्यं वर्ष प्रति स ये(व) चक्र विस्यं निस्त्रपं निर्वाहरपं यङ्जो माल्व थ्वते मानत्रयम् थ्व दानस लोपालोपी याङ षट्दर्शनया कृतघन याकाले गोहत्या ब्रह्महत्या स्त्रीहत्या बालहत्या माताहरण थ्वते अघोर पंच माहापातक लाक ‸ थ्वते भाषाया साछि दृष्ट श्रीश्रीश्रीदिनकर भट्टारिकास तद्दानेन पूर्ववत् शास्त्रोक्त फल सम्यगस्तु शुभम् ।

**योगी नरहरिनाथः[१२]**
**'संस्कृत सन्देश'**
**वर्ष १ अंक ६ (सं. २०१०)**

---

१२ यहाँ योगीजीले संवत्को अंक अशुद्ध पढी सं.४०५ भनेर पाठ दिइएको छ । नेपाल लिपिको अङ्क ६ लाई ४ पढ्दा यस्तो अशुद्धि देखापरेको छ ।
- लेखक

अभिलेख संख्या- ७

# पाटन मत्स्येन्द्रनाथका चाँदीको गरगहनामा अंकित रत्नमल्ल + अरिमल्लको अभिलेख नें.सं. ६०५

*(पहिलो)*

१, शुभ :: श्रीश्रीश्रीबुङ्गम लोकेश्वरसके श्रीश्रीजय रत्न मल्ल देव श्रीश्रीजय अरि मल्ल देवस(न) रत्नवैत फोल दुन्ता ॥

सम्वत् ६०५ वैशाख शुक्ल त्रयोदश्यां

*(दोस्रो)*

१, स्वस्ति ॥ श्रीश्रीश्री वुंगम लोकेश्वर भट्टारकाय श्रीश्रीजय रत्नमल्ल देवस्य भगिनी श्रीश्रीरत्नादेवी कनिष्ठानुज श्रीश्रीजय अरिमल्ल देवस्न दुन्ता (विषय पति) श्रीश्रीजय हर्ष मल्ल देवेन निवेदितं ग्रैवेयकमिदं तेन पुण्य फलेन तथा आयुरारोग्य सन्तति महाराज्यलक्ष्मी वृद्धिरस्तु ॥ सम्वत् ६०५ चैत कृष्ण प्रतिपदि तिथौ स्वाति नक्षेत्रे शुक्रवासरे शुभमस्तु सर्वदा ॥

***

**-कुलचन्द्र कोइराला:**
**"मत्स्येन्द्रनाथ"**
**परिशिष्ट खण्ड-पृष्ठ ७४**
**गुठी संस्थान** (सं. २०५२)

अभिलेख-८

# कान्तिपुरमा अरिमल्लले गरिदिएको एउटा लिखतपत्र नें.सं. ६२३

(१) शुभ ॥ स्वस्ति श्रीश्रीजय अरि मल्लदेव प्रमु ठाकुरसन यंगल ल्हुतिगल लुंजुगल मनाछे कमराज पुन भ्रात्यसह प्रसादारपा निपंद्वल क्षेत्र नाम प्रदेशे ॥ जलमार्गस्य पश्चिमत ॥ राजया भूमे उर्त्तरत ॥ पूर्व्वत ॥ कमराज पुनया भूमे दक्षिनत ॥ एतेषां मधे तृय रोपनिकस्य अर्द्धभागं क्षेत्राङ्गतोपि वु रोव ३ ध्वतेस अर्द्धभाग व-

(२) छि तत्क्षेत्रस्या सा जथा देस काल प्रवर्त्तमानेन सञ्चारार्घेन सुवर्ण मूलमादाय क्रिविक्रीन प्रसादारपं काया जुरो ॥ अत्र पत्रार्थे साक्षि दृष्ट ख्वप्व भ्रुडनंथ लखिमराज भारोस सम्वत् ६२३ पौष शुद्धि १३ ॥

***

*यस लिखतमा माटाको छाप विवरण:*
*दाया-बाया 'श्री' को बीचमा खड्ग तलतिर सिंहको मूर्ति ।*

**स्रोत:**
**राष्ट्रिय अभिलेखालय,**
**वट्टा ९ संख्या १३५**
**-भूमि सम्बन्धी तमसूक ताडपत्र भाग-१**
**पृष्ठ ३०-३१** (सं. २०४०)

अभिलेख-९

# इन्द्र मल्लको विवाह
# नें.सं. ६२४

अथ श्रीमन्नैपालिक स्वस्ति श्रेयोस्तु सम्वत् ६२४ वैशाख मासे कृष्ण पक्षे पञ्चम्यां तिथौ घटि ३७ श्री दिने। तैतिल करण। विधि मुहूर्ते ॥ शुक्र होरायाम् ॥ उत्तराषाढ नक्षत्रे घटि ५१॥ शुभ घटि २ शुक्र योगे। शनैश्चर वासरे विवाहा बेला श्रीसूर्योदयात्परतो घटि १८ विघटि ६॥ सिंह लग्ने। कर्कट होरायाम् ॥ मेषद्रे करणे। तुलानवांशके वृष राशिगत सवितरि मकर राशिगते चन्द्रमसि अस्यां बेलायाम्

श्रीश्रीश्रीपशुपति चरण कमलधूलिधूसरित शिरोरूह श्रीमन्मानेश्वरी वरलब्ध प्रशादिक रघुवंशावतार देदीप्यमान राजाधिराज परमेश्वर परम भट्टारक श्रीश्रीजय इन्द्र मल्ल देवस्य विवाही श्रीश्रीशीता देव्या मधुपर्क्क समञ्जय करग्रहण मुखावलोकन सवेलायां विवाहे पुत्र पौत्रादि महाराज्यलक्ष्मी वृद्धिरस्तु ॥-॥

***

**स्रोत:**

**नेपाल राष्ट्रिय पुस्तकालय**

**['जगन्मोहन' ग्रन्थमा रहेको अतिरिक्त पत्र)]**

**'पूर्णिमा' पूर्णाङ्क ४७ (सं. २०३७)**

**(संशोधनमण्डल)**

अभिलेख-१०

# रत्नमल्ल + इन्द्रमल्लका पालाको ग्रन्थपुष्पिका
# नें.सं. ६२५

वसुधारा धारणी र मणिभद्र जम्भल हृदय ग्रन्थको पुष्पिका:

आर्य वसुधारा नाम धारणी समाप्त।....

आर्य मणिभद्र जम्भल हृदय समाप्तमिति....

राजाधिराज परमेश्वर परम भट्टारकौ श्रीश्रीजय रत्नमल्ल देवस्य श्रीश्रीजय इन्द्र मल्ल देवस्य तदुभयस्य विजय राज्ये। देय धर्मोयं प्रवर महायान यायिन: श्रीकाष्ठमण्डप महानगरे यन्ठलाच्छे टोलके भ्वन्त विहाराधिवासिन: परमोपासक शाक्यभिक्षु श्रीअमृतपाल तस्य भार्या हेरमयी पुत्र अमृतराज भारो कनिष्ठ धर्मसिंह भारो सह यदत्र पुण्यं तद्भवत्वाचार्योपाध्याय मातापितृ पूर्वङ्गमं कृत्वा सकल सत्वराशीनामनुत्तर फल प्राप्तयेति। सम्वत् ६२५ माघ मासे कृष्णपक्षे चतुर्थ्यां तिथौ उत्तर फाल्गुन पर हस्त नक्षत्रे सुक्रम (सुकर्म) पर धृतियोगे वृहस्पति वासरे प्रतिष्ठा संपूर्ण मिति।

***

**स्रोत:**

**राष्ट्रिय अभिलेखालय**

**लगतचौथो: संख्या ९४६**

**'पूर्णिमा' पूर्णाङ्क ४७ (सं. २०३७)**

**(संशोधन-मण्डल)**

अभिलेख- ११

# रत्न मल्लका पालाको
# काठमाडौं यंगाल मिमननी बहालको ताम्रपत्र
## ने.सं. ६२९

स्वस्ति ॥ श्रीनेपाल विषये श्रीश्रीश्रीस्वयम्भू चैत्य सन्निधाने राजाधिराज परमेश्वर परम भट्टारक श्रीश्रीजय रत्न मल्ल देवस्य विजय राज्ये ‸ दानपति श्रीकाष्ठमण्डप महानगरे चैत्रमाम्कुट्यांनिम्ह विहारे भगवान् श्रीश्रीशाक्यमुनि देवावतार बुद्ध भट्टारकाय प्रतिवर्ष वर्षवन्धन होम ‸ पूजा श्रावण कृष्ण त्रयोदश्यां आर्य संघेभ्यो भक्त प्रदानं श्रीहेरुकाय संवरोदय दशम्यां दशहरा दशम्यां पूजनार्थ दानपति शाक्यभिक्षु श्रीउजोतराज पाल भ्रातृ श्रीशुओपाल भ्रातृ श्रीपुंशुओपाल भ्रातृ श्रीकमलाज पाल ‸ भगिनी हृदयमयी एते सहानुमतेन पितरो उद्धरणार्थं क्षेत्रदान नियम्य ॥ भाषा वसिकचलं बु रोव ११ दशोमाल बु रोव ८ चरमति बु रोव ५ तेदुख्वात बु रोव २ थ्वते बुया वरसासन वर्षप्रते काचयाहस बस्वाधन जुया दिन चनजा आसम सम्बरोदय दिशि दशहरादिशि थ्वते निर्व्वाहरपं अविच्छिन्न याङ्न ङायकं यनेमाल (जु) रो ‸ भूय क्वाचया पाहुंछ थनंको खा छि १ थ्व छे या चपाङ्ग दंगस वु जुरो धर्मशाला याङ तेमाल्व जुरो । थ्वते पुण्य प्रभावन दिवंगत शाक्यभिक्षु उल्हासपाल भ्रातृ शाक्य भिक्षु अभयसिंह पाल थ्वस उभयत्वं सुखावति लोक धातुलाक्व जुर दानपति लोकत्वं जनधन आयुरारोग्य सम्पति भवन्तु ॥ एतत्पुण्य कुशलं भवन्तु ॥

केनचित्लोपयितुं महारौरव नरके प्रतिपातयितुं पञ्चानन्तर्यकारी स्यात् । थ्वते वु नो छेंनो ध्वंश यानतु प्यंकाव हाना लोप्रयं साङ यो थ्वते श्राप लाक्व ॥ एतदस्यापि दृष्ट साक्षि श्रीरत्न त्रय बुद्ध शासन संरक्षक श्रीबज्र महाकाल भट्टारकत्वं जुरो ‸ बुद्ध शासन मोचकत्वं जर्म्म जर्म्म पंच महापातिक लाक्व ॥ श्रेयोस्तु ॥ सम्वत् ६२९ मार्गशिर शुक्ल पञ्चदश्यां वृहस्पति वासर चन्द्रग्रासस दुन्ता शुभ ॥-॥

***

**सन्दर्भ:**
D.R. Regmi
Medieval Nepal part III
page 95-96
Firma K.l. Mukhopadhyay
Calcutta (1966)

## परिच्छेद ३

# रत्नमल्ल र 'काष्ठमण्डप' मा महापात्रहरूको सामन्त शासन

भारतबाट तिब्बततिर हुने व्यापार मार्ग भएर मध्यकालको शुरुताका नेपाल उपत्यकामा 'काष्ठमण्डप' नगरको स्थापना र विकास भएको कुरा निर्विवाद छ। यसको लागि पूर्वाधारको रूपमा 'काष्ठमण्डप' काठैकाठले बनेको एउटा विशाल र भव्य मण्डपको निर्माण भएपछि नै यसले 'नगर' को रूपमा विकसित हुँदै आएको कुरामा विश्‍वास गर्न सकिन्छ। यसले पछिबाट महानगरकै स्वरूप ग्रहण गर्‍यो।

'काष्ठमण्डप' अथवा काठमाडौं अहिले पनि नेपालको वास्तुकलाको भव्य नमूना बनेर हाम्रो अघिल्तिर छँदैछ। यो काष्ठमण्डप कहिले कसरी निर्माण भयो त्यसको अनुसन्धान अझसम्म भएको छैन। ने.सं. २६३ अर्थात् सं. १२०० मा काष्ठमण्डप नगरको उल्लेख भएको ग्रन्थ 'नाम संगीति' तिब्बतको स-क्य मठमा रहेको छ। सो ग्रन्थको पुष्पिका:

*"श्री काष्ठमण्डपे केलाछ्छे मल्लन सिंहस्य ....॥*

*महाराजाधिराज परमेश्वर परम भट्टारक श्रीनरेन्द्रदेवस्य विजय राज्ये॥ सम्वत् २६३ आश्विनी शुक्ल पूर्ण मास्यां शुक्र दिने श्रीस्यंब्रह्ममाया मतिग्वल पूर्वत: विद्यम स्थानाधिवासी वनिक पुत्र वसुध्रजीवेन लिखितम्॥"*

**–इतिहास संशोधनको प्रमाण प्रमेय**
**पृष्ठ ११० (सं. २०१९)**
**'संशोधन मण्डल'**

नेपालको बौद्ध संस्कृतिमा 'मञ्जुश्री' को गाथा रहेको उल्लिखित पुस्तक 'नामसंगीति' राजा नरेन्द्र देवको राज्यमा सं. १२०० असोज पूर्णिमाको दिन काष्ठमण्डप केलाछे बस्ने मल्लन सिंहको लागि स्यंब्रह्ममाको मतिग्वलदेखि पूर्व विद्यमस्थान बस्ने व्यापारीको छोरा वसुधर जीवले सारिदिएको व्यहोरा परेको छ। त्यतिखेर नै 'काष्ठमण्डप' नगरको प्रसिद्धि भइसकेको कुरा यसले पुष्टि गर्दछ। तर, अहिलेसम्म यसलाई नै 'काष्ठमण्डप' नगरको पहिलो प्रमाणको रूपमा हामीले मान्नुपरेको छ।

त्यसो त यस नगरको स्थापना राजा गुणकामदेवले (ने.सं. १०७-११० अर्थात् सं. १०४४-१०४७) गरेको भन्ने परम्परा बलियोसित पाइन्छ। यस नगरमा रहेको 'शासन केन्द्र' यद्वा राजकुललाई यसका संस्थापक गुणकामदेवको नाम काढेर 'गुन-पो' भन्ने गरिएबाट पछि कालान्तरमा यो कान्तिपुर राज्यको राजधानी भएर पनि यहाँको शासकीय दरवारलाई प्रताप मल्लले 'हनूमान्' को स्थापना नगरेसम्म यही 'गुन-पो' नाम नै प्रचलित रहेको थियो। 'पो'

शब्दले दरवारलाई बुझाउँदथ्यो र तिब्बती भाषामा यो शब्द अहिलेसम्म कायम छँदैछ ।

यसरी 'काष्ठमण्डप' को स्थापना भएदेखि यसले महानगरको रूप लिँदासम्म यहाँको प्रशासन व्यापार नायक महापात्रहरूद्वारा संचालित हुन्थ्यो । यी महापात्रहरू राजधानी केन्द्रका शासकहरूको आज्ञा मानेर यहीँको स्थानीय प्रशासन पनि संचालन गर्दथे । त्यतिखेर, नेपालको शासकहरू बस्ने केन्द्र अथवा राजधानी भक्तपुरमा त्रि-पुर दरवार थियो । प्रारम्भमा यी व्यापार नायकहरूको पदीय हैसियत 'पात्र' थियो । पछि व्यापारको विकास भएर 'महापात्र' कहलिन लागे । साथै, यस्ता व्यापार नायकहरूको संख्या बढ्दै गएर अन्तमा बान्ह जना पुगे । त्यसैले, बान्ह वैश्य ठकुरीहरूद्वारा पालित 'काष्ठमण्डप' महानगरको ख्याति तिब्बत र भारतमा समेत फैलियो । यी व्यापार नायकहरूमा केही त परम्पराले यहीँका प्राचीन राजवंशसित सम्बद्ध हुनाले पुरानै पद 'ठाकुर' जनमानसमा कायम रहे । यस प्रकार तिनीहरूको शासकीय स्वरूप ठकुरी भए तापनि व्यावसायिक रूपमा तिनीहरूले यहाँ व्यापार नायक भएर काम गर्ने हुँदा 'वैश्य ठकुरी' भन्ने संज्ञा वंशावलीकारले दिएका हुन् । तर, तिनीहरूलाई 'वैश्य' भन्ने चलन पछिका मल्ल राजाहरूले चलाएका हुन् । यसलाई तात्कालिक राजनीतिको उपज मान्न सकिन्छ ।

'काष्ठमण्डप' महानगर भारत-तिब्बत मध्यस्थ व्यापारको विशाल केन्द्र हुनाले यहाँ वैभवको चहलपहल हुने नै भयो । यहाँका व्यापार नायक महापात्रहरू निकै धनी थिए । साथै, तिनीहरूले नै यहाँको स्थानीय प्रशासन पनि संचालन गर्ने भएर पुर्खौली सामन्त शासकको स्वरूप पनि पाएका थिए ।

हुन त त्यतिखेरको शासन प्रणालीमा सामन्त शासकको मर्यादा निकै उच्च हुन्थ्यो । यसलाई भौगोलिक क्षेत्रको विस्तार अथवा क्षेत्राधिकारका हिसाबले हेर्नुपर्ने हुन्छ । उसबखत राज्यलाई 'विषयहरू'मा विभाजित गरिने हुँदा तिनका शासकलाई 'विषयपति' भनिन्थ्यो । तर, महानगरमा भने त्यस्तो 'विषयपति' नभएर तिनकै सानो रूपमा महापात्रहरू धेरै जना मिलेर नागरिक प्रशासनको कार्य समेत संचालन गर्दथे । तैपनि तिनीहरू धनी र पुर्खौली शासकीय अधिकार सम्पन्न हुनाले राजनैतिक रूपमा बलिया पनि थिए । यिनै महापात्रहरूलाई हटाएर ने.सं. ६०४ मा (सं. १५४१) रत्न मल्लले काष्ठमण्डप महानगरलाई आफ्नो राजधानी बनाए । रत्न मल्ल आउँदा यहाँ बान्ह जना वैश्य ठकुरीहरूको अस्तित्व रहेको वर्णन भाषा वंशालीकारले गरेका छन् । तथापि ती बान्ह महापात्रहरूका सांस्थानिक परिचय भने वंशावलीमा दिनसकेको छैन । त्यसैले, यो ऐतिहासिक खोजको विषय भएको छ ।

भाषा वंशावलीमा बान्ह वैश्य ठकुरीहरूको अन्त्य गरी रत्न मल्लले काष्ठमण्डप महानगरमा आफ्नो शासन केन्द्र स्थापना गरेको संक्षिप्त चर्चा परेको छ तापनि तिनमा मुख्य-मुख्य आठ जना महापात्रहरूलाई समाप्त गरिएको भन्ने एउटा परम्परा पनि भेटिएको छ । सो परम्परा यस प्रकारको छ :

*"सं. ५५५[1] षपन श्रीरत्न मल्ल राजान त्र देश त्यल ओओ, म्ह ८ थकुर जुजु स्याङाओ क्वा*

---

१ ने.सं. १११-८८८ सम्मको कालक्रम घटना लेख्ने पूर्वाग्रहकासाथ टिपिएकोले यो संवत्को अंक गलतसँग टिपिएको छ। यो घटना ने.सं. ६०४ मा घटेको वर्णन ग्रन्थको यथास्थानमा दिइएकै छ । - लेखक

*बाहार १ ओषा बाहाल २ थथु रायकू ३ तांदे ४ थहिती ५ मूरबाहा ६ इकु बहा ७ तओया क्वा-बाहार ८, थोते राजा बुतकाव हिति चुकस रायकुर हडाव च्वं" ॥*

**कालक्रम:**

**संस्कृत सन्देश" वर्ष** १ **अंक** १०-१२

**पृष्ठ** ८१ (सं. २०१०)

[भक्तपुरबाट आएर राजा रत्न मल्लले कान्तिपुर दखल गरे । आठ जना ठकुरी राजाहरू (वैश्य ठकुरीहरू) मारिए पहिलो क्वा बहाल, दोस्रो ओखा बहाल, तेस्रो थंथु राजकुल, चौथो तांदे बहाल, पाँचौं ठहिटी, छैठौं मू-बहाल, सातौं इकु बहाल र आठौं तल्लो क्वा-बहाल । यति राजाहरूलाई हराएर हिटीचोकमा आफ्नै राजकुल (दरवार) बनाई (रत्न मल्ल) बसे ।]

योगी नरहरिनाथद्वारा प्रकाशित उपर्युक्त पुरानो टिप्पनमा लिखतको स्रोत उल्लेख गरिएको छैन । तर, सो लिखत काठमाडौं, नःघलस्थित गं-बहालको परम्परागत संग्रहमा रहेको थियो । सोही बहालको पं. अमोघबज्र बज्राचार्यद्वारा प्राप्त गरी नरहरिनाथजीले आफ्नो सम्पादन 'संस्कृत सन्देश' मा छापी प्रकाशित भएको छ । कान्तिपुरका १८-ओटा प्रमुख बौद्धविहारहरू मध्येको एउटा 'हेम वर्ण' महाविहार  जनजिभ्रोमा प्रचलित 'गं-बहाल'को परम्परामा संग्रहित यो प्रलेख (Record) हुनाले यसलाई भरपर्दो आधार/स्रोतको रूपमा स्वीकार गर्न सकिन्छ । परन्तु यसको प्रलेख कान्तिपुरमा पृथ्वीनारायण शाहको प्रवेश भएपछि मात्र तैयार गरेको देखिन्छ । पृथ्वीनारायण शाहको प्रवेश यहाँ ने.सं. ८८८ (सं. १८२५) लाई आधार मानी क्रमिक प्रतिलोम अंकको संवत् दिने चेष्ठा गर्दा घटेका घटना सत्य भए पनि काल निर्देश अगाडिको अशुद्ध हुन गएको छ ।

उपर्युक्त ऐतिहासिक लिखतको आधारमा अहिले बुझिएसम्मका महापात्रहरूको संस्थान परिचय तल दिइन्छ :

१. **क्वा : बाहार**= उपल्लो क्वा : बहाल ।

ठहिटीदेखि उत्तरपट्टि रहेको बौद्ध विहार ।

कान्तिपुर किल्लाबन्द शहर रहेको बखत उत्तरी भेकको एउटा किल्ला (दुर्ग) संग जोडिएर यो विहार बनेको हुनाले यसलाई जनभाषामा क्वाथ बहाल भनियो । त्यसैको छोटकरी रूप हो क्वा : बहाल ।

२. **थंथु रायकू**= थंथु राजकुल (दरवार)

यसको संस्थान अचेलको 'ठमेल' वस्ती हो । यहाँको 'थं-बहिल' मध्यकालमा भारतको प्रसिद्ध 'विक्रमशिल' महाविहारको अनुकृतिमा बनेको थियो । त्यसैले, यसलाई अचेल पनि संस्कृतमा लेख्दा 'विक्रमशिल महाविहार' को नामले चिनाउने गर्छन् ।

३. **ओषा बाहाल** = ओखा बहाल ।

आजभोलि यसको संस्थान परिचय संदिग्ध छ । कान्तिपुरका पुराना लिखतपत्रहरू केलाएर हेर्दा यो विहार काठमाडौं केलटोलको हाताभित्र कतै रहेको संकेत पाइन्छ ।

४. **तांदे**= तारिणी विहार= ताना बहाल ।

यस बहालको मूल देवता तारिणी अथवा तारा हो । काठमाडौं मखन टोलमा यो बहाल रहेको छ कान्तिपुरको मध्य भागमा ।

५. **थहिती**= ठहिटी चोक ।

यो कान्तिपुरको उत्तरी किनारमा र क्वा-बहालदेखि दक्षिणतिर अवस्थित छ । यहाँ उहिले ढुङ्गेधारा थियो जो पछि छोपिएर त्यसमाथि एउटा चैत्य निर्माण भएको छ ।

६. **मूर बाहा**= मू-बहाल ।

काठमाडौंको वटुटोलमा यो विहार रहेको छ ।

७. **इकु वाहा** = ईकु वहाल ।

काठमाडौं मुख्य शहरको दक्षिण भेकमा यंगाल मञ्जेश्वरीको बीचमा यो बहाल अवस्थित छ ।

८. **तओया क्वा-बाहार** = तल्लो क्वा-बहाल ।

कान्तिपुरको दक्षिण-पश्चिम, विष्णुमतीको किनारमा भीमसेनथानको नार्कमा यसको संस्थान अवस्थित छ । कान्तिपुर किल्लाबन्द शहर छँदा यहाँ पनि एउटा किल्ला (दुर्ग) रहेको हुँदा यसलाई संक्षेपमा को:ने क्वाथ बहार अर्थात् तल्लो क्वा:बहाल भनेर बोलचालमा सामान्य परिचय पाइन्छ ।

**एउटा अर्को प्रमाण :**

यसरी, आठ जना महापात्रहरूलाई परास्त गरी रत्न मल्लले काष्ठमण्डप महानगरमा नयाँ राजधानी स्थापित गरेको संकेत ईकु बहालका राजभण्डारीहरूको पुर्खौली वंशवृत्तबाट पनि पुष्टि हुन्छ । त्यस वंशवृत्तको सान्दर्भिक अंश यस प्रकार छ :

*"यी राजाका (यक्ष मल्ल) माहिला पुत्र रत्न मल्लले कान्तिपुरका ८ थकू जुजुलाई जमगूठका काजीका छोराले भोजको निम्ती डाकी बोलाई लागू खुवाई ८ ठकुरी राजालाई मारी नेपाल संवत् ५८८ साल फागुन शुदी १२ रोज १ मा राजा भै राज्य गऱ्या ॥"*

**सौजन्य :**
**श्रीध्रुव राजभण्डारी, यंगाल**

यस उद्धरणमा रत्न मल्लले परास्त गरेका महापात्रहरूका संस्थान नखुले तापनि तिनको संख्या '८ थकू जुजु' अर्थात् आठ जना वैश्य ठकुरीहरू भएको यथार्थ विवरण भेटिएकोले एउटा थप प्रमाण हामीलाई उपलब्ध भएको छ। परन्तु, यहाँ पनि संवत् विरिन गएको छ। यतिखेर राजा यक्ष मल्ल जीवितै हुनाले ने.सं. ५८८ फागुन शुदी १२ रोज १ मा कुनै ठूलो राजनैतिक घटना घटेको हुनुपर्छ[२] जसलाई पछि वंशवृत्त लेख्दा भूलवश रत्नमल्लको प्रसंगमा जोडिन गएको छ।

ईकु बहालको पुर्खौली परम्पराबाट आएको उक्त विवरणले तात्कालिक महापात्रहरूको प्रशासन शैलीबारे पनि संकेत दिन्छ। उपलब्ध सबै थरिका वंशावलीहरूमा महापात्रहरूको प्रशासनमा एक जना मुख्य काजी अर्थात् मन्त्री रहन्थ्यो जसको विश्वासमा पर्दा आठ जना महापात्रहरूको अन्त्य भयो। यसरी, महापात्रहरूको प्रशासन चलाउने गोष्ठी (अड्डा) कान्तिपुर, जमलमा रहेको हो कि भन्ने संकेत बालचन्द्र शर्माद्वारा 'प्राचीन नेपाल' पुरातत्त्व विभागको मुखपत्रमा प्रकाशित एउटा वंशावलीमा 'यम गुठका काजीले' यो भूमिका निर्वाह गरेको चर्चाबाट हुन्छ। त्यसको पनि पुष्टि माथि उद्धृत ईकुबहालको चर्चित वंशवृत्तबाट भएको छ। यहाँ 'जम गूठ' को चर्चा मात्र होइन यहींका काजीको छोरालाई यस राजनैतिक षडयन्त्रको प्रणेता बनाइएको छ। यो एउटा राजनीतिको चाल मात्र पनि हुनसक्छ।

रत्न मल्लले उन्मूलन गरेका आठ जना महापात्रहरू मध्ये एउटा ईकु बहालको महापात्र परेका र यही ईकु बहालको परम्पराबाट आएको वंशवृत्तमा प्रस्तुत कथनलाई यहाँनेर प्रामाणिक मान्न सकिने छ।

उपर्युक्त आठ संस्थानका महापात्रहरूलाई परास्त गरी रत्न मल्लले काष्ठमण्डप महानगरमा आफ्नो राजधानी खडा गरेको कुरा यति ऐतिहासिक विवरणबाट प्रष्ट हुन्छ। उनको राजनैतिक अभियानमा यी आठ जना महापात्रहरूले विरोध जनाएका हुँदा तिनीहरूको दमन गर्नुपर्ने भयो। त्यसको परिणाम तिनीहरू सव मारिए।

तर, अहिले आएर उपर्युक्त आठ महापात्रहरूका संस्थानिक परिचय दिने काम निकै गाहारो लाग्छ। अचेल ती संस्थानहरूमा महापात्रहरूको अवशेष अथवा उत्तराधिकार छ छैन त्यसबारे डुबेर खोज खबर गर्नुपर्ने हुन्छ।

महापात्र युगको अथवा महापात्रहरूको सांस्कृतिक पक्ष अध्ययन गर्दा तिनीहरू बौद्ध धर्ममा दीक्षित रहेको कुराको संकेत पाइन्छ। त्यसै परम्पराको उत्तराधिकार बोकेर अहिले पनि ठमेलका प्रधानहरूको पुरोहित बज्राचार्य छन्। ठमेलका प्रधानहरू सबैको सांस्कृतिक सम्बन्ध स्थानीय विक्रमशिल महाविहारसंग जोडिएको छ। अन्य सामाजिक पक्षमा शैव संस्कारले वर्ण व्यवस्थामा आवद्ध रहेर पनि यहाँका प्रधानहरूको बौद्ध संस्कार कायमै रहेको विषय अनुसन्धेय छ।

---

२. उल्लिखित ने.सं. ५८८ मा यक्ष मल्लले नुवाकोटमा पुस्तौनी वैश्य ठकुरी (महापात्रहरू) को सामन्त प्रथा उन्मूलन गरी त्यहाँ केन्द्रकै शासन कायम गरेका थिए। उनको यस अभियानमा शायद रत्न मल्लले सघाइदिएका होलान्। उनको देहान्त पछि, रत्न मल्लले कान्तिपुरका वैश्य ठकुरीहरूको (महापात्र) सामन्त शासन उन्मूलन गरेको घटनालाई वंशवृत्त लेख्दा भूल वश यहाँ जोडिएको देखिन्छ।

- लेखक

रत्न मल्लको शासन प्रारम्भ भएपछि काष्ठमण्डप महानगरमा तन्त्रवादले बढ्ता प्रश्रय पाएको हुँदा शासन मण्डलका सदस्यहरूको विस्तार विस्तारै शैवीकरण हुँदै गए। त्यसैको प्रभावमा परी महापात्रहरू बौद्ध धर्ममा दीक्षित हुन छाडेर तन्त्रवादमा प्रवेश गर्दै गए जहाँ बौद्ध र शैव-सनातनको भेद रेखा एकदमै भीनो मात्र हुन्छ। त्यसको उदाहरण, कान्तिपुरको उपल्लो भेक (उत्तरी क्षेत्र) ठहिटीका महापात्रहरूको संस्थान, मध्य भेक तान्दे वा ताना बहाल र तल्लो भेक (दक्षिणको) क्वा: बहालमा बौद्ध विहारको अवशेष अहिले भेटिँदैन। ठहिटीमा शक्तिपीठ इन्द्रायणीको, ताना बहालमा अर्को शक्ति तारिणी वा उग्रताराको र तल्लो क्वा-बहालमा पचली भैरवको साधना हुन्छन्। शक्ति उपासनाको परिधिभित्र भैरवका अनेक रूप स्वीकार गरिएका छन्। उपर्युक्त आठ-महापात्रहरूका संस्थानमा अहिलेसम्म केही अस्तित्वमा रहेका यिनै तीन ओटा संस्थानहरू भेटिन्छन्। तिनमा पनि खास त उत्तर र दक्षिणका एक/एकले मात्र परम्पराको प्रतिनिधित्व गर्दै भीनो अस्तित्वसम्म बचाइराख्न केही सफल भएका छन्। ती हुन् : ठहिटीका महापात्रहरू र तल्लो क्वा-बहालका महापात्रहरू। अझ तिनीहरूले पनि आफूलाई शासकीय आवरणमा ढाली आफ्ना मौलिक हैसियत बदलेर 'मल्ल' लेख्न थालेका छन्। नेपालको सामाजिक नृतत्त्वशास्त्रीय दृष्टिकोणले यो पक्ष अध्ययन गर्नु पनि उत्तिकै चाख लाग्दो हुनेछ।

महापात्रहरू उहिले बौद्ध-धर्ममा दीक्षित रहेका प्रमाण अरू पनि भेटिन्छन्। काठमाडौंका कतिपय विहारहरूमा बौद्ध कर्मकाण्ड (चूडाकर्म= वरे छुइगु (ने.) आदि गर्दा राजकीय प्रतिनिधित्व तिनै महापात्रहरूका सन्ततिहरूले (थकूजुका नाताले) गर्दै आएका छन् अद्यापि। सम्बन्धित विहारको संस्थापक राजाको हैसियतले यस्तो प्रतिनिधित्वको अनिवार्य प्रचलन भएको कुरा निर्विवाद छ।

काष्ठमण्डप महानगरमा महापात्रहरूको सामन्त शासन रहे जस्तै उसबखत ललितपुरमा पनि महापात्रहरूकै शासन थियो। तर, ललितपुरका महापात्रहरू यताको तुलनामा ज्यादै शक्तिशाली देखापर्छन्। त्यहाँ महापात्रहरूको सामन्त शासनको लामो पृष्ठभूमि फेलापर्छ। त्यसको पछिल्तिर के कस्ता कारकले भूमिका निर्वाह गरेको छ त्यो पक्ष उधिन्नु पनि उत्तिकै आवश्यक छ। ललितपुरका महापात्रहरूका सम्बन्धमा तल छुट्टै खुड्कोमा अध्ययन गरिएको छ। साथै, कान्तिपुर र ललितपुरका महापात्रहरूको अन्तरसम्बन्ध पनि कतै कतै देखिएको छ।

यस प्रकरणमा चर्चित आठ-महापात्रहरूका अतिरिक्त अन्य चार महापात्रहरूको सांस्थानिक खोजी पनि नितान्त सान्दर्भिक हुन्छ। तिनमा दुइटा 'दाथ बहार' र 'वंथ बहार' का महापात्रहरूको अस्तित्व चाहिँ पत्ता लागेको छ। 'दाथ बहाल' कान्तिपुरमा असनको हाताभित्र रहेको वर्तमान दौ-बहाल हो। 'वंथ बहार' चाहिँ यङ्गाल तर्फको ओम बहाल हो भन्ने बुझिएको छ। यक्ष मल्लको शासन प्रारम्भ नहुँदै कान्तिपुरका यी महापात्रहरूसित सम्बन्ध राख्ने एउटा लिखतपत्र ने.सं. ५३९ को (सं. १४७६) उतार परिशिष्ट खण्डमा दिइएको छ।[३]

---

३ परिशिष्ट खण्ड : अभिलेख संख्या-१

कान्तिपुरमा नै अर्को एउटा महापात्र संस्थान असनदेखि केही पश्चिम गएर न्हैकन्तला टोलस्थित चा:बहालमा देखिएको छ । यक्ष मल्लको पालामा यहाँका पात्र हर्षराजले ने.सं. ५७४ (सं. १५११) मा गरिदिएको एउटा लिखतपत्र पनि भेटिएको छ ।[४]

यस प्रकार कान्तिपुरका १२-ओटा महापात्रहरूका संस्थान मध्ये ११-ओटाको संक्षिप्त परिचय अहिलेसम्म पाउन सकिएको छ ।

महापात्रहरूका बारेमा चर्चा गर्दा, काष्ठमण्डप महानगरमा रत्न मल्लको राजनैतिक गतिविधिको केन्द्र रहे पनि महापात्रहरूको व्यावसायिक धन्दामा दखल अथवा नकार गरिएको होइन भन्ने संकेत पाइएको छ । तिनीहरूको राजनैतिक अधिकार वा शासकीय स्वरूप मात्र अपहरण भएको बुझिन्छ । यसको संकेत कान्तिपुरमा राजा महेन्द्र मल्लले ने.सं. ६८४ (सं. १६२०) मा गरिदिएको भीमसेन थानको ताम्रपत्रबाट पाइन्छ । सो ताम्रपत्रमा तल्लो क्वा:बहालका वैश्य ठकुरी तोयुजूले गूठी राखेको विषद् चर्चा पाइन्छ । त्यहाँ उनको पद 'पात्र' कायमै राखिएको छ । रत्न मल्लको मृत्यु भएको करीव चार दशक पछिसम्मको स्थिति व्यक्त गर्ने यस ताम्रपत्रको पनि आफ्नै महत्व हुनाले परिशिष्ट खण्डमा पूर्णपाठ दिइएको छ ।[५]

कान्तिपुरका महापात्रहरूका सम्बन्धमा गहिरिएर अनुसन्धान गर्ने कार्य बाकी नै छ । साथै, तिनीहरूसित सम्बन्ध राख्ने ऐतिहासिक लिखतपत्रहरू पाइँदै पनि छन् । त्यसतर्फ अरू खोजीको अपेक्षा गर्दै प्रस्तुत प्रकरणलाई यहीँ टुंग्याउँछु ।

---

४ परिशिष्ट खण्ड : अभिलेख संख्या-२

५ परिशिष्ट खण्ड : अभिलेख संख्या-३

## परिशिष्ट खण्ड

अभिलेख- १

# कान्तिपुर, दाथ बहाल र वंथ बहाल तथा ललितपुर, पिंथ बहालका महापात्रहरूले गरिदिएको लिखतपत्र ने.सं. ५३९

१. श्रेयोस्तु ॥ सम्वत् ५३९ आषाढ कृष्ण नवम्यायां श्रीयंबु ब्रुमाया श्रीगाङ्गलंगे श्रीवलंखु ब्रह्मपुरि गृहाधिवाशिन द्विजवर श्रीउल्हास पत्यादिभ्य वसुसोम श्रर्म्मनस भ्रात्य श्रीजयदेव पत्यादिभ्य वसुसोम श्रर्म्मनसः श्रीलन्हित ब्रुमायां श्रीपिंथ बहार प्रधान महापात्र श्रीयंकुलि वर्म्मनसः श्रीयंबु ब्रुमायां श्रीदाथबहार कुटुम्वज पात्र श्रीजीवराज वर्द्धन दत्तस पात्र श्रीजय हर्ष वर्द्धन द-

२. त्तसः श्रीवंथ बहार कुटुम्वज पात्र श्रीजोतिराज वर्द्धन दत्तसः एतत् समुच्चयस्य नाम्ने शुक्रीयं सुभुर्जमानिकं । तत्रैव श्रीयंबु ब्रुमायां श्रीतेदो बहार गृहाद्धिवाशिन श्रृंखलीकार मेगशीह भारोस नाम्ने सकासातः । तेदोष्वात वातिका नाम प्रदेशे ॥ वंतु गोष्ठीस भूमे पश्चिमत वंतच्छे जयतकस्य भूमे रुत्रतः द्वंङन वहिरि हकटुकस्य वातिकामा पूर्व्वतः सखुं दंगुरिक-

३. स्य वातिकाया दक्षिणतः । एतेषां मधे द्वय कर्षाङ्क तोपि अङ्केच वल कर्ष २ तत वाटिकायां सा जथादेशकार प्रवत्तमाने संचारार्घेन शुवर्ण मूल्यमादाय स्वादीनानिवत्तक न्यायेन क्रेन विक्रेयतम्भवतिः तत्राधारनकस्य निमित्तेन जदिसंकर्त व्यावादे सति तदा धारनकेन परिसोधनीयञ्च । अत्र पत्रार्थ साक्षि दृष्ट केलंसंच्छे ब्रह्मपुरि द्विजवर श्रीआशपतिसमेक प्रमाणश्चेतिः तल

*(पछाडिपट्टि)*

पति वो १ सहः प्रते तेदो वहार खसा मुग्य दिवङ्गत पंथमयामदु सोधनी कर्तु सोधनी च यथा येस ध्व वल बन्दकुन दाम त्याङतास श्रीवाहारस दहं टुंविरङान तोलावनल्हस्यं ध्व वलन तोलन क्रे विक्रेन चोस्यं काया जुरो

तेदोष्वात वलया क्रेपत्रमिदं ॥

***

स्रोतः
राष्ट्रिय अभिलेखालय
पत्र सं. १०१४ वट्टा ७१
'अभिलेख' वर्ष ५ अंक ५
पृष्ठ ५४-५५ (सं. २०४४)

अभिलेख- २

# कान्तिपुर, चा-बहालका पात्र हर्षराजले गरिदिएको लिखतपत्र
## नेसं. ५७४

(१) ꣸ श्रेयोऽस्तु ॥ सम्वत् ५७४ आषाढ शु(क)ल षष्टम्याया ॱ श्रीयंबू ब्रुमाया ॱ श्रीगाग्वलंगे ॥ श्री केलमन्दप तोलके ॥ थंथछे कास्कार रूपसिंह भारोस नाम्नेन ॱ सकासात् ॥ श्री यंबू महानगरे ॥ श्रीसातिग्लके ॥ श्री न्हसकनतालं तोलके ॥ चा बहाराद्धिवासिन: पात्र वंशावतार हर्षराज भारोस नाम्नेन स्वक्रेयं स्वभूजिमानिकं ॥ कोथु चरमति क्षत्र नाम प्रदेशे ॥ जयसिंह भारोस भुमे पखिमत ॥ श्रीज्याथ बहार भुमे उर्त्त ॥ जीवचन्द भा-

(२) रोस भुमे पूर्व्वत ॥ श्रीश्रीराजकुल वस्तु भुमे दक्षनत ॥ एतेषां मधे चतुर रोपनिकं क्षेत्र ॱ यत क्षत्रांकतोपि बू रोव ४ तत क्षत्रस्य जथा देस काल प्रवतमान संचारार्घेन सूवर्ण्ण मुलमादाय क्रे विक्रेस्वादनिवतकं न्यायेन क्रेन विक्रेयतं भवति ॥ तत्र जदि संक्यट व्यावाद पिदा स्यात तदा धारनकेन परिसोधनियञ्च अत्रार्थे साक्षि: न्हसकनतालं स्वंतंछे थाव जयतराज भारोस दृष्ट तलकिं पा २ सह ॥ प्रते घरसार वय यायेस क्रेन काया शुभ ॥

***

स्रोत:
श्रीमहेशराज पन्तसँग रहेको छविचित्र
'पूर्णिमा' पूर्णाङ्क ८२ (सं. २०४९)
संशोधन मण्डल

अभिलेख-३

# कान्तिपुर भीमसेनसँग सम्बन्धित ताम्रपत्र
# ने.सं. ६८४

१ अद्य ॥ ब्रह्मणो द्वितीय प्रहरार्द्धे श्वेत बराहकल्पे वैवश्वत मन्वन्तरे अष्टाविंशतितमे चतुर्युगस्य कलेः प्रथम पादे याम्बूदीपे भरतखण्डे भारत वरषे हिमवद्दक्षिणपा(दे) नेपाल मण्डले श्री ३ पशुपति सन्निधाने वासुकि क्षत्रे, वाग्मत्या पश्चिम कू(ले) श्री ३ विष्णुमत्याः पूर्व्वकूले ॥ गांगुल पत्तने ॥ आर्यावर्त देशे ॥ श्रीमत्कान्तिपुर महानगरे श्रीयंग्ल काष्ठमण्डपस्थाने इहैव पूणे भूमौ ॥ श्रेयोऽस्तु ॥ सम्वत् ६६० वैशाष मास्य शुक्लपक्षे ॥ तृतीयायान्तिथौ ॥ एतस्मिन्दिने स्वकृत देवगृहे स्वस्थापित श्री ३ महाभैरव मूर्तेस्तथा श्री ३ काल भैरव मूर्तेस्तथा श्री ३ रक्तकाली मूर्तेस्तथाम्बात्मा मूर्तेश्चप्रीत्यर्थमताभ्यो देवभ्यो भिक्षु श्रीहाकुदासन स्वाधिकार भूत गृहं वाटिकाश्च सार्द्ध पंचचत्वारिंशदधिक शत रोपनिंक क्षत्रंच संप्रदर्त्तमेतदन्यथा कर्त्ता पंच महापातकी भविषति- कून्हु ॥ थ्व महापर्व्व दिन कुन्हू ॥ श्रीयंग्ल क्वथ्व त्रवो तोर क्वाथ बहार छे पात (पात्र) श्रीतोयूजू थकुरन श्री ३ भिमस्यनया पतिमा दयकं श्व हस्तेन दून्ता ॥

अत पर देस भाखा जथा चात्राघातन दु ॥ रो १० माल रो २० थसिदो ओरन तङ रो ४ जखा रो ६ चाकमार, रो १८ दानगार रो १० चू २ मनसु वाहार दोक्व रो ७ चूमदे, रो ७ बहिलि गाम रो ३ एरमुनिदो रो ६ संखदो क्वपाख रो ३ फिवचो रो १० चखू बू रो ३ येखा बू रो ५ झलबूक्व रो २० जलद अफल रो ३२ तपा खूशि ओरन तङ र्कर्ष ४० यतगु रो ३ पलंगार रो ३ चिचोक्वाठ रो २ मारदोर रो ९ क्वन्हा पुखुलि रो ८ दरूति बू रो ४ झदख्वात ॥ माले बलस सुद्धिं छे केवनों, वुं नो श्री ३ भिमस्यन पित्तिन तोयूजू थकुरनं दुत्ता जुरों थ्वते वू नोङ केवंनों सूनानं कचंगर थङाओ सनसा, क्वति पंचमहापातक राक जूरो श्री ३ भिमस्यनया कुदिष्टि राक जूरो ॥ थ्वते भाखाया दृष्ट साक्षि ३ चन्द्र सूर्य्य मेदान ॥ शुभमस्तु ॥ सर्वदा ॥ शुभं ॥

भूय कसिङा बु नो ओरनो पाख सूधानं श्रीश्रीमहेन्द्र मल्ल प्रभू थाकुरसन श्री ३ तओ देवल पतिस्थां यात श्री ३ भिमस्यनं थाहाविज्याचके यात दुन्तापतक जूरो ॥ सम्वत् ६८४ माघ कृष्ण ॥ शुभं ॥

*(पछि थपेको लिपिमा)*

न्हाद क्व रो १॥ रोओ २ तोखा रो ४ किंदोरिओ रो ७ चर रो २ महागु दो रो २ कोकोचो रो ३ श्वदे रो ३ जाखा ताहाच रो २ खुसिवहिक्व चुर ३ ।

***

स्रोतः सौजन्य-
स्व. श्रीपन्नामानसिंह मल्ल
भीमसेनथान, क्वा-बहाल

## परिच्छेद ४

# भक्तपुरमा रत्न मल्लको संयुक्त शासन

यक्ष मल्लको मृत्यु भएपछि नेपाल मण्डलमा उनका ६ जना छोराहरूमध्ये ज्येष्ठ क्रमले तीनजना राय-रत्न-रण मल्लहरूको संयुक्त शासन कायम भएको चर्चा माथि दोस्रो परिच्छेदमा परेको छ। तर, त्यतिले मात्र माहिला रत्न मल्लको चित्त नबुझेर उनी पुर्खौली राजधानी भक्तपुरलाई छाडी कान्तिपुरमा आएर आफ्नो राजधानी खडा गरेपछि नेपाल मण्डलको राजनीतिमा नयाँ मोड देखापर्‍यो। उनले नेपाल मण्डल पूर्णरूपमा आफ्नो एकलौटी अधिकारमा राख्ने चेष्टा गरे। यसको निमित्त पहिलो दृष्य थियो कान्तिपुरको अधीनमा भक्तपुर। यसअघि शासन केन्द्र भक्तपुरको अधीनमा कान्तिपुर रहनु स्वाभाविक थियो। यहाँका महापात्रहरूको सामन्त शासन राजधानी भक्तपुरबाट निर्दिष्ट हुने गर्थ्यो। अब यो दृश्य फेरिएर भक्तपुर नै कान्तिपुरको अधीनवर्ती भएर महाराजाधिराज रत्न मल्लको हुकूम तामेल गर्ने भए।

तर, यक्ष मल्लको जेठा छोरा राय मल्ल हुनाले भक्तपुरको आन्तरिक प्रशासनमा उनको धेरै बोलवाला रहेको थियो। यसरी व्यवहारमा राय मल्लको प्रमुख भूमिका रहे पनि सार्वभौमसत्ताको दृष्टिले भने भक्तपुरमा रत्न मल्ल समेतको त्रिभय शासन शुरु भयो। त्यसमा पछिबाट भानिज भीम मल्ल पनि समावेश गरियो। यक्ष मल्लको छोरीका छोरा भएर भीम मल्ल शासन सत्तामा समावेश गर्नाले मध्यकालिक नेपालको राजगद्दी परम्परालाई पुष्टि गर्दछ। यसरी भानिज पनि सरिक भएर राय-रत्न-रण मल्लहरूको चौभय शासन देखिने पहिलो अभिलेख ने.सं. ६०७ (सं. १५४४) को यक्षेश्वर मन्दिरको ताम्रपत्र छ। यस अभिलेखमा यक्ष मल्लकी विधवा रानी कीर्तिलक्ष्मीले यक्षेश्वर महादेवको मन्दिर गर्भगृहभित्र तामाको २४ ओटा सिंह मुखमा (सिंख्वा) सुनको जलप लगाएर स्थापित गरेका थिए। यसले के कुराको संकेत गरेको हो त्यो भने खुल्न सकेको छैन।

यस अभिलेखमा व्यक्त संयुक्त शासनको स्वरूप यस प्रकार छ :

*योसौ श्रीजय राय मल्ल नृपतिर्नेपाल चूडामणि-*
*स्तन्मध्योनुज कंस विक्रमवली श्रीरत्नमल्लो नृपः ।*
*कानिष्ठो रणमल्लदेव सुकृती श्रीवीरनारायण-*
*स्तत्तेषां वर भागिनेय विदित श्रीभीममल्लो नृपः ॥*

**भक्तपुर 'यक्षेश्वर' मन्दिरको[1] अभिलेखबाट** (ने.सं. ६०७)

१. अभिलेखको पूर्ण पाठ-परिच्छेद २ परिशिष्ट खण्ड : अभिलेख संख्या-४

[नेपालको प्रमुख राजा राय मल्ल भए । माहिला भाइ राजा रत्नमल्ल कंस जस्तो पराक्रमी भए । कान्छा रण मल्ल असल काम गर्ने वीर नारायण समान भए । तिनीहरूका सुयोग्य भानिज राजा भीम मल्ल भए ।]

नेपाल मण्डलको राजधानी भएर भक्तपुरमा 'त्रिपुर दरवार' मध्यकालिक शासन केन्द्रको रूपमा रही आएको थियो । त्यसैले तात्कालिक नेपालमा शासनको केन्द्र स्थल जनाउन 'त्रिपुर राजकुल' यो वाक्यांश पर्याप्त हुन्थ्यो । यस्तो 'त्रिपुर राजकुल' मा खास गरी रत्न मल्लको महत्त्वाकांक्षाले गर्दा वैमनस्य पैदा भएको संकेत पनि यक्षेश्वर मन्दिरमै रहेको ने.सं. ६१४ को ( सं. १५५१) अर्को ताम्रपत्रबाट पाइन्छ । यस अभिलेखमा त्यतिखेरको संयुक्त शासनमा सरिक सबै भाइहरूको नाम नदिइकन राय मल्ल प्रमुख भएर त्रिपुर राजकुलमा रहेका ठाकुरहरू सबैले यक्षेश्वरमा गूठी राखेको भनी उत्थानमा नै चर्चा गर्दै तल एक ठाउँमा त्रिपुर दरवारका ठाकुरलोक तीन जनाले आ-आफ्ना मतलवका निमित्त गूठीमा हस्तक्षेप नगर्ने वचन दिएका छन् । यस प्रकार 'त्रिपुर राजकुलको तीन ठाकुर' भन्नाले निःसंदेश राय-रत्न-रण मल्लहरूको संयुक्त शासनलाई व्यक्त गरेको हो । साथै, त्यतिखेर यी तीन जना शासकहरूमा परस्पर मेल नभएको कुरा यसरी इङ्गित गरिएको पाइन्छ :

*"पुन भाखा थ्वसपोल ठाकुर लोक समस्त॒ थव थेथे कचाड जुस्यं थंथ्या क्वथ्या त्या बु जुस्यं वंकाले॒ थ्वते गुठि लोकया पुटान घट घाटोले त्या बु मदयकं ङ्याकि षलकि विठिवाहा ममालक प्रसंन जुया जुरो॒ थ्वते त्रिपुर राजकुलया ठाकुरलोकन शुह्मस्यं थ्वते गुठी लोकस घटान घट गुठि जुटोले त्या बु दयकं ङ्याकि षलकि याङन॒ विठिवाहा मालक अप्रसंन जुकाले॒ श्रीश्रीश्रीयक्षेश्वरस निग्रह॒ "*

**-भक्तपुर, यक्षेश्वर मन्दिरको[२] अभिलेखबाट (ने.सं. ६१४)**

[अर्को व्यहोरा, उहाँ ठाकुरहरूमा परस्पर वेमेल भएर तलमाथि हारजित हुन जाँदा गूठीयारहरू र उनका सन्तान दरसन्तान उपर हारजितको असर नपारी 'ङ्याकि षलकि र विठिवाहा'को दस्तूर नलाग्ने गरी निगाह गरिएको छ । उहाँ त्रिपुर राजकुलका ठाकुरहरू तीन जनाले (राय-रत्न-रण मल्लहरू) यसका गूठीयारहरूको सन्तान दरसन्तान पर्यन्त हारजितको असर पर्ने गरी 'ङ्याकि षलकि र विठिवाहा' को दस्तूर लाग्ने गरी निगाह नगरेमा श्रीयक्षेश्वरको कुदृष्टि परोस् । ]

उपर्युक्त अभिलेखमा परेका 'ङ्याकि षलकि' र 'विठिवाहा' को अर्थ खुलाई कतै व्याख्या गरिएको पाइँदैन । त्यस बारेमा अब केही भन्नु उपयुक्त होला । तिनले तात्कालिक कर वा दस्तूरहरू तीन थरिलाई बुझाउँछन् । राजाहरू युद्धमा जाँदा आ-आफ्ना प्रजासित 'ङ्याकि षलकि' भनेर अनाजको परिमाण तोकेर दस्तूर उठाउने गरिन्छ भने 'विठिवाहा' को हकमा बेगारी नै जानुपर्ने हुन्छ । यस्ता कर दस्तुरहरू यक्षेश्वरका गूठीयारहरूलाई नलाग्ने व्यवस्था

२ अभिलेखको पूर्ण पाठ परिशिष्ट खण्ड : अभिलेख संख्या १

ताम्रपत्रमा गरिएको छ। साथै, यस अभिलेखको पेट बोलीमा त्रिपुर दरवारमा परस्पर मेल नभएको संकेत दिइएको छ। यसरी मेल नहुनुमा निःसन्देह माहिला रत्न मल्लको महत्वाकांक्षाले पूरापुर भूमिका निर्वाह गरेको छ। उनले अरू भाइहरूलाई पनि दाजू राय मल्लसँग फुटाई आफूतर्फ तानेका छन्। अरू भाइहरूले पनि भक्तपुरमा राय मल्ललाई एकलो पार्ने काममा रत्न मल्ललाई सघाउ पुऱ्याउँदै आएका छन्। यसले रत्न मल्लको व्यक्तित्व अथवा श्रीवृद्धिको संकेत हुन्छ।

अर्को साल ने.सं. ६१५ (सं. १५५२) मा ललितपुरलाई भक्तपुरबाट अलग गरी कान्तिपुरको अधीनमा राख्ने सन्धिपत्र भएको छ। यस सन्धिद्वारा जेठा राय मल्ल र उनका पक्षधर भाइ राम मल्ललाई भक्तपुरमा मात्र सीमित राखी ललितपुर माथिको सार्वभौमसत्ता अर्थात् केन्द्रको अधिकार कान्तिपुरमा सारिएको छ। अर्को शब्दमा भन्दा ललितपुरमा रत्न मल्लको अधिकार भयो। यस काममा रण मल्ल र भीम मल्लले समेत रत्न मल्ललाई सघाउँदै थिए। अरि मल्ल त शुरुदेखि नै रत्न मल्लका साथ छँदैथिए। यस परिवर्तन सम्बन्धी विस्तृत चर्चा तल आउने ललितपुरको प्रकरणमा गरिने हुँदा यहाँ घटनाक्रम मात्र दिने कार्य भएको छ।

यसरी ललितपुरमा राय मल्लको अधिकार छुटाई कान्तिपुरबाट रत्न मल्लले नेतृत्व गरेको त्रिपुर ठाकुरहरूको संयुक्त शासन खडा भएतापनि भक्तपुरमा भने रत्न मल्लको अधिकार कहिँ घटेको थिएन। भक्तपुर, तचपाल टोल महादेवस्थानको ने.सं. ६२४ को (सं. १५६१) अभिलेख अनुसार त्यतिखेर रत्न मल्ल यथावत् चौभय शासनमा सरिक रहेको पाइन्छ। त्यतिञ्जेल पनि अरू ठाकुरहरूमा ज्येठा राय मल्ल सहित भाइ रण मल्ल र भानिज भीम मल्ल भक्तपुरको शासन मण्डलमा कायमै रहेको देखिन्छ। यसपछि यो संयुक्त शासन कायम रहेको कुरा जनाउने प्रामाणिक अभिलेख अथवा अन्य कुनै लिखतपत्र भने देखापरेको छैन।

जहाँसम्म भक्तपुरमा सीमित आन्तरिक प्रशासनको प्रश्न छ त्यसमा त राय मल्ललाई नै प्रमुखता दिएको पाइन्छ। त्यसमा पनि कान्छा राम मल्लले जेठा दाजू राय मल्ललाई सघाउ गरी संयुक्त शासनको अर्को लघुरूप देखापरेकै छ। यसको निमित्त ने.सं. ६२५ र ६२ (सं. १५६१-१५६३) मा राय मल्ल र राम मल्लले गरिदिएको लिखतपत्रहरू प्रमाण स्वरूप छन्।

परन्तु, भक्तपुरमा रत्न मल्लको सार्वभौमसत्ता पछिसम्म कायम रहेको घटनाक्रम भेटिन्छ। तिनमा एउटा घटना राय मल्लको मृत्युका बखत घटेको छ। ने.सं. ६३० मार्ग कृष्ण सप्तमीका (सं. १५६६) दिन भक्तपुरमा राय मल्लको मृत्यु भयो। भोलिपल्ट उनको शव यात्रा भक्तपुरबाट कान्तिपुर पशुपतिमा चलाइए। तर, रत्न मल्लले दाजू राय मल्लको दाह संस्कार पशुपतिमा गर्न आज्ञा दिएन। भक्तपुरबाट ल्याइएको उनको शव यसपछि ललितपुरमा बागमतीको किनार शंखमूल घाटमा लगी दाह संस्कार गरियो। यस घटनाको विवरण केसर पुस्तकालयमा रहेको

३ परिशिष्ट खण्ड : अभिलेख संख्या-२

४ परिशिष्ट खण्ड : अभिलेख संख्या ३ र ४

एउटा तन्त्र विषयक हस्तलिखित-ग्रन्थको अलग पानामा टिपिएको छ :

'१, *सम्वत् ६३० थिसला–गाको शतिं कोन्हु सोमवार थौकुन्हु: राजा राय मल्ल दे ठाकुरतो शिवरिन जुव: अष्टिं अंगारवार: थो कोन्हु सव संस्कार याङा: संखमोदत्य रथस जुरो: हुङथे हया मदो: नक दोयका- गोल्व लं मचाल्व: खप्वन थो हयका जुरो"*

**स्रोत:**
**केसर पुस्तकालय**
**तन्त्रविषयक ग्रन्थ, संख्या १६६**
**'पूर्णिमा' पूर्णाङ्क ४७ (सं. २०३७)**

[ ने.सं. ६३० (सं. १५६६) मार्ग कृष्ण सप्तमी सोमवारको दिन राजा राय मल्ल (भक्तपुर) देश ठाकुर शिवलीन भए। अष्टमी मंगलवारको दिन शव संस्कार गरियो: शंख मूलसम्म रथमा लागियो: पहिले जसो गरी भक्तपुरबाट शवयात्रा ल्याउन दिइएन, पशुपति देवपत्तनको बाटो खुलेन। ]

तात्कालिक घटना टिपिएको उपर्युक्त उद्धरणबाट के देखिन्छ भने नेपाल मण्डलको सार्वभौम राजाको मृत्यु संस्कार पशुपति आर्यघाटमा हुने गर्थ्यो। तर, राय मल्लको शव यात्रा पशुपतिमा परम्परागत रूपमा हुन सकेन। यस घटनाबाट रत्न मल्लले आफ्ना दाजू राय मल्ललाई नेपाल मण्डलको सार्वभौम अधिराज नमानेको कुरा सावित हुन्छ।

रत्न मल्लसँग कान्तिपुरमा ने.सं. ६२५ (सं. १५६१) सम्म संयुक्त शासनमा उत्रने उपराज इन्द्रमल्ल पछि एक्कासि भक्तपुरमा देखापरेको कुरा माथि दोस्रो परिच्छेदमा लेखिएको छ। भक्तपुरमा राय मल्लको मृत्यु भएको करीव डेढ वर्षपछि इन्द्र मल्लको पनि भक्तपुरमै अवसान भयो। तर, उनको मृत्यु कालगतिले भएको थिएन। उनी त्यहाँ कैदमा परेका थिए। उनलाई त्यहाँ कैदमा राख्ने अरू कोही होइन रत्न मल्ल नै थिए। यस घटनाबाट भक्तपुरमा राय मल्लको मृत्यु भएपछि पनि त्यहाँ रत्न मल्लको शासन कायमै रहेको प्रमाणित गर्छ।

यसरी राय मल्लको मृत्यु भएपछि भक्तपुरमा नै रत्नमल्लले भतिजा इन्द्र मल्ललाई नौ महिनासम्म कैदमा राखी त्यसपछि सोही कैदमा नै उनको वध गराइयो। उनी मारिएपछि उनकी रानी सीतादेवी सती गइन्। तर, आफ्ना पतिको शवसँग होइन कि उनको चिन्हासँगै सतीदाह गर्न रथमा राखेर भक्तपुरबाट ललितपुरमा बागमतीको किनार शंखमूलमा ल्याएर सती पोल्ने काम भयो। यो दाहसंस्कार पनि पशुपतिमा गर्न दिइएन। यो पनि रत्न मल्लकै आज्ञानुसार भएको थियो।

उपर्युक्त घटनाको विवरण पनि राय मल्लको मृत्यु सम्बन्धी घटना टिपिएको तन्त्र विषयक केसर पुस्तकालयमा रहेको हस्तलिखित ग्रन्थमा नै भेटिएको हो। त्यहाँ राय मल्लको मृत्यु

भएको घटना लेखिसकेपछि इन्द्र मल्ल मारिएको विवरण यसरी टिपिएको छ :

*" ᥫ सम्वत् ६३१ चंगुनिला-गाको दुराख चेत्र नक्षत्र व्याघा(त) जोग: आदित्यवार: थो कुन्हु इन्द्र मल्लदेव राजासं जातक मि (वि)या: सतिदेवीत्वं (सीतादेवी): जातक वो मि विस्यं वंगो जुरो संखमोदत्य रथसं जुरो:*

*थोन: जातवा श्रीश्रीलतन मल देव ठाकुस्यं: बंधिस तया दु व गु रा ओद्धारे: तावादेवस्यं बंधि कुथिस स्याचका जुरो० थो वेर लगं (ग्वल) मचाल जुरो० थो उदेसन: जातक वो मि (वि)स्य वंगोत्वं जुरो: खोप्वनं: संखमोदत्य (ह)या जुरो ॥"*

**स्रोत:**

**केसर पुस्तकालय**

**हस्तलिखित ग्रन्थ संख्या १६६**

**'पूर्णिमा' पूर्णाङ्क ४७ (सं. २०३७)**

**संशोधन मण्डल**

[ने.सं. ६३१ (सं. १५६८) चैत्र कृष्ण द्वितीय चित्रा नक्षत्र व्याघात योग आदित्यवारको दिन इन्द्र मल्ल राजाको चिन्हा दाह संस्कार गरियो: (रानी) सीतादेवी (राजाको) चिन्हाका साथ रथमा राखी शंखमूलसम्म शवयात्रा गरी सती गईन् ।

यसो गर्नु परेको कारण, श्रीश्रीरत्न मल्लदेव ठाकुरले (इन्द्र मल्ललाई) नौ महिनासम्म कैदमा राखी कारावासमै मार्न लगाए । यस बखत पनि पशुपतिको बाटो खुलेन । त्यसैले (इन्द्रमल्लको) चिन्हा दाह संस्कार गर्न भक्तपुरदेखि शंखमूलसम्म ल्याइयो ।]

उपर्युक्त ऐतिहासिक घटनाक्रमबाट कान्तिपुरमा रत्न मल्ल र इन्द्र मल्लका सम्बन्धमा विचार गर्ने एउटा आधार पाइएको छ । ने.सं. ६२५ (सं. १५६१) सम्म कान्तिपुरमा रत्न मल्लकासाथ संयुक्त शासक भएर रहेका इन्द्र मल्ल राय मल्लको मृत्युपछि ने.सं. ६३१ (सं १५६८) मा एक्कासि भक्तपुरमा कैदीको रूपमा देखापर्छ । ने.सं. ६२९ (सं. १५६५) देखि कान्तिपुरमा रत्न मल्लले एकल शासन गरिरहेका देखिन्छन् । यसबाट रत्न मल्लले ने.सं. ६२५ (सं. १५६१) पछि भतिजा इन्द्र मल्ललाई आफ्नो प्रतिनिधि गरी भक्तपुर त्रि-पुर दरवारमा पठाएको कुरामा विश्वास गर्न सकिन्छ ।

तर, राय मल्लको मृत्युपछि भक्तपुरमा रत्न मल्लको विरुद्ध षडयन्त्र भएको आभास पाइन्छ । भक्तपुरमा राय मल्लका पक्षधरहरू मिलेर कान्तिपुरदेखि छुट्टिन चाहन्थे । उनीहरू रत्न मल्लको अधीनमा बस्न नचाहेर उनको विरोधमा लागे । राय मल्लको मृत्युपछि रचिएको त्यस षडयन्त्रमा इन्द्र मल्ल पनि सामेल भए । त्यस वापत उनी भक्तपुरमै कैद गरिए । यसरी भक्तपुरमा रत्न मल्लको सार्वभौम प्रभाव यथावत् कायम रह्यो ।

परन्तु, यस बारेमा खोजीकासाथ अध्ययन जारी राख्नु पनि आवश्यक नै छ । किनभने, भक्तपुरमा राय मल्लको मृत्यु भएपछि उनका छोरा भुवन मल्लको शासकीय अभिलेख वा कुनै

लिखतपत्र हालसम्म देखापरेको छैन । यस्तैमा ने.सं. ६३९ (सं. १५७५) को माघ महिनामा भुवन मल्लको पनि मृत्यु भयो[५] त्यहाँ उनलाई राजाकै रूपमा मान्यता पाएको थियो । यतिखेर, कान्तिपुरमा रत्नमल्ल जीवितै थिए ।

भुवन मल्लपछि भक्तपुरमा उनका छोरा प्राण मल्ल उत्तराधिकारीका रूपमा छँदै थिए । यता ने.सं. ६४० को (सं. १५७७) भदौ महिनामा कान्तिपुरमा रत्नमल्लको मृत्यु भयो । त्यतिखेर भक्तपुरमा रण मल्ल र भीम मल्लहरू संयुक्त शासनमा कायमै रहेको देखिन्छ । साथै, त्यस बखतको यथार्थ राजनैतिक स्थिति व्यक्त गर्ने ऐतिहासिक लिखत भेटिएको छैन । तर, यसको तीन वर्षपछि ने.सं. ६४३ मा (सं. १५८०) भक्तपुरको शासन मण्डलमा रण मल्ल र भीम मल्लकासाथ वीर मल्ल र जित मल्लहरू पनि थपिएर संयुक्त शासनको चौभय रूप नै देखापर्छ ।[६] गद्दीमा चाहिं दिवंगत जेठा भुवन मल्लको उत्तराधिकारी प्राण मल्ल नै राखिए । त्यतिखेर, उनी वालिग नहुँदा हुन् । यसरी एक जना बाजे र काकाहरू सम्मिलित भएको एउटा नयाँ ढाँचाको संयुक्त शासन भक्तपुरमा प्राण मल्लको राज्यकाल प्रारम्भताका देखापरेको छ । पुरानो संयुक्त शासनको सदस्य भीम मल्ल पनि यतिखेरसम्म हटेको छैन । सबैभन्दा विचारणीय पक्ष त ने.सं. ६४३ (सं. १५८०) सम्म पनि रण मल्ल भक्तपुरको शासन मण्डलमा कायमै रहेको पाइनाले भक्तपुरमा राय मल्ल र कान्तिपुरमा रत्न मल्लसित साहिला रण मल्लको षाडगुण्य अर्थात् राजनैतिक सम्बन्ध बारे फेरि एकपटक सोच्नु पर्ने हुन आएको छ ।

भक्तपुर, थालाछे महालक्ष्मी पीठको अगाडि ढुंगेधारानेर रहेको एउटा अभिलेखद्वारा उपर्युक्त विश्लेषणको पुष्टि हुन्छ । तसर्थ, सो अभिलेखको सम्बद्ध अंश तल उद्धृत गरिएको छ :

*"श्रीरण मल्ल पृथिविपतिनां श्रीभीम मल्ल......... ईश्वराणां, श्रीवीर मल्ल श्रीजित मल्ल ॥ तेषां नृपानां विजयं च राज्ये ॥*

*...... भक्तापुरी श्रीनगराधिपानां प्राशाद ...... प्रतिस्था ॥*
*अग्निवेद रसे वर्षे वैशाख पूर्ण्णमी तिथौ ।*
*विशाषं च वरियानं समाप्तं वुधवासरे ॥"*

**– इतिहास संशोधनको प्रमाण प्रमेय– पृष्ठ १४०,**
**संशोधन मण्डल** (सं. २०१९)

[भक्तपुरी नगरका स्वामी रणमल्ल भीम मल्ल वीर मल्ल र जित मल्लहरूका विजय राज्यमा...... ने.सं. ६४३ (सं. १५८०) वैशाख पूर्णिमा विशाखा नक्षत्र वरियान योग वुधवारको दिन समाप्त । ]

---

५ परिशिष्ट खण्ड : अभिलेख संख्या-५

६ वीर मल्ल र जित मल्ल राय मल्लकै छोराहरू हुन् ।

प्राणमल्ल्गा काका

परिशिष्ट खण्ड

अभिलेख-१

# भक्तपुर यक्षेश्वर मन्दिरमा रहेको त्रिपुर राजकुलद्वारा स्थापित गूठीको ताम्रपत्र ने.सं. ६१४

स्वस्ति ॥ श्रीश्रीश्रीयक्षेश्वर भट्टारकसके ˎ प्रतिदिन निस्तरपेयकें निर्मितिन ˎ श्रीश्रीजय राय मल्ल देव प्रभु ठाकुरत्वं प्रमुखन त्रिपुर राजकुलस ˎ विज्याक्व ठाकुरलोक समस्तसनं ˎ गूठि चिनकं तंवसासन टास्यं चोस्य तया निस्तरपं यंने भाखा ˎ थ्वते गुठि खनिमं टोल-रचि कस्त ˎ टुपलाछे टोल-रथन ˎ तिप्रक्व छे टोल-हर्षराज ˎ योलं टोल-लुटु ˎ क्वाछे टोल-जोपचिमडिक ˎ गोलमंडोटोल हेर साहु ˎ प्वंडुलाछें टोल-डोप ˎ खनिमं टोल-जखराज ॥- ॥

थ्वते गुठिन दानपत्रस सासनस चोस्यं तक्व प्रतिदिन निस्तरपेनो वर्शवादन ˎ पर्व्वपार्व्वनि ˎ प्रति वर्ष निस्तरपेनो अछेद्र याङन निस्तरपं यनेमाल दानपत्र सासनस चोस्यं तक्व मनिस्तरपं छेद्र याकाले लोभामोहो याकाले श्रीश्रीश्रीयक्षेश्वरस निग्रह ˎ ब्रम्हहथ्या आदिन पंच महापातक लाक ˎ छेद्र मयास्यं लोभामोह मयास्ये निस्तरपं यंकाले उत्तोत्तर ˎ

पुन भाखा थ्वसपोल ठाकुर लोक समस्त ˎ थवं थेथे कचाड जुस्यं ˎ थंथ्या क्वथ्या त्या बु जुस्यं वंकाले ˎ थ्वते गुठि लोकया पुटान घट घाटोले त्या वु मदयकं ङ्याकि षलकि विठिवाहा ममालक प्रसंन जुया जुरो ˎ थ्वते त्रिपुर राजकुलया ठाकुर लोकन शुम्हस्यं थ्वते गुठीलोकस घटान घट गुठि जुटोले त्या बु दयकं ङ्याकि षलकि याङन ˎ विठिवाहा मालक अप्रसंन जुकाले ˎ श्रीश्रीयक्षेश्वरस निग्रह ˎ व्रम्हहथ्या आदिन पंच महापातक लाक थ्वत्ते गुठिया घटान घट घाटोले गुठि निस्तरपे माल ˎ मनिस्तरपे धाय मदु ˎ छें तिप्रक्वछे टोल क्वथुननि येटास खा ˎ येकुलि मुलस खा येकुलिलक ˎ योटा मुलस खा् यंकुलि मूल यंकुलि लक येटाचा मातानन सहित ˎ थ्वछें लिक्वं लिविन सहित वु एकतन नेसरनो खुयन्हस पेक्ष(क) त्या वो २६७x दंम २४ खप्वं देशया सखि प्यंड चेतकर पनिसके काय ˎ थ्वते बु पेचकेनो ठोयनो हेनाहेन मटेव ˎ गुठि सम्पधारनतु टेव पुन भाखा थ्व वेलस निस्तरपक्व गुठिन ठाकुरलोकसके वापं कास्यं ˎ गाम क्वाठ कास्यं ˎ भंढिरि जुस्यं राज सेवा निस्तरपे मटेव ॥ श्रेयोस्तु संवत् ६१४ भाद्र पद शुक्ल चतुर्थ्यान्तिथौ शुभ ॥-॥

***

**भोलानाथ पौडेलः**

**'यक्षेश्वर मन्दिर'**

**'पूर्णिमा' पूर्णाङ्क ५ (सं. २०२:)**

**(संशोधनमण्डल)**

अभिलेख-२

# राय+रत्न+रण+भीम मल्लहरूको भक्तपुर तचपालटोल महादेव मन्दिरको अभिलेख

## ने.सं. ६२४

(आंशिक रूपमा)

स्वस्ति ॥ श्रीनेपाल मण्डलेश्वर श्रीश्रीजय राय मल्लदेवः श्रीश्रीजय रत्न मल्लदेवः श्रीश्रीजयरण मल्ल देवः श्रीश्रीजय भीम मल्लदेवस्तेषां भूपालानां विजयराज्ये ् श्रीभक्तापुरी नगरा(धिपति) .... (प्रति)स्था

(नेपाल संवत्) ६२४....(खण्डित)

**-भक्तपुर शिलालेख सूची-संख्या १८,**
**वीर पुस्तकालय (सं. २०२०)**

अभिलेख-३

# भक्तपुरमा रायमल्ल र राममल्लको लिखतपत्र

## ने.सं. ६२५

१. स्वस्ति ॥ श्रीश्रीजय राय मल्लदेव प्रभु ठाकुरसन श्रीश्रीजय राम मल्लदेव प्रभु ठाकुरसन उभयसन प्रसादारपा ् थानस्य दक्षिण दीस प्रदेशे । शशिकस्य क्षेत्रेन पश्चिमत श्रीश्रीराजकुल क्षेत्रेन उत्तरत ् पूर्व्वत ् दक्षिणतश्च

२. एतन्मध्ये यथोवंपा क्षेत्र नाम संज्ञकं तस्य क्षेत्राङ्क पंच रोपनीयंक रोव ५ तत्क्षेत्र यथादेशकाल प्रवर्त्तमानस्तथा सन्चारार्घेण सुवर्ण प्वष्प मालार्ध प्रढौकितमादाय क्रय विक्रय स्वाधिनेन क्रयेन विक्रीयतं भवति ् ततः थेमि कोथो टोलकाधिवासिन

३. वज्राचार्य तोयु वंदे नाम्ना प्रसादी कृतं ् अत्रार्थे दृष्ट श्रुत ज्ञातार साखि तव डुंछें ज्योतिराज भारो ् हर्षराज भारो ् खनिम टोल गडछें लुंगुभारो लिखित कायस्थ ङ्याक ... ॥ श्रेयोस्तु ॥ सम्वत् ६२५ कार्तिक शुक्ल प्रतिपद्यां तिथौ शुभमस्तु ॥

***

- **लिखतको किनारमा माटाको छाप दुइटा छन् :**

*एकमा दाँयाबायाँ 'श्रीश्री' बीचमा 'खड्ग' र त्यसमुनि 'सिंह' अंकित ।*

*अर्कोमा दाँयाबाँया 'श्रीश्री' बीचमा 'कलश' अंकित ।*

**स्रोत:**
**राष्ट्रिय ताडपत्र वट्टा-११**
**पत्र १६१ च २१७५**
**भूमि सम्बन्धी तमस्क ताडपत्र-भाग १**
**(सं. २०४०)**

अभिलेख-४

# भक्तपुरमा रायमल्ल र राममल्लको लिखतपत्र

## ने.सं. ६२७

१. ॥ शुभ ॥ श्रीश्रीजय रायमल्लदेव प्रमु ठाकुरस् श्रीश्रीजय राममल्लदेव प्रभु ठाकुरसन् उभय ठाकुरसन पसाद्रपा् बंबु नाम प्रदेसेः धरशिमायाः पाशिमाया द्वया शिमाया पश्चिमतः शहकिपा क्षेत्र शिमाया उत्तर्तः च्छुंचाया क्षेत्र शिमाया पूर्वतश्चः जसतेजया क्षेत्र शि(माया दक्षिणत-)

२. श्चः एतेखा मधे बंबु अर्द्धरोपनिक रोव बापेक ॥ ता क्षेत्र जथादेशकाल प्रवत्तमान संचाराघेन जथ्यसचित शुवर्ण पोसप मालाव् प्रदोघितं मूलमादाय श्वादिनानिवत्तक नाय कि विक्रितं भवंति, वावा यंकु तोल वंखा याकातच्छे गेह वाशिना् ज्ञान नामने प्र(सादिकृतं)

३. साषि खपो षनिम्ह तोल लुंगु भारोस् तव दुच्छे हर्षराज भारोस दृष्ट सम्वत् ६२७ फाल्गुण शुद्धि ४ शुभ ॥

***

लिखतको किनारमा माटाको छाप दुइटा छन् :

*एकमा दायाँबायाँ 'श्री श्री' बीचमा 'खड्ग' र त्यसमुनि 'सिंह' अंकित ।*

*अर्कोमा दायाँबायाँ 'श्रीश्री' बीचमा 'सिंह' र त्यसमुनि 'मकर युग्म' अंकित ।*

**स्रोत:**

**राष्ट्रिय अभिलेखालय**

**बट्टा- ५१ पत्र ७४९**

**'अभिलेख' पूर्णाङ्क ५ (सं. २०४४)**

अभिलेख- ५

# भक्तपुरमा राजा भुवन मल्लको मृत्यु

## ने.सं. ६३९

सं. ६३९ माघ सु. १० श्रीश्रीभुवन मल्ल दिवंगत दिन ।

**स्रोत:**

**श्रीधनेश्वर राजोपाध्याय:**

**मध्यकालको एउटा 'थ्यासफू'**

**इतिहास प्रकाश- भाग ३ अंक २,**

**पृष्ठ ५६९ (सं. २०१३)**

परिच्छेद-५
# रत्न मल्लको अधीनमा ललितपुर

नेपाल मण्डलको सार्वभौम अधिराज रत्न मल्ल सावित गर्ने एउटा महत्त्वपूर्ण घटनाक्रम हो ललितपुर नगरमा रत्न मल्लको आधिपत्य । कान्तिपुरमा राजधानी स्थापित गरी त्यहाँ आफ्नो शासन बलियो हुनेबित्तिकै रत्न मल्लले ललितपुरमाथि आँखा गाडे । त्यहाँ भक्तपुरको शासन सत्तालाई हटाई कान्तिपुरको सत्ता कायम गर्न उनी सफल भए ने.सं. ६१५ मा (सं.१५५२) । यसो गर्दा शुरुमा त उनले पारम्परिक 'त्रि-पुर राजकुल' कै ठाकुरहरूको नेतृत्व गरी ललितपुरमाथि आफ्नो सर्वाधिकार स्थापित गरेका थिए । यसबाट ललितपुरमा राय मल्लको मात्र अधिकार छुटेको भन्ने सिद्ध गर्दछ ।

रत्न मल्ललाई यस अभियानमा सहायता गर्ने 'त्रि-पुर राजकुल' का अन्य सदस्यहरूमा उनका भाइ रण मल्लको भूमिका प्रमुख रहेको पाइन्छ । त्यसमा भानिज भीम मल्ल पनि सरिक भएका थिए । एक जना भाइ अरिमल्ल त पहिलेदेखि नै रत्न मल्लका साथमा छँदै थिए । यस प्रकार रत्न मल्ल, अरि मल्ल, रण मल्ल र भीम मल्ल गरी चौभय शासनको केन्द्र भएको 'त्रिपुर-राजकुल' कै अधीनता स्वीकार गरी ललितपुरका महापात्रहरूले संयुक्त रूपमा ने.सं. ६१५ को (सं. १५५२) जेठ महिनामा एउटा सन्धिपत्र गरे । त्यसरी सन्धि भएको स्वर्णपत्र एउटा पशुपतिमा र अर्को चाँगुनारायणको भण्डारमा राखिएका छन् । नेपालका प्रसिद्ध दुई देवस्थलमा एउटै व्यहोरामा उपर्युक्त सन्धिका प्रतिहरू पाइएकाले यसबाट त्यतिखेरको राजनैतिक प्रतिबद्धता व्यक्त गर्ने स्वरूपको बोध हुन्छ ।

रत्न मल्लको पछि लाग्नुमा रण मल्लको पनि समान स्वार्थ रहेको छ । रत्न मल्लले तात्कालिक प्रमुख व्यापारकेन्द्र 'काष्ठमण्डप' महानगरमा आफ्नो अधिकार गरे जस्तै अर्को पहाडी व्यापारकेन्द्र 'बनेपा' मा गएर त्यहाँ आफ्नो मात्र एकाधिकार गर्ने दाउ रणमल्ल खोज्दै थिए । यस काममा उनी माहिला दाज्यू रत्न मल्लको सहयोग, प्रत्यक्ष वा परोक्ष रूपमा भए पनि पाउने अभिप्रायले जेठा दाजू राय मल्लसित बिग्रह गर्न तैयार भए । अर्को भाइ राम मल्ल भने शुरुमा राय मल्लकै पक्षधर देखिएतापनि पछिबाट उनी पनि रत्न मल्लको पक्षमा आएर ललितपुरमा संयुक्त शासनको नयाँ संरचनामा सरिक भए । यस प्रकार ललितपुरको अभियानमा जेठा दाजू राय मल्लको विरुद्ध सबै भाइहरू एक गोल भएर कान्तिपुरलाई नै नेपाल मण्डलको 'शासन केन्द्र' स्वीकार गरे । यसबाट रत्न मल्लको राजनेतृत्व सर्वोपरि रहेको कुरा सिद्ध हुन्छ ।

उपर्युक्त सन्धिपत्रमा राय मल्ल र उनको पक्षलाई बाहेक गरी अरू भाइहरू एकगोल

भएको व्यहोरा यसरी व्यक्त गरिएको छ :

*"श्रीत्रिपुर राजकुल श्रीश्रीजय रत्न मल्ल देव प्रभु ठाकुरत्वं, श्रीश्रीजय रण मल्लदेव प्रभु ठाकुरत्वं, श्रीश्रीजय अरि मल्लदेव प्रभु ठाकुरत्वं, श्रीश्रीजय भीम मल्लदेव प्रभु ठाकुरत्वं, थ्वते ठाकुरत्वं मन मेलरपं, थव थवस साखोन साख पुटान पुत, निस्तरपेया आत्मशिर दिव्य थिरारपा अथिभाषा थ्वते-*

*थ्वस चवभय थाकुरत्वं एकान शत्रु एकान मित्र याङन परलंम तस्य शिखा संसर्गन सून्हु विन्हुस अर्थ सामर्थन, थिथि तुस्यं एक अलापन, थिथि महनरपं, काल हङन, यने पस्तननो, अव थिथि मानान्ति समथन याङ क्याङ तको, यं स्वदेश आदिन चोस्यं कास्यं थमथम चचरपं तया राजपातं आदिन थेथे ० घूचावाडि, इसू थिसू मयास्यं यनेपस्तननो-*

*श्रीश्रीजय राय मल्लदेव ददा, श्रीश्री जय राम मल्लदेव फूकिजया स्वछिं एकंगणसं थेहरपं, थिथि त्या बू दयक मथने पस्तननो जाव कोलाक, छू भावरपे जुरसनो थ्वस चवभय ठाकुरत्वं समथ याङनतु, याचक्याच याय पस्तननो यं स्वदेश प्रजाया थदानकोदान, न्हथे फूकोदानस, वादान तोडतं प्रसन जुया पस्तननो श्रीश्रीराजकुलस, श्रीपात्र कुलादि सू छिसकेनो गङ वोफाङ दाग्वन, क्यंग्वनो, मोमिसा दूव्वाक्वनो, पुलजोवनो, काय मतेव ॥*

**[सन्धिपत्रको पूर्णपाठ परिशिष्ट खण्डमा दिइएको छ । ]**

अभिलेख संख्या-१

[श्रीत्रिपुर राजकुलका रत्न मल्लदेव, रण मल्लदेव, अरि मल्लदेव र भीम मल्लदेव ठाकुरहरू एक आपसमा मिलेर आफ्ना आफ्ना सन्तान दरसन्तान पुस्तौं पुस्तासंम चलाउने गरी वाचावन्धन गरिएको व्यहोरा -

यी चौभय ठाकुरहरू एकानी शत्रु एकानी मित्र गरी पछि परन्तुसम्म 'शिखा संसर्ग' सामदान अर्थ सामर्थ परस्पर विचार गरी एकतर्फी मात्र नभएर एक अर्काको मान्यता राखेर कान्तिपुर लगायत तीनै देशका भूभागहरू आआफूले भोग चलन गरिराखेका राजपाट (राज्यको अधिकारक्षेत्र) परस्परमा तलमाथि यताउति नगर्नको निमित्त दाजू राय मल्ल र भाइ राम मल्लको लागि भाग वण्डामा दिएको कुरामा खलल पुग्ने गरी काम नगर्ने व्यवस्था बाँधी यी चौभय ठाकुरहरूको समर्थन भएर कान्तिपुर लगायत तीनै देशका प्रजाहरूलाई थदान-कोदान वादान् छाडेर निगाह गरियो। यसमा राजकुल (त्रिपुर) र पात्रकुलमा कसैले पनि मर्यादा तोडेर काम नगर्नू । ]

यसरी भक्तपुरको क्षेत्रमा राय मल्ललाई सीमित राखेर नेपाल मण्डलको राजधानी अर्थात् शासकीय केन्द्र स्वरूप रहेका कान्तिपुरको अधीनमा ललितपुर समाहित भएको घोषणा यस सन्धिपत्रमा गरिएको छ। ललितपुरका तत्कालीन सामन्त शासक महापात्रहरू सबैले यस

सन्धिपत्रमा आ-आफ्ना संयुक्त प्रतिबद्धता यसरी प्रकट गरेका छन् :

*"प्रतापसिंह भारोत्वं् अमृतसिंह भारोत्वं् कुसुमसिंह भारोत्वं् राघवसिंह भारोत्वं् हरषपाल भारोत्वं् जगतपाल भारोत्वं प्रमुखन मणिगलस् दूवने दिक्वसवो लभिसवो मतोयकं मनिग्लया् दुङन पिवने दिक्वतों् गुपतन प्रकतन सरण विस्यसंथेहरपं् वपथंङ यंने मतेव् थेथें समथन लभिसवो् तोकोनतु तेव् थेथे स्यंङ एक अलापन काल हने माल्व-"*

[प्रतापसिंह, अमृतसिंह, कुसुमसिंह, राघवसिंह, हर्षपाल र जगतपाल समेत मणिग्लमा रहेका प्रमुख सामन्तहरूले (महापात्रहरूले) गुप्त रूपमा अथवा प्रकट रूपमा कसैलाई शरण दिएर उपर्युक्त चौभय ठाकुरहरूको विरूद्धमा नलागी एकमत भएर रहनुपर्नेछ ।]

यस सन्धिपत्रमा ललितपुरका महापात्रहरू सबैको समर्थन गराउनुको तात्पर्य यहाँनिर विचारणीय छ । त्यहाँ तात्कालिक सप्त कुटुम्वज महापात्रहरूमा विद्यमान ६ जनाको संयुक्त प्रशासन ललितपुरमा कायम रहेको र तिनीहरूले रत्न मल्लको नेतृत्वमा रहेको 'त्रिपुर-राजकुल' उपर आफन्त सेवा अथवा समर्थन व्यक्त गरेका छन् । यस प्रकार ललितपुरलाई कान्तिपुरको अधीनवर्ती गराइएको कुरा नै सिद्ध हुन्छ । अर्को शब्दमा, रत्न मल्लको अधीनमा ललितपुरका यी महापात्रहरू बसेका हुन् भन्न सकिन्छ । यसबाट परोक्ष रूपमा के कुराको संकेत पनि पाइन्छ भने रत्न मल्लले कान्तिपुरका महापात्रहरूको उन्मूलन गर्नमा ललितपुरका महापात्रहरूको पनि मद्दत लिएका थिए । त्यसैले, उनीहरूको स्थिति साविक बमोजिम कायम राखी, मात्र भक्तपुरको नियन्त्रणबाट पृथक राखेका थिए ।

रत्न मल्लले हरसिद्धिबाट वर पाएर कान्तिपुरमा राजधानी सारी राज्य गरेको कुरा प्रख्यापन गराए जस्तै ललितपुरका एकथरि महापात्रहरूले पनि 'हरसिद्धि वरलब्ध प्रसादित' भनेर विरूद धारण गरेकाले रत्न मल्लको पछाडि ललितपुरका सामन्त महापात्रहरूको समर्थन रहेको संकेत मिल्छ ।

यस प्रकार रत्न मल्लले ललितपुरमा भक्तपुरको (राय मल्लको) अधिकार छुटाउन ने.सं. ६१५ मा (सं. १५५२) अरू भाइहरूसंग एउटा सन्धिपत्र गराएका थिए तापनि यस सन्धिको सर्वात्मना कार्यान्वयनमा बाधा पर्दै रहेको कुराको आभास पनि त्यतिखेर नै पाइएको छ । यसको निमित्त समकालिक लिखत **'साद्यन्त कोशसार'** ग्रन्थको पुष्पिकालाई अघि सार्न सकिन्छ । ने.सं. ६२० मा (सं. १५५७) लेखिएको उपर्युक्त ग्रन्थ केसर पुस्तकालयमा भेटिनाले रत्न मल्लको ललितपुर खाने योजना तत्कालै लागू हुन त्यति सहज नभएको कुरामा पुष्टि मिल्छ । अनि त्यतिखेर ललितपुरमाथिको सार्वभौम सत्तामा भक्तपुरबाट राय मल्ल पनि कायमै रहेको देखिन्छ :

*ज्येष्ठः श्रीराय मल्ल नृपतिर्नेपाल चूडामणि-*
*स्तन्मध्योनुज कंस केशव वली श्रीरत्न मल्ल प्रभुः ।*
*कानिष्ठो रण मल्लदेव सुकृती कारुण्य रत्नाकर-*
*स्तत्तेषां वर भागीनेय विदितः श्रीभीम मल्लो नृपः ॥*

*तेषां नृपाणां विजय राज्ये ॥ अत्र हि ॥*

*पात्रोत्तमे सप्त कुटुंव मध्ये प्रधानतः श्रीत्रिभय प्रमुख्यः । अपि च ॥*

*श्रीमणिकुमारस्य पदाम्भोजैक षट्पदः*

*जीयात्कुसुम सिंहोयं कीर्तिसिंह सुतः सुधीः ॥*

*विन्दु युग्म रसे याते श्रीनैपालिक वत्सरे*

*वैशाखस्य शिते पक्षे द्वितीयायां प्रयत्नतः ॥*

**स्रोतः**

**केसर पुस्तकालय**

**साद्यन्त कोशसार, संख्या २३४**

**इतिहास संशोधनको प्रमाण-प्रमेय पृष्ठ ६७**

**(संशोधन मण्डल) सं. २०१९**

[जेठा राय मल्ल नेपालका राजाहरूमा प्रमुख भए, माहिला रत्नमल्ल कंस जस्ता वलवान् कान्छा रण मल्ल करुणाका खानी र तिनीहरूका असल भानिज भीम मल्ल राजा भए ।

यति राजाहरूका विजय राज्यमा

यहाँ (ललितपुरमा) पात्रहरूमा उत्तम सप्तकुटुम्वमध्ये मुख्य त्रिभय पात्रहरू भए ।

त्यसमा पनि-

श्रीमणिकुमारको पाउ रूपी कमलको भ्रमर कीर्तिसिंहको छोरा कुसुमसिंह भए। ने.सं. ६२० (सं. १५५७) वैशाख शुक्ल द्वितीया ।]

यसरी ललितपुरमा रत्न मल्लको प्रभाव फैलिएता पनि त्यहाँ जेठा राय मल्ल सहित भाइ रण मल्ल र भानिज भीममल्लहरूको संयुक्त शासन कायमै रहेको कुरा पुष्टि गर्न सकिन्छ । यक्ष मल्लको मृत्युपछि खडा भएको यो चौभय शासनको निरन्तरता ललितपुरमा ने.सं. ६२० सम्म देखिएको छ । त्यहाँको आन्तरिक प्रशासनमा चाहिँ महापात्रहरूको भूमिका नै स्पष्टतया देखापर्छ । लगभग यही अवस्था राय मल्ल जीवित रहेसम्म ललितपुरमा कायम रहेको आभास पाइन्छ । ने.सं. ६३० मा भक्तपुरमा राय मल्लको मृत्यु भयो । उनको दाह संस्कार गर्न पनि ललितपुरको वाग्मती किनार शंख मूलमा नै ल्याएका थिए ।

राय मल्लको मृत्यु भएपछि अर्को भाइ राम मल्ललाई ललितपुरको संयुक्त शासनमा सरिक गराइए । शायद, राय मल्लको प्रतिष्ठापन उनीबाट भएको होला । तर, त्यतिखेर भानिज भीम मल्ल भने रत्न मल्लको शासन मण्डलमा देखा पर्दैन । यस प्रकार ललितपुरमा रत्न मल्ल, रणमल्ल र राम मल्ल गरी तीनजनाको मात्र संयुक्त शासन ने.सं. ६३५ (सं. १५७२) को जेष्ठ

**महिनासम्म** देखापरेको छ। यस सन्दर्भमा हामीलाई ललितपुरको इलाका कीर्तिपुरमा चिलंचो **चैत्य** स्थापना गर्दा महापात्र जगतपाल वर्माको परिवारले राखेको अभिलेख यहाँनिर पठनीय **हुन्छ** :

*'वर्षे नेपाल याते शर गुण रसके ज्येष्ठ शुक्लाष्टमीके*

*नक्षत्रे पूर्व फाल्गुन्य सहित इह वा वज्रयोगे विशण्णः।*

*वारेचान्द्रे वृषष्ठे पुरनरपि तपने सिंह राशिस्थचन्द्रे*

*पञ्चश्री बुद्ध चैत्य प्रथित वर (शिरः) स्वर्ण्ण छत्रावरोहः॥*

*स्वस्तिश्री ललितपत्तने॥ श्रीमत्पशुपति चरणकमल सेवित श्रीश्रीमानेश्वरी वरलब्ध प्रसादित परम भट्टारक परमेश्वर महाराजाधिराज श्रीश्रीजयरत्न मल्ल देवस्य॥ श्रीश्रीजय रण मल्ल देवस्य॥ श्रीश्रीजय राम मल्ल देवस्य विजय राज्ये॥*

*श्रीश्रीमनिगलके श्रीश्रीमदार्यावलोकितेश्वर चरणपंकज सेवित .... श्रीमत् श्रीश्रीजल मंडप थल चैत्य पंच तथागत सेवा तत्पर श्रीमत् श्रीश्री (जतलं) श्रीहरसिद्धि वरलब्धं प्रसादित .... श्रीश्री इन्द्रायणी व्याघ्रेश्वर पूजन चित्त .... प्रधान महापात्र असुर नारायण श्री(ज)य जगत्पाल.... "*

**- कीर्तिपुर, चिलंचो चैत्यको**

**जगतपाल वर्माको अभिलेखवाट (ने.सं. ६३५)**

**[अभिलेखको विस्तृत पाठ परिशिष्ट खण्ड : अभिलेख संख्या-२]**

[ने.सं. ६३५ जेष्ठ शुक्ल अष्टमी नक्षत्र पूर्व फाल्गुनी वज्रयोग सोमवार चन्द्रमा वृष राशिबाट सिंह राशिमा वस्दा यो पञ्चवुद्धको चैत्यमा सुनको छत्र राखियो।

स्वस्तिश्री ललितपत्तन॥ श्रीपशुपतिको पाउ रूपी कलमको सेवा गरेका मानेश्वरीबाट वर प्राप्त गरेका भट्टारक परमेश्वर महाराजाधिराज श्रीश्रीजय रत्न मल्ल देव॥ श्रीश्री जय रणमल्ल देव॥ श्रीश्री जय राम मल्ल देवको विजय राज्यमा॥

श्रीमणिगलमा श्रीमद् आर्यावलोकितेश्वरको चरण रूपी कमलको सेवा गरेका ... श्रीश्रीजलमण्डप चैत्य पंच तथागतहरूको सेवामा तैयार रहेको श्रीश्रीहरसिद्धिवाट वर प्राप्त गरेका ..... श्री इन्द्रायणी व्याघ्रेश्वर (वाघ भैरव) पूजामा चित्त लगाएका प्रधान महापात्र असुर नारायण जगतपाल ....]

परन्तु, यसै वर्ष ने.सं. ६३५ (सं. १५७२) को आखिरीताका कार्तिक महिनामा कीर्तिपुरकै वाघभैरवको मन्दिर जीर्णोद्धार गरी राखेको यिनै महापात्र जगतपालको अभिलेखमा भने ललितपुरमा शासन गर्ने 'त्रि-पुर राजकुल' का कुनै राजाको पनि नाम लिइएको छैन।[१] यो अचम्मको स्थिति कसरी विकसित भयो त्यसको ऐतिहासिक निर्क्योल हुन सकेको छैन। शायद, यतिखेर रत्नमल्ल आफ्ना भाइहरूलाई ललितपुरको शासन व्यवस्थाबाट हटाउने प्रपञ्चमा ठूलो **संघर्ष** गरिराखेका थिए। त्यसै हुँदा, यहां रत्न मल्लको पनि उल्लेख गरिएको छैन।

---

१. परिशिष्ट खण्ड : अभिलेख संख्या- ३

महापात्र जगतपालको उपर्युक्त अभिलेखको समयभन्दा लगभग तीन महिना अगाडि ने.सं. ६३५ आषाढ महिनामा ललितपुरमा रत्न मल्ल मात्र एकल शासकको रूपमा उत्रेको पाइन्छ। त्यतिखेर उनले अरू भाइहरूलाई ललितपुरमा संयुक्त शासनबाट हटक गरिसकेको छनक भेटिन्छ। यसको निमित्त ललितपुर गुइतः वहिलमा रहेको एउटा अभिलेखलाई देखाउन सकिन्छ। सो अभिलेखको सम्बद्ध अंश तल प्रस्तुत गरिएको छः

*"नेपालाधिपति राजाधिराज परमेश्वर परम भट्टारक श्रीश्रीजय रत्न मल्ल देव प्रभु ठाकुरस विजय राज्ये॥ श्रीललितापुरी नगरे स एव स्थाने श्रीगुस्तल महाविहारी मूलचोक निवासित ज्वजमान व्रम्हचर्य भिक्षु जखराजजुस भार्या माणमथि भरिसः थ्वस स्त्री पुरुषस पुत्र दिवंगतः विजय सिंह भारोयात निमित्यर्थेन श्रीमत् श्रीश्री महंकाल देव दयेका यथोशोक्त वहिरिस जथाजोग्य याङ थापरपा जुरो... सम्बत् ६३५ आषाढ कृष्ण चतुर्दशी अंगार वासरे ॥*

**- पाटन गुइतः वहिलको**

**रत्नमल्लका पालाको अभिलेखबाट**

**[परिशिष्ट खण्ड : अभिलेख संख्या-४]**

[नेपालका अधिपति राजाधिराज परमेश्वर परम भट्टारक श्रीश्रीजय रत्न मल्लदेव प्रभु ठाकुरको विजय राज्यमा ॥ श्री ललितपुर नगरमा सोही स्थान श्रीगुइतः महाविहार मूलचोक वस्ने जजमान भिक्षु जखराज र पत्नी माणमथि यी दम्पतिका पुत्र विजयसिंह दिवंगत भएकोले उसको नाममा श्रीमहाकाल देवता यस वहिलमा स्थापना गरियो। .... ने.सं. ६३५ आषाढ कृष्ण चर्तुदशी मंगलवार।]

यसैगरी, रत्न मल्लको एकल शासन देखिने हालसम्मको अन्तिम अभिलेख ललितपुर, गा-वहालमा न्हूवहालभित्र भेटिएको छ। ने.सं. ६३९ (सं. १५७६) को यस अभिलेखको शिलापत्र धेरै ठाउमा फुटेका हुँदा समग्र पढ्न सकिंदैन। यसको पढ्न सकिने माथिल्लो र तल्लो भागमा रहेका आवश्यक अंश तल उतारिएको छः

*"स्वस्तिश्रीमत् नेपाल मण्डले रा(जा)धिराज परम भट्टारक श्रीश्रीजय रत्न मल्ल (देव)स्य विजय रा(ज्ये) श्री मणिग्वल....*

*(पुछारमा)*

*॥श्रेयोस्तु सम्वत् ६३९ .... (शु)क्ल तृतीयायां तिथौ अनुराढ नक्षत्रे सौभाग्य योगे (वृहस्पति) वासरे। थ्व कुन्हु श्रीबु विहार श्रीमत् श्रीश्री शाक्य मुनि क्वा (च पाल) भट्टारकाय दोहरपा जुरो ॥"*

**- पाटन, गा-वहालको**

**रत्न मल्लका पालाको अभिलेखबाट**

**[परिशिष्ट खण्ड : अभिलेख संख्या-५]**

अर्को वर्ष ने.सं. ६४० (सं. १५७७) भदौमा रत्न मल्लको मृत्यु भएको छ। यसरी ने.सं. ६३५ देखि ६४० सम्म (सं. १५७२-१५७७) ललितपुरमा रत्न मल्लको एकल सार्वभौम सत्ता प्रतिष्ठापित भएको कुरा यहाँनेर स्पष्ट हुन्छ।

# परिशिष्ट खण्ड

अभिलेख-१

## त्रिपुर राजकुलका रत्न मल्ल + रण मल्ल + अरि मल्ल + भीम मल्लहरूको संयुक्त शासन स्थापित सन्धिपत्र (पशुपतिको)

## नेै.सं. ६१८

१ ॐ नम : श्रीश्रीश्री पशुपतये ॥
प्रमुख नृप गणाद्याश्चागतास्ते त्वदग्रे
सकल वचनमेकी स्वीकृतं सत्यमुक्तं ।
यदि कथित विलोपात्पापलब्धा भवेयु-
र्व्विदित पशुपतेस्त्वं साखिभूतस्त्वमेव ॥

श्रीश्रीश्री पशुपति भट्टारकस्य, श्रीश्रीश्री उभय भैरवस्य अग्रस, धर्म शिलास, थिरारपा, तंव शासन तारङा भाषा थ्वते जूरो । श्री त्रिपुर राजकुल श्रीश्रीजय रत्न मल्लदेव प्रभु ठाकुरत्वं, श्रीश्रीजय रण मल्लदेव प्रभु ठाकुरत्वं, श्रीश्री जय अर्रि मल्लदेव, प्रभु ठाकुरतों, श्रीश्री जय भीम मल्ल देव प्रभु ठाकुरत्वं, थ्वते ठाकुरत्वं, मन मेलरपं, थव थवस साखोन साख पुटान पूत र्निस्तरपेया, आत्म शिर, दिव्य थिरारपा अथिभाषा थ्वते : थ्वस चवभय ठाकुरत्वं एकान शत्रु एकान मित्र याङन परलंम तस्यं, शि.खा. संसर्गन सुन्हुं विन्हुस अर्थ सामर्थन थिथि तुस्यं एक अलापन, थिथि महनरपं, काल हङन, यने पस्तननो० अव थिथि मानान्ति, समथन याङ क्याङ तको, यं स्वदेश आदिन चोस्य कास्यं, थमथम चचरपतया, राजपातआदिन थेथे घुचा वाडी, इसुथिसु मयास्यं, यनेपस्तननो०

श्रीश्री जय राय मल्लदेव ददा, श्रीश्री जय राम मल्लदेव फुकिंजया स्वं छिं, एकंगणस थेहरपं थिथि त्यावु दयकं, मथने पस्तननो, जाव कोलाक, छु भावरपे जुरसनो, थ्वस चवभय ठाकुरत्वं, समथयाङनतु, याचक्याच याय पस्तननो यं स्वदेश प्रजाया थदान कोदान, न्हथे फुकोदानस, वादान त्वडतं प्रसन जुया पस्तननो, श्रीश्री राजकुलस, श्रीभात्रकुलादि सु छिसकेनो, गडवोभाड दाग्वन, क्यंग्वनों, मो मिसा, दुब्वाक्वनों, पुल जोवनो, काय मतेव,

प्रतापसिंह भारोत्वं, अमृतसिंह भारोतों, कुसुमसिंह भारोतों, राघवसिंह भारोत्वं, हरषपाल भारोतों, जगतपाल भारोत्वं, प्रमुखन मनिगलस, दुवने दिक्चसवो, लभिसवो, मतोयकं, मणिग्लया दुङन पिवने, दिक्वतों, गुपतनो प्रकतनो, सरण विस्यं, संथेहरपं, वपथंङ यंनेमतेव, थेथे समथन, लभिसवो, तोकोन तु तेव, थेथेस्यंङ एक अलापन कालहने माल्व,

श्रीश्री ओसपोल, चवभय थाकुरस्यं, थ्व सासन, लोपयाक्वम्हतो, लिस्यं, थ्व नेमस, थाचकं अप्रसन जुकाले, थ्व देवस, ब्राम्हण, भिक्षुस, सत्या याको हत्यानो ०, निग्रह हालकोङ, लिप्तरपो, मनिग्ल, त्रिभय वाहार आदिन, थे चोस्यंतको भाषा, मनिस्तरपं कालें, थे हाल तको हत्यानो, निग्रह हालतकोनो, लिप्तरपो जूरो० थे चोस्यंतको मनिस्तरपं, लोपयाकाले, पशुपतित्वं फोन्हरपो, पञ्च महापातक लाक्व, निसख जूयमाल्व, थ्वते देवस निग्रह, निस्तरपंयंकाले,

अनिग्रह उत्तोत्तर ˎ जनधन ˎ राजलक्ष्मी संतति संतान . वृद्धि जुय माल्व जूरो ॥ जगतराज भारो स्वच्छिं आदिन ˎ चवभय थाकूरस ˎ दण्ड कुबुस्यं ˎ जूको ˎ सेष्टन ˎ थ्वते भाषा ˎ देड जुव सोस्यं ˎ यंने माल ˎ थ्व चोस्य तको ˎ लोदो वोदो याङन ˎ अदेद याङसंकालेसं ग्वम्हसके थ्वते हालं तको निग्रहनो : हत्यानो लिप्तरपो जूरो थ्वते भाषाया साक्षी श्रीश्रीश्री चण्डपितामहत्वं ॥

श्रेयोऽस्तु नेपालिक संवत्सर ६१५ ज्येष्ठ कृष्ण त्रयोदश्यां तिथौ ˎ रोहिणी नक्षत्रे ˎ गण्ड योगे शनैश्चर वासरे तस्मिन्दिने ˎ शुभमस्तु सर्व्वदा ॥

थ्व सासन तारङान ˎ मनिगलया ˎ घुचावाडी याङन अप्रसन जुयमतेव ˎ ॥

**[यस ताम्रपत्रको शिरानदेखि दाँया किनार हुँदै घेरामा ३ तिर थप कुँदिएको व्यहोरा-]**

१ १ शुभ ॥ श्रीश्री जय राय मल्ल देव ठाकुरस ˎ श्रीश्रीजयराम मल्लदेव ठाकुरस ˎ पुतान पूत विराज याङनं ˎ पिवने विज्याङास ˎ श्रीश्रीजयरत्न मल्ल देवथाकुरतों ˎ श्रीरण मल्लदेव ठाकुरतों ˎ आदिन त्रिपुर राजकुलस विज्याक्व ठाकुरलोक समस्तं मनिग्ल फमपिं ˎ भारोतों सकल ˎ थ्व तंव शासन स जोको समस्तं ˎ समथ जूस्य (ए)क अलाप याङा ˎ समाज स मङहा विज्याङास ˎ थ्व तंव शासनस दुं विस्यं निस्तरपेया ˎ छारङ भाषा ˎ थ्वते अवनली थ्व तंव शासनस ˎ जोक्वस्यं ˎ थिथि महङा ˎ भसोवल दयकं ˎ आदिन थ्व तंव शासनस ˎ जोको ˎ समस्तां ˎ अथि ˎ क्रियालाच ˎ निस्तरपं ˎ यने माल्व ˎ थे मनिस्तरपंकाले ˎ थे हाल तको ˎ पापत लिप्तरपो जूरो ˎ शुभ ॥

***

## द्रष्टव्य:

यस अभिलेखको मूल भाग डिल्लीरमण रेग्मीको Medieval Nepal. तेस्रो खण्डमा ˎ (ई. १९६६) मा सर्वप्रथम देवनागरी लिप्यन्तर देखापरेको थियो । तर, त्यसको पाठ नै शुद्ध गरी पढिएको थिएन । त्यसपछि डा. गोविन्द टण्डनले त्रि.वि. मा पशुपति सम्बन्धी विद्यावारिधि गर्दा सं. २०४६ मा यस अभिलेखको मूल भाग र थप खण्ड समेतको देवनागरी उतार दिने कोशिस भयो । यसमा स्व. श्रीधनवज्र वज्राचार्यको समेत सहयोगले गर्दा पहिलेभन्दा बढता मूल भागको पाठ पढ्न सफल भएतापनि खास ताम्रपत्र नै दुई टुक्रा भएको कारणले सो खण्डित टुक्राहरू मिलाई ताम्रपत्रको शिरानदेखि दाँया किनार हुँदै घेरामा ३ तिर थप कुँदिएको व्यहोरा सिलसिलावद्ध गरी पूरा उतार दिन सकेको थिएन ।

नेपाल-जर्मन हस्तलिखित ग्रन्थ संरक्षण परियोजना अन्तरगत सं. २०५५ मा पशुपति गोस्वराको भण्डारमा दुई टुक्रा भई भाँचिएर रहेको यस ताम्रपत्रको सूक्ष्म छवि चित्र (Micro film) तयार भएर राष्ट्रिय अभिलेखालय रीलसंख्या PN 4/25 मा छायाङ्कित भइसकेकोले त्यसको पाठक-छापा (Readers print) लिएर यहाँ शुद्ध र पूर्ण देवनागरी लिप्यन्तर पाठ दिइएको छ । साथै, खण्डितं अभिलेखका दुवै टुक्रा जोडी नेपाल भाषा र लिपिमा मूल पाठ समेत दुरुस्त गरी पहिलोपल्ट प्रस्तुत गरिएको छ ।

यस्तै व्यहोराको अर्को आधिकारिक ताम्रपत्र उसैवखत चागुनारायण थानमा पनि राखिएको थियो । त्यहाँ रहेको प्रतिमा स्वभाविकरूपले 'गरूड नारायण' लाई संवोधन गरी अन्य मूल व्यहोराको पाठ समान छ । तर, थपिएको व्यहोरा भने केही फरक पाइन्छ । सो अभिलेखको देवनागरी लिप्यन्तर मोहन प्रसाद खनालद्वारा 'चाँगू नारायणको ऐतिहासिक सामग्री' संख्या ४९ त्रि.वि. CNAS वाट सं. २०४० मा प्रकाशित भएको छ । तर, त्यसको सकल अभिलेख अथवा प्रष्ट मूलपाठ नै अनुपलब्ध हुँदा त्यसको शुद्ध पाठ निर्णय हुनसकेको देखिँदैन । - लेखक

अभिलेख - २

# रत्न मल्ल + रणमल्ल + राममल्लको संयुक्त शासनमा महापात्र जगतपाल वर्माको कीर्तिपुर, चिलंचो चैत्य अभिलेख ने.सं. ६३५ (जेठ)

**(आंशिक रुपमा प्रस्तुत)**

वर्षे नेपाल याते शरगुण रसके ज्येष्ठ शुक्लाष्टमीके नक्षत्रे पूर्व फाल्गुन्य (सहित)

(इह वा) वज्र योगे विश(ण्ण:) वारे चान्द्रे वृषष्ठे पुनरपि तपने सिंह राशिस्थ चन्द्रे, पञ्चश्री बुद्ध चैत्य प्रथित वर (शिर:)

(स्वर्ण्ण छत्रावरोह: ॥) श्रेयोऽस्तु॥ सम्वत् ६३५ फाल्गुन शुक्ल प्रतिपद्यायां तिथौ पूर्वभद्र नक्षत्रे

शिव प्र साध्य योगे वुध वासरे थ्व दिन कोन्हु पाद स्थापना ।

फाल्गुण शुक्ल दशम्यायां तिथौ आर्द्रा नक्षत्रे सौभाग्य योगे शुक्ल वासरे थ्व कोहु द्वार स्थापन ॥०॥

वैशाख शुक्ल द्वितीया प्र. तृतीयायां तिथौ कृतिक प्र. रोहिनि नक्षत्रे शोभन योगे सोम वासरे थ्व दिन कोन्हु येलशि सोङा पिवखा देवस्थापन॥०॥

ज्येष्ठ शुक्ल सप्तमी प्र. अष्ट(मी) आदित्य वासरे थ्व कोन्हु अग्निस्थापन ॥

थ्व न संति प्रतिष्ठा ॥ थ्वन संति रात्रिक्रिया॥ थ्वन संति पूर्णा दिन॥

स्वस्तिश्री ललित पत्तने॥ श्रीश्रीमत्पशुपति चरण कमल सेवित श्रीश्रीमानेश्वरी वरलब्ध प्रसादित परम भट्टारक परमेश्वर महाराजाधिराज श्रीश्रीजय रत्न मल्ल देवस्य॥ श्रीश्रीजय रण मल्ल देवस्य॥ श्रीश्रीजय राम मल्ल देवस्य विजय राज्ये॥ ॥

श्रीश्रीमानीगलकें ॥ श्रीमत् श्रीश्रीमदार्यावलोकितेश्वर चरण पंकज सेवित श्रीश्रीमत् श्री (श्री मणिकुमार चरण सेवित) ॥ श्रीमत् श्रीश्री जल मंडपस्थल चैत्य पंच तथागत सेवा तत्पर श्रीमत् श्रीश्री चक्र अर्चन श्रीमत् श्रीश्रीहरसिद्धि वरलब्ध प्रसादित श्रीमत् श्रीश्री.... महावीर.... श्रीमत् श्रीश्रीइन्द्रायणी व्याघ्रेश्वर पूजननिरत तथा च श्रीमत् श्रीश्रीमानेश्वरीचरण ... श्रीश्री सशक्ति योगाम्वराराधन तत्परमिति श्रीमत् श्रीश्री चक्र संवरवंज्रवाराही ... (भग्नरा)ज स्थापनाचार्य लुब्धराज गजांकूश शरणागत राज वज्रपंजर ...... सप्त कुटुवज प्रधान महापात्र असुर नारायण श्री(ज)य जगत्पाल वर्मन॥ तेस्यात्मज (असुर नारायण) श्री जय रक्षपाल (वर्मनस्य पत्नी हेरलक्ष्मी ठकुरिणीसन अमृत लक्ष्मी) ठकुरिणी सन ...

**धनवज्र वज्राचार्यको पाठका आधारमा**

**सन्दर्भ ग्रन्थ:**

**मध्यकालका अभिलेख**

CNAS (सं. २०५६)

अभिलेख-३

# महापात्र श्रीजगतपाल वर्माको कीर्तिपुर वाघभैरवको अभिलेख ने.सं. ६३५ (कार्तिक)

(१) ꣼ ...... समोधीर सर्व्वगुण...............

(२) ......पतिरभूत्क्षीराम्वुधो चन्द्रवत्.......

(३) ......मित तेजसा पुरवरं शौधावली राजितं श्रीमत्......

(४) ......नाना कांचन कुंभरस्मि रचना देदीप्यमानाम्वर तत्ते......

(५) ......शंकरात्मन : ॥ तदा व्याघ्रेश्वरस्यास्मिं भग्न वेश्म शिरसुच ॥ चूलिकोत्था......

(६) ......हेमास्त्रयो घटा: । अहोरात्रेण यज्ञेन विधिरस्य समर्पित: । सपत्नीक

(७) ......तेन जगत्पालेन वर्मणा ॥ जिर्न्नोधार विधानेस्मिं जीतदेवो द्विजोत्तम......

(८) ......चैव माधवोऽपि क्रिया द्विज:॥ दैवज्ञ कथितो बाबुराचार्यो: .... धायस्तथा

(९) ......क महावि.... कर्म्म वेद विद्या विचक्षणैं ॥ श्रीमत्जगत्पाल वर्म्म

(१०) न्नीको महायशा:॥ यजमानो विधानस्य वेदोक्तस्य समन्तत:॥ पुण्ये

(११) (मानेन) राष्ट्रे भवतु मंगलं॥ सपत्नीको जगत्पालो भुक्ति मुक्तिं च...

(१२) ......वर्षे नेपाल जाते शर गुण रसके कार्तिके कृष्ण (प) क्षाय्यां बी-

(१३) दिति(क)थित.... मेंच योग (शुभाग्य) बारेचन्द्रस्य कर्क्कस्थित हिमकिर....

(१४) ......कस्थे....च....सूर्य्यश्रीमत् व्याघ्रेश.... मति सुभग स्वर्ण कुंभो....

(१५) ......॥०॥ अत: परं नेपाल भाषा॥ श्रेयोऽस्तु॥ संवत् ६३५ कार्तिक

(१६) कृष्णपक्षे चतुर्थ्यायांतिथौ॥ पुनर्वसु नक्षत्रे शुभयोगे सोम वा(सरे)

(१७) वृछ राशिगते सवितरि कर्क्कट राशिगते चन्द्रमसि॥ थ्व दिन क्रोन्हु

(१८) श्रीश्री व्याघ्रेश्वरस्य भट्टारकस्य निवास जिर्न्नोधार, याङा चुलिका (न)

(१९) ......जुडि स्यं वो वेदमन्त्र विधानेन दश कर्म्म .... सम्पूर्ण याङा .... छायाव जुर

(२०) ......॥ थ्वन षुनु न्हवने श्री पिण्डवहार न्हवने .... वीया मत यात याङा नि

(२१) थ्वन संति यन्हं देशस यज्ञ संभार द्रयकं ध्वजायातया उद्देश ओया॥

(२२) थ्वन संति यं स्वदेशसं ध्वजायातनं देश ओयाओ कीतिपुरी वङा॥ थ्वन संति(ध)

(२३) ...... ल कर्म्म याङा॥ अहोरात्र यज्ञ॥ संतिपूर्णा॥ यजमान श्रीमणिग्ल श्रीपिण्ड

(२४) वहार महापात्र श्रीजगत्पाल वर्म्मनस्य यज्मान्नी श्रीरूपलक्ष्मी ठकुरिनीस॥

(२५) पुत्र श्रीरक्षपाल वर्मनस्य पत्नी श्रीहेरलक्ष्मी ठकुरिनीस श्रीअमृत लक्ष्मी (ठ)
(२६) कुरिनीस॥ थ्व सकल पर्ज्यायस कीर्ति याङ्न दयका जुरो॥ प्रोहित श्री
(२७) (यन्हं) सोहलनिम्हं श्रीजितदेवजुत्वं श्रीमाधवदेवजुत्वं उभयस्यं वेद विधान
(२८) (नं) क्रिया याङा यिदिशि बाबु भारो आचार्य श्रीजीवकेश भारो॥ थ्वतेया पुण्येन
(२९) आयु आरोग्य ऐश्वर्य जनधनलक्ष्मी खड्गसिद्धि प्रताप वृद्धिरस्तु॥शुभ॥

**सन्दर्भग्रन्थ:**
**धनवज्र बज्राचार्य-**
**मध्यकालका अभिलेख**
CNAS (सं. २०५६)

**अभिलेख-४**

# रत्न मल्लका पालाको
# पाटन गुइतः बहीको अभिलेख
# ने.सं. ६३५

१ ॐनम: श्रीमहंकालायनम॥

वुध शासन सदा रक्ष(क) पालिक परमार्थ देवाधिदेव नमस्तुते॥ नेपाल वत्छल गते सरमग्नि स्वादे मासे शुचि कृष्ण चतुर्दशि च ऋक्षेऽदितिन्हषन योग युक्ता : भौमेच बारे तद्देवस्थापिता॥ एते पुण्यार्थेन सर्वत्र सुखिनो भवे(त्)।

नेपालाधिपति राजाधिराज परमेश्वर परम भट्टारक श्रीश्रीजय रत्न मल्ल प्रभु ठाकुरस विजय राज्ये॥ श्रीललितापुरि नगरे(स) एव स्थाने श्रीगुस्तल महाविहारी मूलचोक निवासित ज्वजमान ब्रम्हचर्य भिक्षु श्रीजखराज जुस भार्या माणमयि भरिस: थ्वस स्त्रीपुरुषस पुत्र दिवंगत: विजयसिंह भारोयात निमित्यर्त्थेन श्रीमत् श्रीश्रीमहंकालदेव दयका यंथोशक्त वहिरिस जथाजोग्य याङ थापरपा जुरो॥ गुरु भलाड श्रीकुसुमजिवजुस्यं॥ तत्ते(न) पुण्यार्थेन जजमानस्य (य)था शास्त्रोक्त फल लभ्यते। सम्वत् ६३५ आषाढ कृष्ण चतुर्दशी अंगार वासरे॥ थ्व क्वन्हु थाप्रपा दिन (शुभ) ।

**- गुइत:या वहिविहार सङघ- छगू अध्ययन**
**दीपावती पुस्तकालय २०५६**

अभिलेख ४ को छविचित्र (Fascimile) यसप्रकार छ।

गुस्तल महाविहारया नें सं. ६३५ या महाकाल अभिलेख

अभिलेख- ५

# रत्न मल्लका पालाको
# पाटन, गा-वहाल टोल न्हूवहालको अभिलेख
# नें.सं. ६३९

(१) नमो बुद्धाय । नमो (धर्म्माय । नमो संघाय । स्व.) स्तिश्रीमत् श्री

(२) नेपाल मण्डले रा(जाधिराज परम भ-)ट्टारक श्रीश्रीज-

(३) य रत्न मल्ल (देवस्य विजय रा)ज्ये। श्रीमा(णिग्वल)

(४) ..........श्री..त........

(५)

(६)

(७)

(८)

(९) ......कुन्हु प्रतिष्ठा याङा

(१०) ......स संपूर्ण थङाजूरो.. श्रेयोस्तु संवत्

(११) ६३९...(शु)क्ल तृतियायां तिथौ अनुराढ नक्षेत्रे शौभा –

(१२) ग्य योगे वृ(हस्पति) वासरे। थ्व कुन्हु श्री बु विहार श्रीमत् श्रीश्री

(१३) शाक्य मुनि क्वा (च पाल) भट्टारकाय दोहरपा जुरो ॥

[पंक्ति (१४-१७] सम्म अक्षर फुटेकाले पाठ दुर्वोध्य छ।)

**द्रष्टव्यः**

यस अभिलेखको पुछारमा देखिने नेपाल सम्वत्को अंक ६३९ संगसंगै आउने महिनाको अक्षर मात्र नबुझिने छ । तर, वार भने ठम्याउन सकिनेछ । साथै, गणनामा सहायक हुने पक्ष-तिथि-नक्षत्र-योग इत्यादि पनि बुझिने हुँदा ज्योतिष गणना द्वारा यस अभिलेखको महिना निक्यौल हुन सकिने अवस्थामा छ ।

- *लेखक*

# परिच्छेद ६

# रत्न मल्ल र ललितपुरमा महापात्रहरूको सामन्त शासन

'काष्ठमण्डप' महानगरमा जस्तै ललितपुर नगरमा पनि व्यापार नायक महापात्रहरूको सामन्त शासन प्रचलित रहेको थियो मध्यकालमा। तर, यहाँका महापात्रहरू काष्ठमण्डप महानगरका महापात्रहरूको तुलनामा अत्यन्त शक्तिसम्पन्न देखिएका छन्। ललितपुरमा महापात्रहरूको शासन कहिले कसरी शुरु भयो तिनीहरूको पृष्ठभूमि के कस्तो थियो त्यस बारेमा ऐतिहासिक छानबिन भएको छैन। तर, तिनीहरूले नेपालको शासन केन्द्रमा अत्यन्त प्रभाविलो भूमिका निर्वाह गर्दै आएको कुरा भने मध्यकालका अनेक घटनाहरूले सिद्ध गर्छ।

कान्तिपुरमा महापात्रहरूको सामन्त शासनको ऐतिहासिक रुपरेखासम्म पनि निश्चित गर्ने आधारहरू लोप भइसकेका छन्। तर, ललितपुरमा भने महापात्रहरूको सामन्त शासन सम्बन्धी अध्ययन गर्ने ऐतिहासिक सामग्रीहरू धेरै नै भेटिन्छन्। नेपाल मण्डलको शासनकेन्द्र भक्तपुरमा त्रिपुर राजकुलका ठाकुरहरूमा आएको फूट परस्त राजनीतिबाट प्रशस्त फाइदा उठाउने तत्त्व पनि इतिहासमा तिनै ललितपुरका महापात्रहरू भए। अझ पछि गएर एक थरि महापात्रहरूले त केन्द्रबाट छुट्टिएर अरू आफ्नै सह-सदस्य पात्रहरूलाई समेत दमन गरी अगाडि बढेको इतिहास पाइन्छ।

ललितपुरमा महापात्र शासनको आधार पनि तिब्बतसित नेपालको मध्यस्थ-व्यापार (Interpot Trade) नै थियो। तिनीहरू पनि व्यापार नायक भएर नेपाल मण्डलका शासकहरूको अधीनमा रही आफ्ना तोकिएका क्षेत्रभित्र प्रशासनिक अधिकार समेत पाएका थिए। कान्तिपुरमा यस्ता व्यापार नायक महापात्रहरूको संख्या १२ सम्म पुगेको थियो। यसको अर्थ, तिनीहरूको परिवार संख्या थपिंदा थपिंदै गएर बाह्र परिवार वा कुटुम्वसम्म भए। तर, ललितपुरमा भने तिनीहरूको अधिकतम संख्या सातसम्म भए। त्यसैको आधारमा तिनीहरू 'सप्तकुटुम्वज' महापात्रको नामले इतिहासमा प्रसिद्ध छन्।

उपर्युक्त सप्त 'कुटुम्वज' महापात्रहरूमा पनि खास गरी तीन ओटा परिवारले प्रमुख भूमिका निर्वाह गर्ने गरेको पाइन्छ। तिनीहरू 'त्रि-भय महापात्र' भनी त्यस युगमा आफ्नै प्रकारका विशेषता राख्तछन्। यसरी ललितपुरमा त्रि-भय महापात्रहरूको प्रशासन धेरै समयसम्म कायम रहेको पाइन्छ। यिनै तीन थरि महापात्रहरूलाइ तीन हाँगामा विभाजन गर्न सकिन्छ अध्ययन सुविधाको निमित्त :

१. दक्षिण विहार कुटुम्व
२. ज्येष्ठ विहार कुटुम्व
३. पिंथ विहार कुटुम्व

मध्यकालमा स्थिति मल्लपछि उनका छोरा ज्योतिर्मल्लहरूको समयमा दक्षिण विहारको प्रसिद्धि ललितपुरमा निकै फैलिएको थियो । त्यतिखेर स्थानीय महापात्रको नाउं 'येंकुली वर्मा' भनेर लेखिएको पाइन्छ । तर, यसले खास नाम जनाउँदैन, यो त केवल "उपनाम" हो जसले दक्षिण विहारकै संकेत गर्छ ।

स्थिति मल्लको तेस्रो पुस्तामा पुग्दा नेपाल मण्डलमा यूक्ष मल्लको निकै लामो शासनकाल रह्यो । उनले ललितपुरमा ज्येष्ठ विहार कुटुम्वज महापात्रहरूलाई अगाडि बढाएका थिए । तर, रत्न मल्लले भने त्यहाँ पिंथ विहारका (पिं-बहाल) महापात्रहरूलाई अगाडि बढाउन खोजेको छनक पाइन्छ । यसको अलि विस्तृत चर्चा तल आउँदैछ ।

रत्न मल्ललाई साथदिने ललितपुरका ६ जना महापात्रहरूको नाम हामीलाई उपलब्ध छ । ललितपुरलाई कान्तिपुरको अधीनमा रहने गरी 'त्रिपुर राजकुल'का ठाकुरहरूले गरेको ने.सं. ६१५ को (सं. १५५२) सन्धिपत्रमा स्थानीय महापात्रहरूले समर्थन जनाएका छन् । यसरी समर्थन गर्ने महापात्रहरू हुन्:

१. प्रताप सिंह
२. अमृत सिंह
३. कुसुम सिंह
४. राघव सिंह
५. हर्षपाल
६. जगतपाल

यिनमा पहिलो समूह प्रतापसिंह र अमृत सिंह ललितपुरमा दक्षिण विहारसित सम्बद्ध छन् । दोस्रो समूहमा कुसुम सिंह र राधव सिंह ज्येष्ठ विहारसित सम्बद्ध छन् भने तेस्रो समूहमा हर्षपाल र जगतपाल पिंथ विहारसित ।

उपर्युक्त महापात्रहरू सामन्त शासकको रूपमा रहेको कुरा व्यक्त गर्ने ने.सं. ६२० (सं. १५५७) एउटा ऐतिहासिक लिखत भेटिन्छ । केसर पुस्तकालयमा रहेको '**साद्यन्तकोशसार**' भन्ने ग्रन्थमा उपलब्ध पुष्पिकाले यस सन्दर्भमा केन्द्रको शासक र सामन्त शासकको विभेद देखाउँछ । सो पुष्पिकाको उतार तल प्रस्तुत गरिएको छ :

*ज्येष्ठ श्रीराय मल्ल नृपतिर्नेपाल चूडामणि-*
*स्तन्मध्योनुज कंस केशव वली श्रीरत्न मल्ल प्रभुः ।*
*कानिष्ठो रण मल्ल देव सुकृती कारुण्य रत्नाकर-*
*स्तत्तेषां वर भागीनेय विदितः श्रीभीम मल्लो नृपः ॥*
*तेषां नृपाणां विजय राज्ये । । अत्र हि ॥*
*पात्रोत्तमे सप्त कुटुम्वं मध्ये प्रधानतः श्रीत्रिभय प्रमुख्यः ।*
*तीक्ष्ण प्रतापैर्जित वैरिवृन्द प्रतापसिंह परमं विभाति ॥*
*अन्यच्च ॥*
*जयति अमृत सिंहः शत्रु मातंग सिंहः*
*ललितपुर वरेस्मिन् सर्व्व सामन्त सिंह*

*अतश्च ॥*

*श्रीपात्र वंशार्णव जातचन्द्रः*
*विराजते राघवसिंह धीरः ॥*

*अपिच ॥*

*श्रीमणिकुमारस्य पदाम्भोजैक षट्पदः*
*जीयात्कुसुमसिंहोयं कीर्तिसिंह सुतःसुधी ॥*

*अपरञ्च ।।*

*हर्षपालो विभात्युच्चैः कल्पवृक्ष इवापरः ॥*
*विन्दु युग्म रसे याते श्रीनैपालिक वत्सरे ।*
*वैशाखस्य शिते पक्षे द्वितीयायां प्रयत्नतः ॥*

**स्रोतः**
**केसर पुस्तकालय**
**साद्यन्त कोशसार, संख्या २३४**
**इतिहास- संशोधनको प्रमाण-प्रमेय, पृष्ठ ६७**
**(संशोधन मण्डल) २०१९**

उपर्युक्त उद्धरणमा रत्न मल्ललाई साथदिने ६ जना पात्रहरू मध्ये ५ जनाको उल्लेख पाइन्छ। जगतपालको नाम भने यसमा छुटेको छ। यसमा कुनै रहस्य होला जस्तो लाग्छ। प्रमाणको अभावमा अहिल्यै खुट्याउन भने गाहारो पर्छ ।

ललितपुरमा महापात्रहरूको सामन्त शासकका रूपमा पृथक पृथक कार्यविभाजन थियो । तिनीहरूका बीच क्षेत्रात्मक विभाजन रहेको आभास पाइन्छ। तिनीहरू केन्द्रमा जस्तो संयुक्त शासक न हुनाले आ-आफ्ना अधिकार क्षेत्र भित्र आन्तरिक प्रशासनको निमित्त तिनलाई यथेष्ठ स्वायत्तता प्राप्त थियो ।

ललितपुरमा महापात्रहरू सप्त कुटुम्वज मानिएको भए तापनि प्रमुख त्रि-भय अर्थात् तीन परेलीले प्रमुखता पाएका कुराको चर्चा माथि गरिसकेको छ । तिनमा पहिलो परेली दक्षिण विहारसित आबद्ध देखिन्छ । तिनीहरू येंकुली वर्माको सन्तान भनेर पुर्खौली देखाउँछन्। स्थिति मल्ल पछि यही परिवारले ललितपुरमा पात्रहरूको नेतृत्व गर्दै आएका थिए। कान्तिपुरमा रत्न मल्लले आएर राजधानी बनाउने ताका ललितपुरको एउटा भेकमा दक्षिण विहारको महापात्र प्रतापसिंहको सामन्त शासन रहेको देखिने एउटा लिखतपत्र यस प्रकारको छ :

१ ꣸ *श्रेयोऽस्तु सम्वत् ६०३ माघ कृष्ण ।।* तृतीयायां *तिथौ श्रीललित बुरुमायां श्रीमानिग्लके दक्षिनत श्रीदक्षिण विहार कुटुंवज प्रधान महापात्र श्रीप्रताप सिंह वर्मनस नामनेन स्वकियं स्वभुज्यमानिकं श्रीतुथिलः उवतागृह अनंगराम कुलमे नाम्नान सकासात् थंद्योत ब्याडनो क्षेत्रेन-*

(२) *पछिमत धनिकस्य क्षत्रेन उत्रत थव ग्वत्र श्रीनाथशिह वर्मस क्षत्रेन पूर्वत दैवज्ञकर भारोस क्षत्रेन (दक्षि)नत् एतेषां षत् रोपनिक् जत क्षत्र रोवाङ्क रोव वपल उर्माडि षु ६ क्षेत्र लकुणसयं परिभोगाङ्क जथा न:गरकार प्रवर्त्तमानेन संचाराघेन तथार्चित मूल-*

(३) *न तेनानूवत्तक न्यायन क्रिय विक्रियतं भवतु, जा क्षेत्र संकत व्यावादकाले तदा धार्नकेन शोधनियं प्रते तुथिल्ह उपोता स्वतव हिलन क्रीपत चोया् अन्त्रार्थे साक्षि श्रीवलानिम्ह द्विजवर श्रीमालम्हजुस मेक दृष्ट । ।शुभ । ।*

***

[लिखतपत्रको देब्रे शिरानमा माटाको छाप बीचमा 'श्री' अंकित छ]

स्रोत:
राष्ट्रिय अभिलेखालय
वट्टा १२ पत्र नं. १७०
-शंकरमान राजवंशी:
भूमि सम्बन्धी तमसूक ताडपत्र
भाग-१ पृष्ठ ८१ (सं. २०४०)

यस ताडपत्र लिखतका कर्ता प्रतापसिंह वर्माको नाम नै रत्न मल्लले ललितपुर अंठ्याउँदा ने.सं. ६१५ मा (सं. १५५२) भएको सन्धिपत्रमा पहिलो क्रममा देखापर्छ । उनी ने.सं. ६२० सम्म पनि जीवित रहेको र साविककै क्रममा कायम रहेको पाइन्छ ।

रत्न मल्ललाई साथदिने ललितपुरका अर्को थरि महापात्रहरू कुसुमसिंह र राघवसिंह ज्येष्ठ विहारसित आबद्ध रहेका देखापर्छन् । महापात्रहरूको यस हाँगाले रत्न मल्लका बाबु यक्ष मल्लकै समयदेखि ललितपुरमा सामन्त शासनको नेतृत्व गर्न प्रयत्नशील रहेका थिए । त्यसैले, **'साद्दान्त कोशसार'** को पुष्पिकामा कुसुमसिंहको विशेष वर्णन गरिएको पाइन्छ :

*"श्रीमणिकुमारस्य पदाम्भोजैक षट्पद:*
*जीयात्कुसुम सिंहोयं कीर्तिसिंह सुत: सुधी । ।*

यहां 'मणिकुमार' ले मणिग्लको प्रमुख देवतालाई बुझाउँछ । यही 'मणिग्ल' ललितपुरको केन्द्र हो । 'मणिकुमार' को 'पाउको भ्रमर' भनेर कुसुमसिंहको जुन वर्णन यहाँ गरिएको छ त्यसमा केही सार्थकता रहेको छ ।

चर्चित कुसुमसिंह र राघवसिंहको सम्बन्ध ललितपुरमा ज्येष्ठ विहारसित देखाउने दुइटा लिखतपत्रहरू पाइएका छन् । ती दुवै लिखतपत्रहरू रत्न मल्लले ललितपुरमा आफ्नो प्रभाव फैलाएपछि खडा भएका हुन् ।

तिनमा पहिलो ने.सं. ६१८ (सं. १५५५) को ताडपत्रको व्यहोरा यस्तो छ :

(१) *श्रेयोऽस्तु । । सम्वत् ६१८ श्रावण कृष्ण चतुर्थ्यायां तिथौ् श्रीललितब्रूमायां श्रीमानिगलके दक्षिण विहारे श्रीदक्षिण विहार आगम श्रीमत् श्रीश्रीवज्रजोगिनि भट्टारिकास नाम्ना सकारात् । श्रीपोयको छें विहारद्धिवास्तव्य .... (स्व क्रीयं) स्व भुज्यमानिक (ग्वल)*

(२) *अफल क्षेत्र नाम प्रदेशे गोपालिक शुथाया क्षेत्रेन पश्चिमतः श्रीक्वाठ भूमेन उत्तरतः धरशीमायां पूर्वतः गोपालिक पदुया क्षेत्रेन दक्षिनतः एतेषां पध्ये त्रेदश रोपनिक जत क्षत्र रोवाङ्क रोव १३ ता क्षत्रस्य धार्णस्यादिका (र) .... क्षेत्र सक्रषकं परिभोग .... (जथा देश का-)*

(३) *ल प्रवृत्तमान संचारार्घेन जथोश्चित मूल्यमादाय क्रिविक्री स्वादिनेन तेना निवृत्तक न्यायेन क्रेन विक्रीयतम्भवतिः जदि सत्यादेविक राजिक विना संषत व्यावादकाले धार्णकेन परिसोधनियं अत्रार्थे साक्षि श्रीज्याथविहार कुटुम्वज प्रधान महापात्र श्रीकुसुम (सिंह वर्मनस) ....*

***

[लिखतपत्रको देव्रे शिरानमा माटाको छाप, बीचमा 'श्री' अंकित छ]

*(ताडपत्रको पछाडि लेखिएको व्यहोराः)*

*"धरनयो वातिका सह ग्वल अफल क्षेत्र क्री पत्र ।।*
*तलपति मदो धास्यं मकायं ।। गेलुरसनो अकर्ण जूरो"*

**स्रोतः**
**राष्ट्रिय अभिलेखालय**
**वट्टा नं. १९ पत्र नं. २८२**
**शंकरमान राजवंशी :**
**भूमिसम्बन्धी तमसूक ताड्पत्र, भाग- २**
**(पृष्ठ ५५-५६) सं. २०४१**

[यस ताडपत्रको किनारा मूसाले काटेको छ। यथासंभव लिखतपत्रको भाषा पूरा गर्न कोशीस गरिएको छ।]

- लेखक

प्रस्तुत लिखतपत्रमा दक्षिण विहारको आगम 'वज्रयोगिनीको तर्फबाट १३ रोपनी जग्गा खरीद गरेको व्यहोरा परेको छ। लिखतमा साक्षी बसेर प्रमाणित गर्ने ज्येष्ठ विहारका प्रधान महापात्र कुसुमसिंह थिए। आगम गुठीको लागि खरीद भएको जग्गा यिनै महापात्र कुसुमसिंहको क्षेत्राधिकार अन्तरगत पर्ने भएकोले नै यस कारोवारमा उनले प्रमाणित गरिदिएको तथ्य प्रष्ट हुन्छ।

अर्को ताडपत्र ने.सं. ६१९ (सं. १५५६) को हो। यो लिखतपत्र कुसुमसिंह र राघवसिंह दुवै

जनाले संयुक्त रूपमा गराइलिएको देखिन्छ :

(१) *श्रेयोऽस्तु ।। सम्वत् ६१९ चैत्र शुद्धि १३ श्रीज्येष्ठ विहार प्रधान महापात्र ।। श्रीकुशुम सिंह वर्मनस: प्रधान महापात्र श्री-*

(२) *राघवसिंह वर्मनस: उभयो: हस्तोद्धार द्वयो जवाद्धिक: एकतीश दामाङ्क दम्म ३१ जवा २ तस्य भोग वंदकी दओ*

(३) *ग्वाल अफल रोव ४ थ्वतेसं रतिपातनं स्वादिकारन स्वबोस छि बो भाषा थ्व दामया वर्ष प्रति कलत्र न्याषत ध-*

(४) *निसन थ्वते वु भागन कुश पत्र धंधते जुरो भोछा दि: शायस दाम: प्रत्ये जीवतेजराम भारो: क्वाठपाल मुलया लेम*

(५) *ताशन क्वश: श्रीदक्षिण विहार: श्रीमत् श्रीश्रीआगम प्रमेश्वरस: साक्षि श्रीओषाचुक विहार वज्राचार्ज्य श्रीभीमल*

(६) *मकजुल: श्रीवंध्वाषा नाथु भारोस: श्रीहतषानिम्हं लिविछे गोमिद भारोस यते तृय दृष्ट ।।शुभ ।।*

**स्रोत:**
**राष्ट्रिय अभिलेखालय**
**वट्टा नं. १५ पत्र नं २१७**
**-शंकरमान राजवंशी :**
**भूमिसम्बन्धी तमसूक ताडपत्र भाग- २**
**पृष्ठ ५६ (सं. २०४१)**

प्रस्तुत लिखतपत्रमा कारोवार जग्गा खरीद विक्री भएको होइन, भोग वन्धकी लिएदिएकोसम्म हो । त्यतिखेरको चलन चल्तीका मुद्रा दम्म ३१ जवा २ मा धितो वापत चार रोपनीको तीन भागमा एकभाग जगा राखिएको छ । महापात्र कुसुमसिंह र राघवसिंहले नै यो भोगवंधकी लिएर ऋण प्रवाह गरिएको यो लिखतपत्र हुँदा अरू महत्त्व राख्तछ ।

ललितपुरमा महापात्रहरूको तेस्रो हाँगा पिं-वहालसित आवद्ध पाइन्छ । यस विहारसित सम्बन्ध हुने हर्षपाल र जगतपालको उल्लेख रत्न मल्लले ललितपुर अंठ्याएको उपर्युक्त ने.सं. ६१५ को सन्धिपत्रमा परेको छ । यस हाँगाको अधिकार क्षेत्रमा कीर्तिपुर समेत समावेश भएको पाइन्छ । तर **'साद्यन्तकोशसार'** को पुष्पिकामा हर्षपालको उल्लेख छ जगतपालको नाउँ भने छैन । तिनीहरूमा जेठा हर्षपाल हुनाले उनको मात्र उल्लेख भएको पनि हुन सक्छ ।

यिनै जगतपालले ने.सं. ६३५ को (सं. १५७२) जेठ महिनामा कीर्तिपुर चिलंचोमा एउटा विहार सहितको चैत्य निर्माण गर्दा रत्न मल्ल र उनको शासनमण्डल 'त्रि-पुर राजकुल' का अन्य सदस्यहरूको चर्चा परेको छ । तिनमा उनका भाइ रण मल्ल र राम मल्ल समेतको त्रि-

भय शासन त्यतिखेर देखापरेको थियो ।[1]

यसै वर्षको अर्को महिना आषाढमा ललितपुरमा रत्नमल्लको एकल शासन देखापर्छ । ललितपुरकै क्षेत्रभित्र कीर्तिपुर समेत पर्ने हुँदा त्यतिखेर यहाँ रत्न मल्लको नै एकल शासन स्थापित भएको कुरा स्वसिद्ध छ । तर, यसका तीन महिनापछि यिनै जगतपालले कीर्तिपुरमा वाघ भैरवको मन्दिर जीर्णोद्धार गरी राखेको अभिलेखमा भने रत्न मल्ल अथवा कुनै त्रिपुर ठाकुरको पनि उल्लेखसम्म गरिएको छैन ।[2] यसबाट एउटा अडकल हुन्छ, रत्न मल्ल त्यतिखेर आफ्ना भाइहरूसितको राजनैतिक संघर्षमा फसेको हुनुपर्छ । त्यस संघर्षमा रत्न मल्ल सफल भएर उनको एकछत्र शासन ललितपुरमा कायम भयो । उनलाई यसै पिं-बहालका महापात्रहरूले विशेष मद्दत गरेको आभास पाइन्छ । त्यसतर्फ इतिहासकारहरूको ध्यान आकृष्ट गर्ने एउटा अभिलेख कीर्तिपुरकै पालिफल गणेश मन्दिरमा भेटिएको छ । ने.सं. ६४८ (सं. १५८४) मा स्थापित सो शिलापत्रमा केही समय अगाडि जगतपाललाई चापागाउँलेहरू आएर बडो निर्मम हत्या गरेको चर्चा परेको छ । यसै संघर्षमा लुंते भन्ने कीर्तिपुरकै एकजना प्रसिद्ध व्यक्ति पनि मारिएका थिए । उनकै आमा-बाबुले आफ्ना दिवंगत छोराको नाममा गणेशको एउटा मन्दिर स्थापित गरेको कुरा त्यस अभिलेखबाट ज्ञात हुन्छ ।[3]

रत्न मल्लको समकालिक ज्येष्ठ विहारका महापात्र कुसुमसिंहको छोरा विष्णुसिंह भए । रत्न मल्लको मृत्यु भएपछि यिनै विष्णुसिंहले ललितपुरमा आफ्नो स्वतन्त्र शासनको घोषणा गरेका थिए । त्यसो हुँदा रत्न मल्ल मरेपछि आफ्ना प्रतिद्वन्द्वी जगतपालको अन्त्य विष्णुसिंहले गराएकोमा घटनाक्रम मिल्न आएको देखिन्छ । रत्न मल्लले पिं-वहालका महापात्रहरूलाई अघि बढाउनु पनि राजनीतिको स्वाभाविक प्रक्रिया बुझिन्छ । यसरी जगतपाल रत्न मल्लको समर्थक हुनाले विष्णुसिंहले कान्तिपुरबाट स्वतन्त्र हुने चेष्टाको संघर्षका सिलसिलामा मारिएको कुरा पत्यारिलो हुन्छ ।

१. हेर्नुहोस् परिच्छेद ५ परिशिष्ट खण्डः अभिलेख संख्या-२

२. हेर्नुहोस् परिच्छेद ५ परिशिष्ट खण्डः अभिलेख संखया-३

३. परिशिष्ट खण्डः अभिलेख संख्या-१

## परिशिष्ट खण्ड

अभिलेख-१

# कीर्तिपुर पालिफः गणेशस्थानको अभिलेख
# नें.सं. ६४८

श्रेयोस्तु सम्वत् ६४८ पौष्य मासे कृष्णपक्ष नवमी पर दशम्यां तिथौ अनुराध नक्षत्रे वृद्धियोगे वृहस्पति वासरे ।। थ्व कोन्हु श्रीगणेश्वर भट्टारक प्रतिष्ठा याङ्‍ दिवंगत पुत्र लुंतेया उदेशान दानपति श्रीं किर्तिपुरी देश तुंथिको क्वथुभ्वडछें माता पडुनी बबा रूपतेज सहानुमतन देव दयका । थ्व दिनन लत्या न्ह्यव अंगार वार कुन्हु मेफिहिया स्थान स्वन्हु न्ह्यव आदित्यवार कुन्हु पात्र श्रीजगतपालजु कुथिस दिरङास्य ववा दुजारवले लाङा वामाथिलंश अपघातन मोचक अपुम्रित्तन लुंते मोक्व दिन ।। थ्वते पुण्यन यजमान सगन परिवारन्त आयुरारोग्य जन धनन्ती सिद्धिरस्तु ।। दिवंगत पुत्र लुंते स्वर्गराभ थजुर जुरो फाक भालोन चिन्तायाङा ज्या याकोमन त्तोय मनिका जते । जुग चद (ख्व) क तामि थ्व मङ तङ गुठि जुरो ।

***

*द्रष्टव्यः*

*यस अभिलेखको पुरानो उतार राष्ट्रिय अभिलेखालयमा छ । त्यसको पाठ राम्ररी उतार गर्न नसकिने भएर श्रीशुक्रसागर श्रेष्ठको सहयोगमा स्थानीय टोलमा मूल अभिलेखबाटै यो पाठ पढिएको छ ।*

- लेखक

## परिच्छेद ७

# नुवाकोटी महापात्रहरूको विद्रोह तथा सीमा नाकाली भोटेहरूको आक्रमण

कान्तिपुरमा आफ्नो राजधानी स्थापना गरी रत्न मल्लको शासन बलियो हुने बित्तिकै काष्ठमण्डपका महापात्र वैश्य ठकुरीहरूको अर्को शाखा नुवाकोटी महापात्रहरूको उन्मूलन गर्ने काममा उनी लागे। यसो गर्नु रत्न मल्लको निमित्त अपरिहार्य पनि थियो। तिब्बतसित हुने व्यापारमा यिनीहरूको मुख्य हात रहनाले व्यापारीहरूको सुरक्षादल नै यिनीहरूको प्रमुख सैनिक बल पनि हुने गर्थ्यो। यसैबाट महापात्रहरूको राजनैतिक शक्ति बढेको कुरामा विवाद रहँदैन।

मध्यकालको शुरुमा एकताका नुवाकोटी वैश्य ठकुरीहरूले नेपालको राजनैतिक सत्ता नै हत्याउन सफल भएका थिए। तिनको नेतृत्व त्यतिखेर भास्करदेवले गरेका थिए। त्यसो हुँदा राजधानी केन्द्रको 'त्रि-पुर राजकुल' को शासनमा कमजोरी देखिनासाथ नेपालकै राजसत्ता हात लगाउने सपना बोकेर यी व्यापारीवर्गका महापात्रहरू अवसर छोप्ने ताकमा रहन्थे। अत: उनीहरूबाट हुन सक्ने संभावित राज्य विप्लवका विरुद्ध समयमै रोकथामको राजनैतिक उपचार गर्नु आवश्यक देखेर यक्ष मल्लले नै नुवाकोटी वैश्य ठकुरीहरूलाई उन्मूलन गर्ने चेष्टा गरेका थिए।

यस सम्बन्धमा नुवाकोटमा नै लेखिएको एउटा पुरानो वंशावलीमा नेपालभाषामा यसरी टिपिएको छ:

*"श्रीयक्ष मल्ल राजा, सम्वत् ५८८ फाल्गुन शुक्रवार थ्वम्ह राजान नुवाकोटस वैश्यराजा म्हासयाना थमम् राज्य चले यात"*

**स्रोत:**

**चन्द्रलाल श्रेष्ठ, नुवाकोट**

**धनवज्र वज्राचार्य- टेकबहादुर श्रेष्ठ :**

**नुवाकोटको ऐतिहासिक रूपरेखा**

**पृष्ठ ४५, CNAS त्रि.वि. (२०३२)**

[श्रीयक्ष मल्ल राजाले ने.सं. ५८८ फागुन (तिथिX) शुक्रवार, नुवाकोट मा वैश्य राजालाई मासेर आफैंले राज्य चलाए।]

नेपालको मध्यकालिक इतिहासमा यक्ष मल्ल एउटा दिग्विजयी राजा भनेर प्रसिद्ध छ। उनले पश्चिममा गोरखादेखि लिएर पाल्पासम्मको पहाडी क्षेत्रमा आफ्नो विजय यात्रा गरेको कुराको संभना उनका सन्ततिहरूले धेरै पछिसम्म राख्दै आएका छन्। त्यस्तै, उत्तरतर्फ ७ दिनसम्म हिंड्नुपर्ने भू-भाग आफ्नू राज्यमा गाभेका थिए। दक्षिणतर्फ पनि मिथिला कब्जा गरेर गंगानदीसम्म नेपालको विस्तार गरेको वर्णन पाइन्छ। भक्तपुरका राजा जगज्ज्योतिर्मल्लले **नरपति जयचर्या'**

लेखाउँदा त्यसको पुष्पिकामा यक्ष मल्लको विजय यात्रा यसरी दिइएको छ:

*आसीद्विश्व विशोभि निर्मल यशो राशौ रघोरन्वये,*
*विख्यातो जय यक्ष मल्ल नृपतिर्दातावदाताशय: ।*
*यो राज्यं मिथिलां विजित्य मगधं गत्वा गयां पौरूषात्*
*यो नेपालमकण्टकं व्यरचयद् जित्वानृपान्पार्वतान् ॥*

*प्राच्यां योवंगदेशं तदनुसुर नदी दक्षिणे दिग्विभागे,*
*विख्यात: पश्चिमायां प्रविलसदसिना गोरखा पालपात: ।*
*भूमिं सप्ताह गम्यामपि धनद दिशोयोऽवधीकृत्यभुक्त्वा*
*रेमे दोर्दण्ड शौण्ड: प्रखरतर लसत्काण्ड कोदण्ड पाणि: ॥*

यसरी पूर्वापर विचार गर्दा नुवाकोटमा रहेका वैश्य ठकुरी भनिने महापात्रहरूबाट पनि यक्ष मल्लले सामन्त राज्यको अधिकार खोसेको कुरामा विश्वास गर्न सकिन्छ । तर, यक्ष मल्लको अन्तिम समयसम्म नुवाकोटी ठकुरीहरूको पूर्णरूपमा अस्तित्व नै लोप हुन सकेको भने थिएन ।

यक्ष मल्लकै राजनैतिक चिन्तनको बाटोमा लागेर उनका माहिला छोरा रत्न मल्लले कान्तिपुरमा महापात्रहरूको सामन्त शासन अन्त्य गराइदिएका हुन् । यसबाट बचेखुचेका नुवाकोटी महापात्रहरूले आफ्नो गुमेको पुर्खौली अधिकार फर्काउन एकपल्ट फेरि रत्न मल्लको विरोध गरेको आभास पाइन्छ । त्यसको परिणाम रत्न मल्लले नुवाकोटमा रहेका वैश्य ठकुरी भनिने महापात्रहरूको पूर्णतया उन्मूलन गरी त्यहाँको प्रशासन गर्न सोझै राजधानी कान्तिपुरबाट 'उमरा' नियुक्ति गरी पठाउने व्यवस्था गरे ।

यस प्रकार रत्न मल्लद्वारा नुवाकोटमा वैश्य ठकुरीहरू समाप्त भएको घटना नेपालमा वंशावलीकारहरूले बिर्सेका थिएनन् । त्यसै परम्परामा प्रचलित भाषा वंशावलीमा पाइने कथन यस प्रकारको छ:

*"यिन राजाका (रत्न मल्ल) पालामा नुवाकोटवासी वैश्य ठकुरीहरू स्वाधीन गरी (परास्त गर्दै) राजराजेश्वरी देवीका चित्रकारी कर्म गराया । नेपाल संवत ६११ सालमा वैश्य ठकुरीहरू हूल गरी आया र ती वैश्य ठकुरीहरूमाथि धेरै सिपाही पठाई लडाइ गरि जिती नुवाकोटका फलफूल आदि ल्याई श्रीपशुपतिनाथकन चढाया ।"*

**- भाषा वंशावली, भाग-२**
**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

भाषा वंशावलीको उपर्युक्त कथन अनुसारकै व्यहोरा अन्यत्र मल्ल भारादारहरूले लेखाइ राखेको वंशवृत्तमा पनि पाइन्छ । कान्तिपुर इकु बहालको परंपराबाट आएको एउटा वंशवृत्तमा पनि यही घटनालाई यसरी टिपिएको छ:

*"नेपाल संवत् ६११ सालमा नुवाकोटका राजाले कुल गर्‍यो भनी भारादार फौज पठाई लडाइँ गरी जिती नुवाकोट समेत गरी राज्य गर्‍या (रत्न मल्लले) ।"*

**[श्री ध्रुवराज भण्डारीको सौजन्यबाट]**

यस उद्धरणबाट नुवाकोटमा वैश्य ठकुरीहरूको अवशेष ने.सं. ६११ (सं. १५४८) सम्म रहेको तथ्य पुष्टि हुन्छ । रत्न मल्लले कान्तिपुरका वैश्य ठकुरीहरूको उन्मूलन गरेकाले त्यसबाट चिढिएर तिनीहरूले नै नुवाकोटमा एकपल्ट फेरि विद्रोह गरेका थिए । त्यसकारण रत्न मल्लले नुवाकोटका महापात्रहरूमाथि सैनिक कारवाई गरी तिनीहरूको उन्मूलन गरिदिए । सोही विजयको उपलक्ष्यमा नुवाकोटबाट ल्याएका फलफूलहरूद्वारा पशुपतिनाथको पूजा अर्चना भयो । नुवाकोट भेकबाट काठमाडौं उपत्यकामा फलफूलहरू आउने पुरानो परंपराको पनि यसले उत्तिकै संझना गरेको भन्न सकिन्छ ।

तिब्बतसितको व्यापार मार्गमा रहेको नुवाकोट आर्थिक दृष्टिले अति महत्त्वको त छँदै थियो । त्यस माथि काष्ठमण्डप महानगरको वैभवसित एउटै कडीमा गाँसिएर रहेको नुवाकोट पनि व्यापारिक नगर नै भएकोले त्यहाँ परंपरागत सामन्त प्रथाको अन्त्य हुनु नेपालको आर्थिक इतिहासमा ज्यादै ठूलो युगान्तकारी घटना मान्नु पर्नेछ ।

## 'कुकु' भोटेहरूको उत्पात:

परन्तु, नुवाकोटका प्रभावशाली महापात्र वैश्य ठकुरीहरूको अस्तित्व निःशेष गरेर मात्र रत्न मल्लले निश्चिन्त बस्न पाएनन् । व्यापार नायकको हैसियत राख्ने ती महापात्रहरूको प्रभाव भोटको टाढा टाढासम्म फैलिनु पनि स्वाभाविक थियो । नेपाल-तिब्बत सीमाका वारि र पारि रहेका भोटेहरूमा व्यापारी लुटेर खाने लुटेरा दल र त्यसको विरुद्ध सुरक्षा दल दुवै थिए । रत्न मल्लद्वारा परास्त तिनै वैश्य ठकुरीहरूको सहायतार्थ अथवा उनीहरूले नै उक्साएर सीमा क्षेत्रका भोटेहरूले नेपालको इलाकामा घुसेर लूटमार मचाउँदा रत्न मल्लको निंद हराम गराइदिए । तिब्बती देवानहरूले नेपाल उपत्यकासम्म आएर त्यतिखेर गरेका बारंबार हमलाहरूको चरित्र बुझ्न मद्दत पुऱ्याउने किंवदन्तीहरू पछिसम्म पनि सुन्न पाइन्छ । तिनीहरूको उपद्रोबाट कीर्तिपुरको रक्षा गर्न रत्न मल्लले एउटा सैनिक (गुल्म) राखेर ३०० घरको 'पांगा' वस्ती नै बसालेका थिए । यसै सिलसिलामा सतुङ्गल र बलंबु पनि भोटे हमलावारहरूको रखवारी गर्न बसालिएका गुल्म स्वरूपका वस्तीहरू भएको कुरा श्रुति परंपराबाट आइरहेको छ ।

काठमाडौंबाट नुवाकोटतर्फ बाटामा पर्ने धर्मस्थली र त्यसको आसपासमा पर्ने टोखालाई रत्न मल्लले गुल्म सरहकै ठूला वस्तीमा परिणत गरेका थिए । हुन त त्यहाँ अघिदेखि नै गढहरू थिए । ती गढहरू रहेकै कारणले भोटे देवानहरूको हमला हुने खतराबाट जोगाउन रत्न मल्लले अरू वस्ती विस्तार गरेको कुरामा विश्वास गर्न सकिन्छ ।

भोटे देवानहरूको लुटपाट कान्तिपुरबाट ललितपुरको छेउछाउतिर पनि उत्तिकै फैलिएको आभास पाइन्छ । थैव, थसी जस्ता ललितपुर नगर बाहिरका घना वस्तीहरू पनि रत्न मल्लले नै त्यतिखेर बसालेका भन्ने परंपरा पाइन्छ । पाँच-पाँच सय घर धुरी पुऱ्याएर बसालिएका यी वस्तीहरूलाई अरू मजबूत चौकी अथवा गुल्मको स्वरूप दिएको हुनाले उस बखत बढी समस्याग्रस्त इलाका भएको छनक पाइन्छ ।

काठमाडौंमा 'देवमाला' वंशावली संग्रह गर्दा रत्नमल्लको समयमा भोटे देवानहरूको बारंबार लूटपाट र हमलाका विरुद्ध जनपरिचालन गरेका उपर्युक्त घटनाहरू टिपिएका छन् ।[1] उपर्युक्त घटना अन्य वंशावलीमा 'कुकु' भोटेहरूको हमलाको संज्ञाले प्रसिद्ध छ । यस बारेमा भाषा वंशावलीको कथन यस्तो छ:

*"रत्न मल्लले राज्य गर्दा समय 'कुकु' नाम भोट्या देवान आदि भोट्याहरू धेरै आई दुःख दिया र तिर्हौतिया ब्राह्मण चार जना पाल्पा जाई आफ्ना शिष्य सेन राजासंग मागी उनका लस्करलाई ल्याई भोट्याहरूकन माऱ्या । यिन दिनदेखि खसहरू चार थरिकन खेत बिर्ता दिइकन जगा जगामा राख्या । फेरि रत्न मल्ल राजाले तिर्हौतिया ब्राह्मणहरू चार जनालाई खिल्लत दिई आफ्ना स्वस्थान पठाया । 'कुकु' नाम भोट्यालाई माऱ्या पछि यस ठाउँको नाम 'कुकुस्यानाजोल'[2] भनी नाम रहिगयो"*

**-भाषा वंशावली भाग २**

**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

यस घटनामा 'कुकु' शब्दले तिब्बती भाषामा के कस्तो अर्थ व्यक्त गर्दछ, त्यसतर्फ पनि खोजी गर्ने कार्य बाँकी नै छ । वंशावलीमा तिनीहरूलाई भोट्या देवान भनी संकेत गरिएको छ । यसले त काजी वा मन्त्री स्तरको पदलाई जनाउने हुँदा हमलाको शैली बुझ्न आवश्यक छ । यो हमला केरुङको बाटो गरी भएको अनुमान हुन्छ । साथै, यो हमला आतङ्क पैदा गर्ने खालको बुझिन्छ । फेरि, तिनीहरूलाई धपाउन रत्न मल्लले पाल्पाको सैनिक सहयोग लिनु परेको कुराले पनि अत्यन्त महत्त्व राख्तछ । पाल्पामा त्यतिखेर सेन राज्यको स्थापना भएर रुद्र सेनले राज्य विस्तार गर्दै थिए ।

पाल्पामा सेन राज्य खडा गर्ने ऐतिहासिक पुरुष रुद्र सेन थिए । उनी रत्न मल्लको समकालिक देखापर्छ । यक्ष मल्लले नै पश्चिम पहाडतर्फ नेपाल मण्डलको सीमा पाल्पासम्म पुऱ्याएर यस राज्यसित साँध जोडिन गएको थियो ।

काठमाडौंमा रहेका मैथिली ब्राह्मणहरूको सम्पर्क पाल्पामा मुकुन्द सेनसित पनि भएको हुँदा तिनीहरू मार्फत् रत्न मल्लले पाल्पाली राजासंग मद्दत मागेको कुराले त्यतिखेरको राजनीतिमा ज्यादै महत्त्व राख्तछ । नेपालको दूत भएर मैथिलहरूले पाल्पा गएको घटना हाम्रा लागि खोजीकै विषय हुन् । रत्न मल्लको नेपाल मण्डलसित पश्चिम साँध जोडिएको पाल्पा राज्यमा सैनिकहरू खस रहेको संकेत पनि यहाँ दिइएको छ । तर, त्यतिखेर 'मगर' सेना पनि त्यहाँ अवश्यै हुँदो हो । आवादीको हिसावले यो क्षेत्र 'मगरात' नै हो । सहायता माग गर्ने रत्नमल्लले नै 'खस' सेनामात्र

---

१. भैरव बहादुर अधिकारीको संग्रहको संग्रहमा रहेको 'देवमाला', वंशावली:
प्रकाशक- गोरखनाथ मठ, मृगस्थली (सं. २०१३)

२. नेपाल भाषाबाट 'जो' को अर्थ थली परेको जमीन हो । त्यसैबाट यहाँ भौगोलिक शब्द 'जोल' बनेको छ ।

मागेको पनि हुन सक्छ ।

हमलावार 'कुकु' भोटेहरूलाई मारेपछि पाल्पाली सैनिक डफ्फाका 'खसहरू' फर्केर नगई नेपालमा नै ठाउँ ठाउँमा बसोवास गराइराखेको भन्ने वंशावलीको कथन पनि मननयोग्य हुन्छ । शायद खस सैनिकहरू नेपालमा नै स्थायीरूपमा राख्ने रत्न मल्लको विचार भएको यसले व्यक्त गर्दछ । अर्कोतिर, खसहरूको पूर्वविस्तारको प्रक्रियामा यसले अरू थप सघाउ पुऱ्याउन पनि यथेष्ठ भूमिका तैयार गरिदियो ।

साथै, वंशावलीमा चर्चित 'कुकुस्यानाजोल' कहाँ पर्छ त्यो पनि अनुसन्धेय छ । यसरी भोटेहरूको हमला र तिनीहरूको दमन गर्न पाल्पाली 'खस' सेनालाई बोलाएर ल्याएको घटना पुष्टि गर्ने काम पनि अनुसन्धानकै एउटा विषय यहाँ हुन सक्तछ । वंशावलीहरूमा केवल अनुश्रुति परंपराको आधार लिएर लेखेको हुँदा त्यसलाई ऐतिहासिकता प्रदान गर्ने अन्य प्रमाणको आवश्यकता भने छँदैछ ।

परिच्छेद ८

# बनेपा भेकमा रण मल्लद्वारा स्वतन्त्रराज्यको स्थापना र त्यसमा रत्न मल्लको प्रभाव

ललितपुरमा रत्न मल्लले अधिकार गरेको विशिष्ट घटनाका सम्बन्धमा माथि परिच्छेद ५ मा चर्चा भएको छ। साथै, रत्न मल्लको यस अभियानमा उनका भाइ रणमल्लले पनि साथ दिएर 'त्रि-पुर राजकुल' का ठाकुरहरूको सार्वभौम नेतृत्व गरी रत्न मल्लको शासन यहाँ विस्तार भएको ऐतिहासिक विश्लेषण प्रस्तुत गरिएको छ। तर, भक्तपुरमा राय मल्लको मृत्यु भएपछि रत्न मल्लले आफ्नो स्थिति अरू मजबूत बनाएर ललितपुरबाट रण मल्लको अधिकार छुटाइदिए। त्यहाँ रत्न मल्लको मात्र एकल अधिकार स्थापित भयो। यो देखेर रण मल्ल चिढिनु स्वाभाविक छ। रण मल्लले पनि रत्न मल्लकै अनुकरण गरी भक्तपुरमा आफ्नो साझा अधिकार अथवा संयुक्त शासन कायमै राखी 'बनेपा' मा भने आफ्नो स्वतन्त्र राज्य बनाए।

हुन त राय मल्ल जीवित छँदै रण मल्ललाई 'बनेपा' को प्रशासन हेर्न खटाइराखेकै थियो। बनेपा नगर काभ्रेको सात गाउँको केन्द्रस्थल मात्र नभएर लिस्तीको बाटो गरी तिब्बतसित हुने व्यापारको मार्गमा पनि पर्दथ्यो। बनेपाको यो व्यापार नाका लिच्छविकालदेखि उत्तराधिकार स्वरूप विद्यमान थियी। त्यतिखेरै यहाँ व्यापारीहरूको जमघट हुने भएर यसलाई 'वणिकपुर' भन्ने गरिएको थियो। 'वणिकपुर' कै अपभ्रंश भएर 'वनेपा' शब्द बनेको छ। त्यसको साथसाथै पनौती, नाला, खडपु, चौकोट, धुलिखेल र साँगासमेत गाभेर बनेपा केन्द्रको रूपमा रहेको छ। यिनीहरू काभ्रेमा 'सातगाउँ' को नामले इतिहासमा प्रसिद्ध छन्। यिनै सातग्रामहरूको राजनैतिक-सांस्कृतिक केन्द्र तथा तिब्बतसित व्यापार मार्ग पनि हुनाले 'बनेपा' को आर्थिक महत्त्व बेग्लै थियो। त्यसो हुँदा एउटा भाइ रणमल्लको जिम्मा दिएर जेठा राय मल्लले बनेपामा 'त्रि-पुर राजकुल' को केन्द्रीय अधिकार राख्दै आएका थिए।

बनेपालाई राजधानी भक्तपुरबाटै शासित प्रदेशको रूपमा राखेर त्यहाँ रण मल्ललाई स्वायत्त अधिकार दिइराखेका थिए। यस कुराको पुष्टि गर्ने ऐतिहासिक लिखत हालसम्म देखिएको छ 'पाण्डव विजय' नाटक।[1] यो नाटक कहिले लेखिएको वा मञ्चित भएको थियो त्यसको समय यकिन हुन सकेको छैन। नाटकमा यसको लेखन समय दिइएको नहुँदा यो समस्या उत्पन्न भएको छ तापनि राय मल्ल जीवित छँदै रण मल्लको छोरा माधव मल्लको विवाहको उपलक्ष्यमा बनेपामा यो नाटक प्रदर्शन गरिएको थियो।

---

१. * हरप्रसाद शास्त्री: सूचीपत्र, भाग- १
* वीर पुस्तकालय: वृहत् सूचीपत्र भाग- ३
* 'पूर्णिमा' पूर्णाङ्क ३७ (सं. २०३४), संशोधन मण्डल

रणमल्ल आफैले यो नाटक बनाउन लगाएर यसको अभिनय तथा गीत-वाद्य-नृत्य संयोजन समेत उनैले गरेको भनेर यसरी व्यक्त गरिएको छ:

*"श्रीश्रीजय रण मल्ल देवेन राज्ञा स्वयं निर्म्माय गीत वाद्य (नृत्यैर्योजितम)भिनय नवनाटच रस समुदये समस्त नाटक लक्षणालंकाराणि रचना चमत्कार रमणीयं पाण्डव विजयं नाम नाटकं नाटयिटव्यं ॥*

*श्रीमन्माधव मल्लस्य देव्यासार्धं यथोचितं ।*
*विवाहोत्सव कल्याणं भुवने च प्रवर्त्तते । ।*

*x x x*

*संराजते त्रिदश नाथ पुरेव रम्या*
*चण्डेश्वरी विविध देव गणैः समेता ।*
*वैणापुरीति विदिता गुणिनां निवासा*
*संपालिता च रण मल्लनृपेण धर्म्मैः । ।*

[राजा रण मल्ल देव आफैले बनाउन लगाएर गीत-वाद्य-नृत्य र अभिनयको संयोजन गरेर नवै रसले भरिएको नाटकका सबै लक्षण अलंकारहरू भएको रचना चमत्कारद्वारा रमाइलो नाटक 'पाण्डवविजय' खेलाइनु पर्नेछ ।

श्रीमाधव मल्लको यथाविधिपूर्वक विवाहको उत्सवमा यो नाटक प्रदर्शन गरिएको छ ।

स्वर्ग जस्तो रमणीय चण्डेश्वरी आदिविविध देवाताहरूसहित गुणीहरूको बसोवास भएको राजा रण मल्लले धर्मपूर्वक पालन गरिराखेको वैणापुरी (वणिकपुर) भन्ने शहर सुहाइराखेको छ।]

यस नाटकमा राजाका रूपमा रण मल्लको जुन वर्णन गरिएको छ त्यसबाट अवश्य पनि उनी नेपालको एउटा सार्वभौम राजा भन्न सकिन्छ । उनी 'बनेपा' मा सीमित सामान्य शासक भए यस्तो दावी कसरी गर्न सक्तछ त्यो कुरा यहाँनिर विचारणीय हुन्छ । नेपालको शासनकेकन्द्रमा निहित सार्वभौमिकताको हक हिस्सेदार नभएको शासकले यस्तो दावी लिन सक्तैन । यहाँ चर्चित रण मल्लको प्रशस्ति एक पटक पढौं :

*"निखिल सामन्तचक्रचूडामणि मरी (चि मञ्जरी चर्चित) चरण कमलेन,*
*सकल गान्धर्व विद्या गुण रत्नाकरेण,*
*अष्ट दिग्विलासिनी कर्ण्णपूरीकृत पल्लवेन,*
*दिनकर पंकेरूह विकासनैक भास्क(रेण),*
*नेपाल मण्डलेश्वर वीर नारायणावतारेण,*
*श्रीमता श्रीश्रीजय रण मल्लदेव भूपालेन । ।*

*य एषः । ।*

*लोकेख्याति महेश्वरो नृपगणैः संसेव्यमानोऽनिशं,*
*वीराराति करीन्द्र दर्प्प विजितः पंचाननो यं वली ।*
*भूपः: श्रीरण मल्ल देव गुणवान्पुण्येन संवर्द्धितो,*
*भातिस्म भुवि मण्डले च विजयी श्रीराजनीत्यापुनः । ।*

[सारा सामन्तहरूको पंक्तिमा शिरोमणिको किरणरूपी पालुवाले जसको पाउमा सेवा पुऱ्याइएको छ, सारा गायनविद्याको गुणका खानी जो छ, आठौं दिशा ढाकिने गरी जसको कानको हाँगा फैलिएको छ, सूर्य वंशरूपी कमल विकसित गर्न सूर्य समान, नेपाल मण्डलको अधिपति वीर नारायणको अवतार भएको जो यस्तो राजा रण मल्लदेव हुनुहुन्छ ।

सामन्त राजाहरूद्वारा सेवा पुऱ्याइएर लोकमा प्रसिद्धि जसको छ, असूरहरूको घमण्ड तोडेर विजयी भएका शंकर जस्तै बलवान राजा, गुणी रण मल्ल आफ्नो पुण्यले गर्दा बढीबढाउ भएर राजनीतिमा निपुण हुनुहुन्छ । ]

यस प्रकार एउटा स्वतन्त्र राजाको प्रशस्ति धारण गरेर पनि रणमल्लले जेठा दाजू राय मल्ल प्रतिको समादरमा कत्ति चुकेको छैन । यसले गर्दा, त्यतिखेर नेपालको राजनीतिको शक्तिकेन्द्र त्रिपुर राजकुलकै प्रतिनिधि भएर रणमल्ल बनेपामा बसेको कुरा पुष्टि हुन्छ ।

'पाण्डवविजय' नाटकको यो प्रारम्भिक वार्तालाप हाम्रो लागि पठनीय छ:

*भृङ्गी - भगवान् गणाधिराज नेपाल भूमण्डलस्य को भूपति ?*

*विना - मुने भृंगिन्कथमनभिज्ञस्त्वमेव श्रृणु ।।*

*श्रीमत्कर्पूर देव्यास्तनय नृपवर: सत्प्रतापा सुरारि-*

*र्भूमौ यस्यैव कीर्ति: शशिकर विमला विश्वे दिग्मध्ययाता ।*

*भूपानंतोधृतो यो धरणिकटिसम: श्रीप्रभु रायं मल्लो*

*दातार्थिभ्यो विवेकी सकल जननृप: शोभते मर्त्यलोके ।।*

[भृङ्गी ऋषिको प्रश्न:

नेपाल भूमण्डलको राजा यति खेर को हुनुहुन्छ ?

उत्तर: मुनि भृङ्गीलाई कसरी थाहा नभएको यो कुरा सुन्नुहोस्-

यतिखेर पृथ्वीमा (नेपालमा) श्रीकर्पूरदेवीको छोरा आफ्ना प्रतापले चन्द्रमाको किरण झैं शीतल कीर्ति संसारको कुना कुनासम्म फैलाइराखेको, सामन्त राजाहरूलाई पृथ्वीको कटि मेखला जस्तै धारण गर्ने राय मल्ल, माग्नेहरूलाई दाता विवेकी भएर सबै जन समुदायको राजा हुनुहुन्छ ।]

भक्तपुर 'त्रि-पुर दरवार'मा रहने राय मल्ल प्रति जुन भक्तिभाव रण मल्लले यस नाटकमा देखाएका छन् त्यसले केन्द्रमा रण मल्लको पनि संयुक्त शासनमा हकदारी कायम रहेको जनाउँछ ।

यति हुँदाहुँदै पनि, अघि नै भनियो, यस नाटकको रचना अथवा मञ्चन कहिले भयो त्यो समय खुल्न सकेको छैन । रण मल्लको एउटा छोरा माधव मल्लको विवाहमा खेलाइएको यो नाटक हुनाले सो बारेमा खोजी गर्ने आधारहरू भने नभएका होइनन् ।

यहाँ चर्चित 'पाण्डव विजय' नाटक लेखाउने राजा रण मल्ल भनी स्पष्ट गरेको छ तापनि यसको खुद लेखक चाहिँ शुभराज हो । उनका बाबु अभयराज पनि दरवारी कवि नै थिए । उनी 'कवीश्वर' को उपाधिद्वारा विभूषित भएर पनि 'शुद्रान्वय' अर्थात् शुद्र कुलमा जन्मेको भनेर पनि घोषित गरिएकाले नेपालको नाट्य साहित्यमा अझ महत्त्वपूर्ण छ:

*"अस्ति शुद्रान्वये जातोऽभय राज कवीश्वरः ।*

*तत्पुत्र शुभराजोऽसौ तेनेदं रचितं शुभम् ।।*

राय मल्ल प्रति यस प्रकारले निष्ठावान् रहिआएका रण मल्लले ललितपुरमा रत्न मल्लको अधिकार स्थापित गर्न मद्दत गरेका छन् । त्यहाँ रत्न मल्लकासाथ आफू पनि संयुक्त शासक भएर देखापर्छन् । तर, राय मल्लको भक्तपुरमा ने.सं. ६३० मा (सं. १५६६) मृत्यु भएपछि शासनकेन्द्रमा राजकीय सत्ताको परिदृश्य बदलिएर रत्न मल्लले ललितपुरमा ने.सं. ६३५ देखि (सं. १५७२) एकल अधिकार स्थापित गर्दा रण मल्लले पनि 'बनेपा'लाई केन्द्रको 'त्रिपुर-राजकुल' बाट स्वतन्त्र गरी त्यहाँ आफ्नो मात्र शासनको प्रतिष्ठापन गरे । यता भक्तपुरको शासनमा आफ्नो पुर्खौली अधिकार (संयुक्त शासकको हैसियत) पनि उनले कायम नै राखेको पाइन्छ । यो शैलीको प्रणेता चाहिँ रत्न मल्ल नै हुन् । उनकै सिको गरी रण मल्लले पनि यस्तो राजनीतिक चालको अख्तियार गरेकोमा विश्वास गर्न सकिन्छ ।

नेपाल मण्डलको पुर्खौली राजधानी भक्तपुर 'त्रि-पुर दरवार'मा रत्न मल्लको शासकीय सहभागिता रहिआएकोले 'बनेपा'मा भक्तपुरको सार्वभौमसत्ता कायम छँदासम्म त्यहाँ रत्न मल्लको पनि परोक्ष अधिकार रहेको मान्नु पर्नेछ । तर, बनेपालाई रण मल्लले आफ्नो एकल अधिकारमा राखेपछि त्यहाँ रत्न मल्लको साविक अधिकार कायम रहने भएन । यहाँनेर, रत्न मल्ल र रण मल्लको फाटो परेको कुरा प्रष्ट हुन्छ ।

अब, बनेपाको सातगाउँमा रण मल्लको स्वतन्त्र शासन सिद्ध गर्ने आधार खोजी गर्दा अभिलेख निमित्त ने.सं. ६३६ (सं. १५७२) मा देखापर्छ । बनेपा वकुटोल, धारा अगाडि स्थानीय वासिन्दाहरूले माधव-नारायण स्थापना गरी राखेको अभिलेखमा त्यस बखत रण मल्लको एकल शासन देखिएको छ । सो अभिलेखको सान्दर्भिक अंश यस प्रकार छ:

*"श्रीश्रीजय रण मल्ल देव प्रभु ठाकुरस्य विजय राज्ये ।। तस्य माघ व्रते भक्तजन विप्रश्री विमराजदेव, यजमान जखराज भारो स्वक भारो .......... परत्रम् स्वर्ग कामनार्थेन माधव देवता थापन ।। श्रेयोस्तु ।। सम्वत् ६३६ माघ मास शुक्ल पक्ष पूर्णमास्यां तिथौ पौष्य नक्षत्रे आयुष्मान् योगे शनिश्चर वासरे, कुम्भ राशिगते सवितरि कर्कट राशिगते चन्द्रमसि शुभमस्तु सर्वदा शुभ ।।*

**[परिशिष्ट खण्डः अभिलेख संख्या- १]**

बनेपा सातगाउँको क्षेत्र अन्तगरत 'नाला' पनि पर्छ । त्यहाँ रण मल्लको शासन पुष्टि गर्ने अर्को अभिलेख नाला वलाछे टोल स्थित गणेश मूर्तिको पादपीठमा देखापर्छ । त्यहाँ ने.सं. ६३७ (सं.१५७४) अंकित छ । सो अभिलेखको उतार तल प्रस्तुत गरिएको छ:

*(१) शुभ ।। सम्वत् ६३७ वैशाख शुक्ल द्रीतियायां तिथौ ।। कृत्तिक*
*(२) नक्षत्र प्र. रोहिनि नक्षत्र सोभन जोगे वुदवासरे श्री-*
*(३) श्रीजय रण मल्लदेव प्रभु ठाकुरस्य विजय राजस*
*(४) शुभराज भारोया पुत्र दिवंगत जुवया श्री ३ विनाय-*
*(५) (क प्रतिष्ठा) दिन शुभमस्तु सर्व जगतां ।।*

**-'वनेपा सातगाउँ'**
**-वनेपा नगरपालिकाको स्मारिका-३, (सं. २०५३)**
**[यस अभिलेखको तिथि-मिति गणना इ.सं. प्रमाण-प्रमेय: पृष्ठ ३३६ मा हेर्नुहोस्, संशोधन मण्डल (सं. २०१९]**

[ने.सं. ६३७ वैशाख शुक्ल द्वितीया कृतिका नक्षत्र पर रोहिणी नक्षत्र शोभन योग बुधवारको दिन श्रीश्रीजय रण मल्ल देव प्रभु ठाकुरको विजय राज्यमा शुभराज भारोको दिवंगत छोराको स्मृतिमा यो गणेश स्थापना गरियो ।]

रण मल्लका पालाको एउटा अर्को अभिलेख बनेपा स्वधार टोलमा (तीन धारा) रहेको छ । ने.सं. ६३७ मा नै यहाँ विष्णुको मूर्ति सहित मन्दिर स्थापित भएको उल्लेख त्यस अभिलेखमा गरिएकोछ । सो अभिलेखको आंशिक उतार तल दिइन्छ :

*"श्रीश्री जय (रण मल्ल) देवस्य विजय राज्ये, स्वधार स्थाने विद्या श्रीपीठि संजु(क्ते)..... सुवर्ण कलश ध्वजावरोहण दामोदर भक्तित: ।।.......*

*नेपाल वर्षे मुनि लोक स्वादे सेतु राधोशित पुष्य दशम्यां ऋक्षेच फाल्गुण्ये योग ... सूर्य गते वृष राशि ..... लग्नेव सिंघे शुभ लग्न जुक्तं ।। शुभमस्तु सर्वदा शुभ: ।।"*

**-परिशिष्ट खण्ड: अभिलेख संख्या- २**

यस प्रकार बनेपामा स्वतन्त्र शासक देखिने रण मल्ल भक्तपुरमा भने रत्न मल्लको मृत्यु भएपछि पनि संयुक्त शासकको हैसियतमा कायमै रहेको देखिन्छ । भक्तपुरमा उनको प्रभाव घटेको देखिँदैन । बरु, पहिलेभन्दा बढ्दो स्थितिको आभास पाइन्छ ।

भक्तपुरमा ने.सं. ६३० (सं. १५६६) मा राय मल्लको मृत्यु भएपछि उनका छोरा भुवन मल्ल गद्दीमा राखिए । तर, शासन सत्ता भने साविककै रूपमा रहिरह्यो । त्यतिखेर, संयुक्त शासनमा रत्न मल्लकासाथ रण मल्ल र भीम मल्ल समेत कायमै रहेका देखिन्छन् । भुवन मल्ल नाम मात्रको राजा भए । ने.सं. ६३९ मा (सं. १५७५) यी भुवन मल्लको पनि देहान्त भयो । त्यसपछि उनका छोरा प्राण मल्ल गद्दीमा राखिए ।

यता ने.सं. ६४० (सं. १५७७) को भाद्र महिनामा कान्तिपुरमा महाराजाधिराज रत्न मल्लको पनि देहान्त भयो । त्यस बखत पनि भक्तपुरको शासन मण्डलमा भने रण मल्ल र भीम मल्लको स्थान यथावत् देखापर्छ । यसको केही समयपछि ने.सं. ६४३ मा (सं. १५८०) आएर यी रण मल्ल र भीम मल्लका साथ वीर मल्ल र जित मल्ल थपिएर फेरि चौभय शासनै देखापर्छ ।

**(परिच्छेद-४ पृष्ठ ४७)**

यसरी ने.सं. ६३५ (सं. १५७२) देखि रण मल्लले दाजू रत्न मल्लसित फुटेर बनेपामा स्वतन्त्र राज्य खडा गरे पनि भक्तपुरको शासनमा चाहिँ नाति प्राण मल्लको पाला ने.सं. ६४३ (सं. १५८०) सम्म पनि उनी कायमै रहेको देखापर्नाले रण मल्लको राजनैतिक भूमिका प्रष्ट हुन्छ ।

अब, रण मल्लको मृत्यु कहिले भयो त्यो भने पत्ता लागेको छैन । प्रचलित भाषा वंशावलीमा चाहिँ रण मल्ल निसन्तान भएर उनको शेषपछि बनेपा भक्तपुरमा नै गाभियो भन्ने आसयको व्यहोरा पाइन्छ:

*"रण मल्लले बनेपुर जाई सातग्रामका राजा हुन गया । भोग वर्ष २१ । ।*
*यी रण मल्लका सन्तान भएनन् र बनेपुरका राजधानी यत्तिकै हो ।"*

**-भाषा वंशावली, भाग-२**
**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

बनेपामा रण मल्लको शासन कस्तो रह्यो त्यसतर्फ इङ्गित गर्ने ऐतिहासिक सामग्री विशेष भेटिएको छैन । भाषा वंशावलीमै यी रण मल्लका पाला ने.सं. ६२२ तिरको एउटा घटना भनेर बनेपाली व्यापारी वर्गमा मानन्धरहरूको भूमिका संकेत गर्ने केही उल्लेख पाइन्छ । राजनैतिक महत्त्वको नभए पनि बनेपाको व्यापार क्षेत्र जनाउने हुनाले पठनीय हुन्छ :

*"यिन राजाका (रण मल्ल) पालामा बनेपुरको नेवार एक कोही तैलकार मोहनसिंलाई कुमारी कुण्डका देवीले स्वर्ण महिष शिर (नेवारी : लूं-मे छ्यो) दिइन् र श्री पशुपतिनाथकन अघि नभयाको चाँदीका कवच बनाई अनेक हिरा आदि जवाहर पत्थर जडी एकमुखी रुद्राक्ष सहित गरी कंकण सहित कवच चऱ्हाया । नेपाल संवत् ६२२ मा मोहनसिंले कवच चढाउँदा तेलका साल एक चढायाको कान्तिपुरमा छँदैछ ।"*

**-भाषा वंशावली, भाग-२**
**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

यहाँ कुमारी कुण्डकी देवी भनेर बनेपाको प्रसिद्ध चण्डेश्वरीलाई संकेत गरिएको हो । यसबाट जनमानसमा स्थानीय चण्डेश्वरीको महिमा उच्च रहेको परंपरा व्यक्त हुन्छ । अर्कोतिर, बनेपा एउटा पहाडी व्यापार केन्द्र हुनाले एकथरि व्यापारी वर्ग मानन्धरहरूको भूमिकालाई प्रष्ट्याउन यसले सघाउ पुऱ्याउँछ ।

तर, रण मल्ल निसन्तान भएर उनीपछि बनेपा राज्य कायम नरहेको आशय व्यक्त गर्ने उपर्युक्त वंशावलीको कथन भने प्रमाणसिद्ध हुँदैन । रण मल्ल ने.सं. ६४३ (सं. १५८०) सम्म त

जीवित रहेकोमा कुनै शंका छैन । त्यसपछि उनको मृत्यु भने कहिले भयो त्यो खुलेको छैन ।

ने.सं. ६५० (सं. १५८६) मा बनेपामा केशव मल्लले शासन गरिरहेको देखिने अभिलेख पाइएकोछ । उनकी रानी जितलक्ष्मीको मृत्यु भएपछि उनको स्मृतिमा बनेपा दछु टोलमा गरुड नारायणको मन्दिर स्थापना गरिएका थिए । यस अभिलेखमा केशव मल्लको छोरा गोविन्द सिंहको पनि उल्लेख छ । सो अभिलेखको सान्दर्भिक अंश तल प्रस्तुत छ :

*"श्रीमत्केशव मल्लस्य भार्य्या,*
*दैवाद्दिवंगता जितलक्ष्मीति विख्याता सुन्दरि...... ।।*
*तत्कुक्षि जातो नयनीति विज्ञो ......*
*गोविन्द सिंहो यशभि: प्रश(स्त:)*
*स राजतो कर्मिक राजपुत्र ।।*

*नेपालाब्दे गते ख (शर) रसके मासे हि चैत्रेऽर्जुने*
*पुष्यर्क्षे गुरु वासरे द(श)मि तिथौजोगेतिगण्डे शुभे ।*
*लक्ष्मी माधव वैनतेय प्रतिमा सौवर्ण शोभामया:*
*पुण्यार्थक स कर्मभि : खलुतदा रम्या प्रतिष्ठा कृता: ।।...*

*श्रीमत्केशव मल्ल देव नृपतेस्तेनैव पुण्येत वै पुत्रा....*
*सम्वत् ६५० फाल्गुण शुद्धि (दशमि) शुभ ।।*

**-परिशिष्ट खण्ड: अभिलेख संख्या-३**

(श्रीकेशव मल्लकी रानी दैव गतिले परलोक भएकी जितलक्ष्मी भनेर प्रख्यात छिन् । उनैको कोखबाट जन्मेको न्याय नीति जान्ने गाविन्द सिंह प्रशस्त यश: फैलिएको राजपुत्र हुनुहुन्छ ।

नेपाल सम्वत् ६५० चैत्र महिना ... वृहस्पति वार दशमी अतिगण्ड योगमा । लक्ष्मी-नारायण गरूड सहित सुनको मूर्ति स्थापित गरी प्रतिष्ठा गरे ।.... राजा केशव मल्ल देवको पुण्यले पुत्रहरू (सहित) ...... ने.सं. ६५० फाल्गुन शुक्ल (दशमी), शुभम् ।।)

यी केशव मल्ल रण मल्लकै पालादेखि बनेपाको शासनमा सम्मिलित रहेको पुष्टि हुन्छ । त्यतिखेर, रण मल्लका साथ केशव मल्ल, माधव मल्ल र विजय मल्लहरू तीन जना राजकुमारका रूपमा 'पाण्डव विजय' नाटकमा प्रस्तुत गरिएकाले यिनीहरू रण मल्लका उत्तराधिकारी देखापर्छन् । तिनमा केशव मल्ललाई त उहिल्यै 'नृपति' नै प्रष्ट कितान गरी लेखेको हुनाले उनी रण मल्लसित संयुक्त शासककै रूपमा रहेको पनि हुन सक्तछ ।

सोही 'पाण्डव विजय' नाटकबाट एकपल्ट फेरि :

*"यस्यामसौ जयतु माधव मल्ल देव-*
*स्तस्यानुजो नृपति केशव मल्ल एषः ।।*

*अपिच ।।*
*नाथल्लदेवि रमणो भुवने प्रसिद्ध*
*कीर्ति प्रभा धवलिताखिल दिग्विभागः ।*
*प्रत्यर्थि वीर कुमुदाकर चण्डरोचिः*
*संराजते विजय मल्ल कुमारोयं ।।*

[जसमा यी माधव मल्लको र उनका भाइ राजा केशव मल्लको जय होस् ।
त्यस्तै,
नाथल्ल देवीको पति भनेर भुवनमा प्रसिद्ध चारै दिशामा स्वच्छकीर्ति फैलिएका कुमार विजय मल्ल सुहाइरहेछ ।]

यति चर्चा गर्नुको खास उद्देश्य यहाँनिर के हो भने, दाजू रत्न मल्लसित एक प्रकारले तक्रार गरी रण मल्लले खडा गरेको बनेपा राज्य कहिले कसरी भक्तपुरमा नै समाहित भयो त्यसको ऐतिहासिक निक्र्योल गर्ने काम भने बाँकी नै छ ।

परिशिष्ट खण्ड

अभिलेख-१

# रणमल्लका पालाको
# बनेपा, वकुटोलको अभिलेख
# नें.सं. ६३६

ॐ नमः भगवते वासुदेवाय ।।

सुदर्शनं गदां चोर्द्धं, वामेकं वुकरी वज ।

माधवं रुग्म संकाशं प्रभुदेव नमोऽस्तुते ।।

श्रीश्रीजय रण मल्ल देव प्रभु ठाकुरस्य विजय राज्ये ।। तस्य माघ व्रते भक्तजन विप्र श्रीविमराज देव, यजमान जखराज भारो, स्वकभारो, असगु भारो वा भारो, वसुराज भारो, कनक भारो, फ्याकु दुवार, हाठोधन भारो, ग्वपिराज भारो, अमित सिंह भारो. चेपराज भारो, महिरा भारो, जोतिभारो, जयत सिंह भारो, ज्ञां भारो, जयतराज भारो, विकुभारो, कुसुमराज भारो, जयराज भारो, जितराज भारो, जगतराज भारो, तोय भारो, नाथजीव भारो, वावुदीत भारो ।। तस्य धर्म्म पुण्य फलेन जनधन लक्ष्मी आयु आरोग्य वृद्धिरस्तु ।। इहत्र सुख संपद परत्रं स्वर्ग्ग कामनार्थेन माधवदेव स्थापन ।।

श्रेयोऽस्तु ।। सम्वत् ६३६ माघमासे शुक्ल पक्ष पूर्णमास्यां तिथौ, पोष्य नक्षत्र आयुष्मान् योगे शनिश्चर वासरे, कुम्भ राशि गते सवितरि कर्क्कट राशिगते चन्द्र मसि ।। शुभमस्तु सर्व्वदा शुभ ।।

***

**सन्दर्भः**

**'बनेपा सातगाउँः'**

**बनेपा नगरपालिकाको स्मारिका-३ (सं. २०५३)**

अभिलेख- २

# रण मल्लका पालाको
# बनेपा, स्वधार टोलको अभिलेख
# नें.सं. ६३७

ॐ नमो भगवते (वासुदेवाय) नमोस्तुते ।।

ऊर्द्धश्चक्र गदा धारण वाम शंख मणि हस्त ध्यार्तुजं ।

दक्षिणेन तथा लक्ष्मी वामे तार्काच संजुत देवं दामोदर नमोस्तुते ।।

श्रीविनया पुरीष्ट निमग्नं विष्णु गन्थिन वज्र स्थापितः ।।

श्रीजय (रण मल्ल) देवस्य विजय राज्ये स्वधार स्थाने विद्याश्रीपीठि संजुते् पादार्चण सुवर्ण्ण कलश ध्वजावरोहण दामोदर भंक्तितः ॥

श्री भक्तापुरी स्थाने पुषुरि वंटा टोल निवासित जयत भण्डारी नाम्नेन स्व कामनार्थेन् पुत्र पौत्र जनधन (लक्ष्मी) संतति संतान वृद्धिरस्तु ॥

नेपाल वर्षे मुनि लोक स्वादे सेतुराधोशित पुष्य दशम्यां ऋक्षे च फाल्गुण्ये योग सूर्य गते वृष राशि ... लग्नेवसिंधे शुभ लग्न जुक्तं ।। शुभमस्तु सर्व्वदा शुभः ॥

***

**सन्दर्भः**

**बनेपा सातगाँउ**

**बनेपा नगरपालिकाको स्मारिका- ३ (सं. २०५३)**

# केशव मल्लको
# बनेपा, दछुटोल गरुड नारायण मन्दिरमा रहेको अभिलेख
# नेे.सं. ६५०

१. .... (ल(क्ष्मी सदावस्थि(त)

**(२. देखि १० पंक्ति पढ्न नसकिने)**

११. .... के प्रसिद्धा ....

१२. .... । य-मार देहः स ......

१३. ...: ।। श्री (वि)ष्णु पादार्चन तनारासौ श्री ......

१४. .... वै ।।६ ।। श्रीमत्केशव मल्लस्य भार्य्या दैवाद्दिवंगता जि-

१५. तलक्ष्मीति विख्याता सुंदरि .... ।।७ ।। तत्कुक्षि जा

१६. तो नयनीति विज्ञो यो ... ज भक्तिः । गो-

१७. विन्द सिंहो यशभि प्रश(स्तः) स राजतो कर्मिक राजपुत्र ।।

१८. ८ ।। तस्यपुत्र महाधीरः सुन्दरः सुकुमारकः । नारायण

१९. हरिः ख्यातो वालगोपावतारितः ।।९ ।। सौवर्ण प्रति-

२०. मा तैस्तु क्रीयते शास्त्र कर्म्मभिः । भक्त्यर्थ देव देवस्य प्र-

२१. तिष्ठा माधवस्य च ।।१० ।। नेपालाब्दे गते ख (शर) रसके

२२. मासे हि चैत्रे ऽर्जुने पुष्यर्क्षे गुरु वासरे द(श)मि तिथौ जो-

२३. गेतिगण्डे शुभे । लक्ष्मी माधव वैनतेय प्रतिमाः सौ-

२४. वर्ण शोभा मयाः पुण्यार्थक स कर्मभिः खलु तदा

२५. रम्याः प्रतिष्ठा कृताः ।।११ ।। सुवर्ण्ण निर्मितास्तैस्तु

२६. क्रियते वेद कर्म्मभिः । प्रतिष्ठाः प्रतिमांः श्रेष्ठाः

२७. भक्त्यर्थ माधवस्य हिं ।।१२ ।। श्रीमत्केशव मल्ल देव

२८. नृपतेस्तेनैव पुण्येत वै पुत्रा ......

२९. सुखं भूयात्स (र्ब्व) मंगलं । अन्ते स्वर्गगतं च विष्णु

३०. निलयं यावदगिहे .... माधव भक्तिरस्तु

३१. सततं वैकुण्ठवासे चल ।।१३ ।। शुभमस्तु सर्व्वदा

३२. सम्वत् ६५० फागुण शुद्धि (दशमि) शुभ ।।

***

सन्दर्भः

'बनेपा सातगाउँः'

बनेपा नगरपालिकाको स्मारिका-३ (सं. २०५३)

# परिच्छेद ९
# दोलखामा नयाँ राज्यको उद्भव

तिब्बत र भारतका बीचको प्रचलित व्यापारका कारणले गर्दा नेपाल मण्डलको पार्वत्य प्रदेश 'बनेपा' नगरमा जुन आर्थिक कारोवारको श्रीवृद्धि भयो त्यसबाट रण मल्लले 'त्रि-पुर राजकुल' का सदस्यको हैसियतले शुरुदेखि फाइदा उठाइरहेका थिए। त्यसैबाट उनको त्यहाँ निकै प्रभाव फैलियो पनि। रत्न मल्लले ललितपुरमा त्रिपुर ठाकुर राय मल्लको अधिकार छुटाई त्यहाँ आफ्नो अधिकार गर्ने सिलसिलामा भाइ रण मल्लको सहायता प्राप्त गरेको कुरा माथि परिच्छेद ५ मा विश्लेषण गरिसकिएको छ । पछि त अर्को भाइ राम मल्ल पनि त्यसमा सरिक भए। यस प्रकार ने.सं. ६१५ देखि ६३५ सम्म (सं. १५५२-१५७२) करीव २० वर्षको लामो अवधिभर रत्न मल्लले भाइहरूलाई संयुक्त शासनमा सम्मिलित गराई ललितपुरमा आफ्नो प्रभाव जमाउँदै रही पछिबाट त्यहाँ भाइहरूको अधिकार छुटाइदिँदा रण मल्ल चिढिएर 'बनेपा' लाई स्वतन्त्र राज्य बनाएको चर्चा पनि माथि परिच्छेद ८ मा गरियो। यसबाट रत्न मल्लको एउटा कमजोरी देखापर्छ। तर, त्योभन्दा पनि अर्को ठूलो उनको कमजोरी त्यसअघि नै देखापरेको छ। त्यो थियो तिब्बतसित व्यापार मार्ग 'दोलखा' मा अर्को एउटा स्वतन्त्र राज्यको उद्भव।

नेपालको सरहद दोलखा भएर भारतीय मैदानबाट तिब्बतको पूर्वी भेक सिगात्सेसित हुने गरेको व्यापार बढ्दै गएर त्यहाँ पनि एउटा ठूलो शहरकै निर्माण भयो। यक्ष मल्लको पालासम्म नेपाल मण्डलको राजधानी केन्द्रबाटै यो नगर शासित रह्यो। यक्ष मल्लको शासनको उत्कर्ष काल ने.सं. ५७४ (सं. १५१०) मा दोलखामा सामन्त शासक कीर्ति सिंह थिए। **'हिरण्य सप्तक'** ग्रन्थको पुष्पिकाबाट उक्त कुरा ज्ञात हुन आएको छ। दोलखामा नै लेखिएको सो ग्रन्थ उहिल्यै लण्डनमा पुगिसकेको छ। त्यसमा रहेको पुष्पिकामा शुद्ध पाठको निर्णय गर्ने काम बाँकी नै छ ता पनि बुझिएसम्मको पाठ यस प्रकार छ :

*"(सं) ५७४ फाल्गुण शुद्धि १२ यक्ष मल्ल देव राजे ... एको विनव्वल परिवाग्रभितन प्रपरिघ ॥... थ्व स्वम्ह राजा मूतन द्वलखा जुदिकोत्वम् श्रीकीर्तिसिंहत्वम् ॥...... श्री जक्षमलदेव राजात्वं उपरे वव ॥ थुति वव तलभिनिचोसस श्रीमन्श्रीजक्षमल्लदेवस्यं फुउ हङगोअ"*

**-धनवज्र बज्राचार्य- टेकबहादुर श्रेष्ठ**
**दोलखाको ऐतिहासिक रुपरेखा, पुष्ठ २२**
CNAS त्रि.वि. (सं. २०३१)

[ने.सं. ५७४ (सं. १५१०) फागुन शुक्ल द्वादशी .... यक्षमल्ल देवको राज्यमा .... यी तीनै राजाहरूको दोलखामा प्रतिनिधित्व गर्ने श्रीकीर्तिसिंह भए । .... श्रीयक्ष मल्ल देवको विरुद्धमा अघि सर्दै आए । यसरी आउनेहरूलाई श्रीयक्ष मल्ल देवले दर्‍होसित सामना गरे ।]

यक्ष मल्लको समयमा नेपाल मण्डलभित्र 'दोलखा' पनि समाहित रहेको तथ्य उपर्युक्त उद्धरणबाट पुष्टि हुन्छ । त्यतिखेर त्यहाँ कीर्तिसिंह सामन्त शासकका रूपमा केन्द्रबाटै नियुक्त महापात्र थिए । यिनी ने.सं. ५९४ सम्म दोलखामा सामन्त शासक रहेको कुरा दोलखा राजवंशावलीमा उल्लेख गरिएको पाइन्छ[1] । उनको मृत्युपछि उनकै छोरा उद्धवसिंह पुस्तौनी अधिकार अनुसार दोलखाको महापात्र भए । तर, ने.सं. ६०२ मा यक्ष मल्लको मृत्यु भएपछि उनका छोराहरूमा परस्पर मेल नभएको र त्रिपुर राजकुलका सदस्यहरू बीच यसरी शक्ति संघर्ष हुन थालेको चाल पाएर सामन्त उद्धवसिंहले दोलखामा आफ्नै स्वतन्त्र शासन स्थापित गर्ने चाहना राखे । यिनले आफ्नो नाम अब उद्धवदेव ठाकुर घोषित गरी केन्द्रबाट अलग हुन थाले ।

यी उद्धवदेवको ने.सं. ६११ (सं. १५४८) को एउटा अभिलेख प्राप्त भएको छ । दोलखामा पाइएको सबभन्दा पुरानो राजकीय अभिलेख अहिलेसम्म यही देखापर्छ । त्यसमा उनलाई 'दोलखाधिपति' घोषणा गरिएको छ । दोलखा, तीनधारेको परिसरमा रहेको एउटा पुरानो कृष्णमूर्तिको पादपीठमा यो अभिलेख अंकित छ:

*"ॐ स्वस्ति ॥ श्रीश्रीकृष्ण देवतायै (नमः)*
*दोलखाधिपति श्रीश्रीउद्धवदेव ठाकुरस्यकीर्तिः ॥*
*श्रेयोस्तु॥ सम्वत् ६११ भाद्र कृष्ण अष्ट(मी) थ्व कुन्हू*
*थपनायाङा । ..... शुभमस्तु सर्व्वदा ॥०॥"*

**-मोहनप्रसाद खनाल**
**नेपालका केही मध्यकालीन अभिलेख**
**पृष्ठ ४-६ (सं. २०२९)**

यसरी दोलखामा व्यापार नायक महापात्र उद्धवदेवले आफ्नो स्वतन्त्र हैसियत राख्न अघिसर्नुको पछाडि राजधानी कान्तिपुरमा रत्न मल्लको दिनचर्या अधिकांशतः पश्चिमको व्यापारकेन्द्रमा नै बितेको थियो । यतिखेर, नुवाकोटमा वैश्य ठकुरी महापात्रहरूलाई उन्मूलन गर्दा उनी नेपालको उत्तरी सीमावर्ती "कुकु' भोटेहरूको उपद्रोमा अल्झिनु पर्‍यो । तिनीहरूलाई तहलाउन बाहिरी राज्यको सहायता समेत माग्न रत्न मल्ल बाध्य भए । यसको चर्चा माथि परिच्छेद-७ मा विस्तारसाथ भएको छ । यस प्रकार, अत्यधिक समय पश्चिमको व्यापार मार्गमा लब्ध प्रशमन गर्न खर्च गर्नु पर्दा पूर्वतिर दोलखाली महापात्रहरूले मौका छोप्न पाएको देखिन्छ ।

अब दोलखामा उद्धवदेवको शासन के कति समय रह्यो त्यो ज्ञात हुन सकेको छैन । तर, नेपाल मण्डलमा रत्न मल्लको चौतर्फी प्रभाव रहँदा पनि दोलखा उनको अधीनमा आउन

---

१. मोहनप्रसाद खनाल:
नेपालका केही मध्यकालीन अभिलेख
(सं. २०२९) पृष्ठ ५

सकेको थिएन ।

उद्धवदेव पछि ने.सं. ६३२ (सं. १५६८) मा दोलखामा नन्ददेवको शासन देखापर्छ । उनले कोट्याहुति यज्ञ गरी विष्णुको मन्दिर निर्माण गरेको एउटा भग्न अभिलेख त्यहाँ पाइएको छ । तर, उद्धव देवको ने.सं. ६११ को अभिलेख पछि यही ने.सं. ६३२ को दोस्रो सबैभन्दा पुरानो अभिलेख देखापरेको छ अहिलेसम्म :

*ॐ स्वस्ति ॥ नमो नारायणाय ......*
*नमामी । ..... सम्यक्...... (अ.)*
*ब्दे भुज गुण रसे माघे मासे च शुक्ले......*
*गुरुदिने......का रम्य मूर्ति......*
*स्थापिता विष्णु मूर्ति......(राजाधि-)*
*राज श्रीनन्ददेवो......*
*कोट्याहुति (यज्ञ) ......सम......*
*कलश ध्वज॥......*
*कृत्वा......(श्रे-)*
*यो(ऽ)स्तु॥ सम्वत् ६(३२) (माघ शुक्ल)......*
*थो देवालय...... (ल्हा)*
*क्व फल जूरो......*
*वृद्धिरस्तु॥ शुभस्तु......*

[यो खण्डित अभिलेख सर्वप्रथम मोहनप्रसाद खनालले नेपालका केही मध्यकालीन अभिलेख, पृष्ठ ७-९ (सं. २०२९) मा प्रकाशित गरेका थिए । त्रि.वि. नेपाल र एशियाली अध्ययन संस्थानबाट धनवज्र वज्राचार्यको टोली सं. २०३१ मा जाँदा यो अभिलेख भेटिएन । दोलखा राजकुलको आसपासमा रहेको दुइटा चैत्य मध्ये एउटा चैत्यको उक्लने सिंढीमा पहिले यो शिलापत्र सुताएर राखेको थियो भन्ने टोलीको प्रतिवेदन छ । सो अपूरो अभिलेखमा केही भर्न सकिने अक्षरहरू ( कोष्ठमा) थपेर यहाँ दिइएको छ । ]

दोलखामा उद्धवदेव र नन्ददेवको शासनका बीच करीव २० वर्ष जतिको फरक देखापर्छ । त्यस अवधिमा नेपाल मण्डलको अधिराज रत्न मल्ल आफ्नै भाइहरूसंगको संघर्षमा व्यस्त देखिन्छ । यता दोलखामा भने उक्त बीस वर्षको अवधिमा शासकहरू को कस्ता भए त्यस बारेमा यकिन हुन सकेको छैन ।

अब, रत्न मल्लको अन्त्य अवस्था ने.सं. ६४० (सं. १५७७) मा यता दोलखामा उजोत देवले शासन गरिरहेको पाइन्छ ।[२] उनको शासन त्यहाँ निकै वर्ष देखापर्छ । त्यतिमात्र होइन, रत्न मल्लको मृत्युपछि महापात्र विष्णुसिंहले ललितपुरलाई स्वतन्त्र राज्य बनाउँदाको समयताका ने.सं. ६५३ (सं. १५८९) मा यिनै उजोतदेव ललितपुरको यात्रामा आएको देखिन्छ ।[३] यसमा त्यतिखेर उनको राजनैतिक भूमिका रहेको कुरा प्रष्ट हुन्छ ।

***

२. परिशिष्ट खण्ड: अभिलेख संख्या १

३. परिशिष्ट खण्ड: अभिलेख संख्या २

# परिशिष्ट खण्ड

अभिलेख १

## उजोतदेवका पालाको
## दोलखा कोटछें, स्वयंभू टोलमा नारायणथानको अभिलेख
## ने.सं. ६४०

अद्यवाराहेत्यादि । श्रीश्रीदोलखापुरी पट्टनाधिपति श्रीउजोतदेव प्रभु ठाकुरस विजय राज्ये । यजमान हरि भारोन दयका श्रीश्रीश्रीमाधव नारायणस भंववला सहितन दयकां ‸ अद्याप: कोतोर पात छि १ कोहाड घं ग्वड-१ सिंध मुङ ग्वड- १ मनिग देवा ङर छिव कलिउसा प्ल १ दोल पसान नसे २ वलिछि १ ‸ ध्वते श्रीश्रीश्रीनारायण डोहरपा हरिन: सम्वत् ६४० वैशाष शुक्ल १ रोहिनि नक्षत्र वृहस्पति वार कुन्हु ॥शुभ॥

***

**-धनवज्र समेत**
**दोलखाको ऐतिहासिक रूपरेखा**
CNAS, त्रि.वि. सं. २०३१
**[अभिलेख संख्या ६]**

अभिलेख- २

## उजोतदेवको
## पाटन हिरण्यवर्ण महाविहारमा रहेको स्वर्णपत्र
## ने.सं. ६५३

श्रेयोस्तु सम्वत् ६५३ कार्तिक शुक्ल: त्रयोदश्यान्तिथौ अश्विणि नक्षत्रे ॥ वरियान योगे जथाकर्ण्ण मूहोत्रे आदित्य वासरे ‸ थ्व दिन कुन्हु श्रीहेर्ण्णवर्ण महाविहारे ॥ श्रीमत् श्रीश्रीक्वाचपाल वज्रासन भट्टारकस्टं ॥ श्रीदोलषापत्तन स्थाने श्रीउजोतदेवस्यं सुवर्ण्णचण्डि घंथ नेग्वड दुन्ता जुरो ॥ अनेन पुण्येन यजमानस्य ॥ जनधन शुष सम्पदा भवतु ॥ अनुत्तर फल प्राप्नुयात् ॥ खड्ग सिद्धिरस्तु ॥शुभ॥

**-धनवज्र समेत :**
**दोलखाको ऐतिहासिक रूपरेखा**
CNAS, त्रि.वि. २०३१
**[अभिलेख संख्या १३ ]**

# परिच्छेद १०
# रत्न मल्लको संसामयिक पश्चिम नेपालमा मगर तथा खस राज्यहरू

रत्न मल्लका पिता यक्ष मल्लको समयमा नेपाल मण्डलको सीमा पश्चिमतर्फ पाल्पासम्म विस्तार भएको कुरा माथि परिच्छेद ७ मा चर्चा गरिसकेको छ। पाल्पामा त्यतिखेर मगर राज्य खडा गर्ने काममा प्रसिद्ध मुकुन्द सेन (प्रथम) का पुर्खाहरू लागिपरेका थिए। यी मुकुन्द सेनका परवाजे खामसेन अथवा वाजे चन्द्रसेनसंग यक्ष मल्लको सुलह भएर नेपाल मण्डलको पश्चिमी सीमा पाल्पासंग जोडिन पुगेको थियो।

नेपालमा 'कुकु' भोटेहरूले उत्पात मचाउँदै रहेको वखत तिनलाई धपाउन रत्न मल्लले पाल्पासंग सैनिक सहायता लिएको कुरा पनि माथि परिच्छेद-७ मै परेको छ। यो सेना लिएर संभवतः मुकुन्द सेन (प्रथम) रत्न मल्लको सहायतार्थ काठमाडौं उपत्यकामा उत्रेको हुनुपर्छ। यसबाट नेपालको शक्ति परीक्षा गर्ने अवसर सेनहरूले पाए। नेपाल मण्डलको अधिराज रत्न मल्लसित भएको मित्रता कायम गरी मुकुन्द सेन (प्रथम) ले पहाडी भेकमा सेन राज्यको विस्तार गर्न सकिने देखेर पाल्पादेखि महाभारत पर्वतको सिलसिला हुँदै पूर्वमा टिस्टा नदीसम्म यिनी पुगेका थिए। यसरी विजय गर्दै जाँदा पछाडि फर्केर हेर्ने काम भने यिनले गरेनन्। फल स्वरूप विजित प्रदेशलाई दिगो राख्ने कुरामा यिनी सफल हुन सकेनन्।

यसरी, यक्ष मल्लको समयमा नेपालको पश्चिमभेक गण्डकी प्रदेशमा सेन राज्य खडा भएर, यता रत्न मल्लको पालामा आएर सेनहरू पूर्व कोशी प्रदेशसम्म ढाक्ने प्रयास गर्दै रहेको देखिन्छ। नेपाल मण्डलमा रत्न मल्लको दवदवा भइरहेको समयमा पाल्पामा रूद्रसेनको शासन चलिरहेको थियो। यक्ष मल्लको समकालिक पाल्पाली राजा चन्द्रसेनका छोरा रूद्रसेन हुन्। पाल्पामा रूद्रसेनको आसन्न राज्यकाल ऐ.शि. बाबुराम आचार्यले सं. १५४०-७५ निर्धारण गरेका छन्। रूद्रसेनले सं. १५७१ मा गरिदिएको एउटा लिखतपत्र उहाँले प्रकाशित गर्नु भएको छ।[1] सं. १५७७ मा (ने.सं. ६४०) काठमाडौंमा रत्न मल्लको मृत्यु भयो। यस आधारमा विचार गर्दा रत्न मल्लको लामो शासनकालभरि नै जसो पाल्पामा रूद्रसेनको शासन देखिएको छ।

नुवाकोटी वैश्य ठकुरीहरूको अर्थ-राजनैतिक शोषणबाट मुक्ति पाउन रत्न मल्लले तिनीहरूलाई उन्मूलन गर्दा निहित स्वार्थमा असर परेका 'कुकु' भोटेहरूको हमला नेपालमा भएको चर्चा पनि माथि गरियो। तिनै 'कुकु'हरूलाई दमन गर्न रत्नमल्लले छिमेकी राज्य पाल्पाको सहायता माग्दा यिनै रूद्रसेनसंग अनुरोध गरेको कुरा पुष्टि हुन्छ। रूद्रसेनको छोरा मुकुन्द सेन (प्रथम) विशेष महत्त्वाकांक्षी भएकाले नेपाल-मण्डलको चाल चलन र वैभवको पारख गर्ने समेत मुराद राखेर रूद्रसेनले आफ्ना छोरा मुकुन्द सेनका (प्रथम) साथ पाल्पाली खस सेना रत्न मल्लको सहायतार्थ पठाएका कुरा वढी विश्वासिलो हुन्छ।

---

१. परिशिष्ट खण्ड : अभिलेख संख्या- १

उपर्युक्त घटनामा पूर्वापर विचार गर्न यहाँनिर रत्न मल्लको मृत्यु पछि पाल्पाली राजा मुकुन्द सेन (प्रथम) स्वयं उपस्थित भएर सेनहरूले मगर फौज ल्याई नेपालको राजधानी केन्द्रमा हमला गरेको ऐतिहासिक घटनालाई अघिसार्न सकिन्छ। यो हमला ने.सं. ६४४-६४६ (सं. १५८०-१५८२) सम्म लगातार तीन वर्षको लामो अवधि बिताएर भएको ऐतिहासिक लिखत प्रमाण भेटिएकोले यसको पृष्ठभूमि रत्न मल्लकै पालामा तैयार भएको मान्न सकिन्छ।[२] त्यतिखेर, नेपालको सरहदमा लूटपाट गर्न आएका भोटेहरूलाई रत्न मल्लको नेपाली सेनाले धपाउन वा परास्त गर्न नसकेको देखेर पाल्पाली सेनहरूको साहस बढेको हुनु पर्छ।

तर, त्यस वखत रत्न मल्ल ललितपुरलाई आफ्नो अधीनमा राख्ने अभियानमा व्यस्त हुनुपर्दा नुवाकोट भेकवाट आएका त्यस भोटे हमलावारहरूलाई दमन गर्न पश्चिमको छिमेकबाट पाल्पाली राजा रूद्रसेनसँग सहायता मागेको कुरामा अन्यथा सोच्ने खास आधार पनि देखिदैन। साथै, त्यतिखेर रत्न मल्ल र रूद्र सेनका बीच मैत्री सम्बन्ध भएकोमा पनि घटनाक्रमले इन्कार गर्दैन।

## खसराज्यको विखण्डन र डोटी राज्यको विस्तारः

गण्डकी प्रदेशदेखि पश्चिमतर्फ भेरीपार कर्णाली प्रदेशमा विशाल खस राज्य मध्यकालको शुरूताका एकदम उत्कर्षतिर चढ्दो थियो। ती खसहरूले पनि नेपालमण्डलको वैभव देखेर जिभ्रो नकाटेका होइनन्। नेपाल-मण्डलमा स्थिति मल्लको उदय पूर्व खसहरूको हमला त इतिहासप्रसिद्ध नै छ। तर, त्यहाँ अभय मल्ल पछि ने.सं. ५०० को दोस्रो दशक लाग्दा (सं. १४५० तिर) खस राज्य विखण्डनको बाटोमा लागेर हिमानदीको किनारमा रहेको पुरानो राजधानी सिजामा मेदिनी वर्माले, दुल्लुको इलाका संसार वर्माले र तिलानदीको किनार छिनासिम वलिराजले अंठ्याउदा तीन टुक्रामा विभाजित भए।[३] त्यति भएपछि खसहरूको नेपाल-मण्डलमा आँखा लगाउने सामर्थ्य भएन। तिनीहरूको स्थानापन्न गर्न अब डोटी राज्यले साहस गर्न थालेको पाइन्छ।

---

२. महेशराज पन्त-दिनेश राज पन्तः
नेपाल खाल्डोमा पाल्पाली राजा मुकुन्द सेनको हमला
'पूर्णिमा' पूर्णाङ्क ४५ (सं. २०३७)
संशोधन-मण्डल

३. धनवज्र वज्राचार्य : 'कर्णाली प्रदेशको ऐतिहासिक रूपरेखा'
कर्णाली प्रदेश : एक बिटो अध्ययन
सामाजिक अध्ययन समुदाय (सं. २०२८)

डोटेलीहरूले यक्ष मल्लकै समयमा नेपाल-मण्डलसित जोरी खोज्न पश्चिम त्रिशूलीसम्म अधिकार गर्दै नुवाकोटमा पनि धावा गर्न आएको एतिहासिक साक्ष्य भेटिन्छ । ने.सं. ५६१ (सं. १४९८) मा डोटीका राजा रिपुमल्लले आएर नुवाकोट भैरवीको परिसरमा स्थापित नारायण थानमा चढाएको एउटा पानसको अभिलेख पाइएको छ । त्यसको पाठ तल दिइन्छः

*"श्रीयोस्तु सम्वत ५६१ भाद्रपद मासे शुक्ल पक्षे सप्तम्यां तिथौ अनुराढ नक्षत्रे बुधवासरे दीपिका कृत दिवसे ॥ स्वस्ति॥ श्रीउत्तरगिरि कविलास नवकोष्ट पत्तनेषु श्रीश्री गण्डकी देवा॥ भट्टारिक परिसंस्ठान महास्थानेषु तत्र सर्वजन पूजित स्वेष्ट देवता श्रीश्रीनारायणाय ॥ समस्त विद्वत्जन मनोरञ्जनैक पटुतरेण श्रीमत्सोम वंशार्णव जटिल कायमान गरूडनारायण श्रीरिपु मल्ल देवेन । सद्भक्त्या दीपिका निर्घातयामि ॥ प्रदत्ता पुण्य भावेन कुशलानि हि मे सदा राजलक्ष्मी ष्ठिराश्चैव प्रताप सिद्धि सर्वदा ॥ सुखिन : सन्तु ते पुत्रपौत्रादि संयुता ॥ श्रीवंतु विहाराधिवासिन जयतराज देवराज तदुभयशिल्पिकृतं शुभं ॥*

**- धनवज्र वज्राचार्य-टेकबहादुर श्रेष्ठः**

**'नुवाकोटको एतिहासिक रूपरेखा'**

CNAS, **त्रिवि.** (२०३२)

[ने.सं. ५६१ भाद्र शुक्ल सप्तमी अनुराधान क्षत्र वुधवारको दिन यो पानस चढाइयो ।

उत्तर पहाड कविलास नुवाकोट शहरमा श्रीश्रीगण्डकीदेवी भैरवीको निवास हुँदा उत्तम कहलिएको स्थानमा रहेका सबै जनताले पूजिएका आफ्ना इष्ट देवता नारायणलाई विद्वानहरूको मन वहलाउन निपुण चन्द्र वंशीहरूका टीका जस्ता, गरुड नारायण श्रीरिपु मल्ल देवले भक्तिकासाथ यो पानस अर्पण गरे ।

यस पुण्यका प्रभावले मेरो कुशल हवस्, राज्यलक्ष्मी संधै स्थिर रहोस्, प्रताप सिद्धि हवस्, छोरा नातिहरू सुखी होऊन् ।

श्रीवंतु विहार निवासी जयतराज र देवराज दुइ जना शिल्पकारले यो पानस वनाइदिएका हुन् ।]

डोटेली राजा रिपु मल्लले नेपाल संवत् प्रयोग गरी नेपालकै शिल्पीहरूद्वारा निर्मित एउटा दीपिका अर्थात् पानस चढाइएको यो अभिलेखमा नेपाल मण्डलको नै परंपरा झल्किन्छ । डोटेली छनक कतै पाइँदैन । यो कुरा यहाँ विचारणीय हुन्छ ।

यस प्रकारले डोटेलीहरू अगाडि बढ्दै आएको देखेर यक्ष मल्लले आफ्नो पश्चिम अभियानको थालनी गरेका थिए । त्यतिखेर जुमलाको खस राज्य विखण्डनको प्रक्रियामा लागि सकेकोले खसहरूकै प्रभावशाली राज्यको परिकल्पना गरेर डोटी राज्य अघि बढ्न खोजेको यो सवूद हो । त्यसैको प्रतिकार गरेर यक्ष मल्लले नुवाकोटबाट पश्चिम गोरखा हुँदै पाल्पासम्म पुगी गण्डकी साँध गरी फर्केको प्रतीत हुन्छ ।

यसरी पश्चिम काली गण्डकीसम्मको भूभागमा रत्न मल्लको नेपाल-मण्डल विस्तार थियो गण्डकी प्रवेशमा सेन राज्यको स्थापनाले गर्दा नेपालको राजधानी केन्द्रमा देखापर्दै आएको आसन्न कमजोरीबाट फाइदा उठाउने तत्वहरू आफ्ना तैयारीकासाथ पर्खिरहेका थिए । त्यतिखेर, लमजुङ गोरखा आदि राज्यहरू खडा भएका थिएनन् ।

सुदूर पश्चिमतर्फ विशाल खस साम्राज्य अरू टुक्रा भएर धमाधम वाइसी राज्यहरूका रूपमा उम्रदै थिए । तै पनि, जुमला राज्य छिनासिममा राजधानी कायम गरेर पुरानो खसानी संस्कारलाई हुर्काउदै रहे । तर, प्रभावशाली राजा भने कोही निस्कन सकेका थिएनन् । जुनवेला रत्न मल्ल नेपाल मण्डलको नेतृत्व सम्हाल्ने सिलसिलामा आफ्नो कठोर संघर्ष गर्दै थिए त्यतिबेला जुमलामा सिजा र छिनासिम दुवैतिर मुकाम गरी कल्याल राजा विवोख शाही र त्यसपछि उनका छोरा मनिराज शाही (अ.सं. १५५५-१५७५) को राज्यकाल गुज्रिरहेका पाइन्छन् । ने.सं. ६१९-२० (सं. १५५५) ताका विवोख शाहीले गरिदिएका एउटा ताम्रपत्र यहाँ विचारार्थ प्रस्तुत गरिएको छ ।[४]

परिशिष्ट खण्ड

अभिलेख १

# पाल्पाका राजा रुद्रसेनको दानपत्र

## सं. १५७१

स्वस्तिश्रीरुपनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत श्रीमहाराजाधिराज श्रीमत् रुद्रसेन देवानां सदा समर विजयिनाम्

नरनारायण दास उपाध्या तथा ... उपाध्याइनके सरदेवा हूलहाल हीफ वरेसे सम संकल्प वढै दिइल्यु हालहिप खिजाउवा मोहीआना हालही ताही संकल्प मुदु गदि लेन्हि दिलहि दिल अत्र साक्षी थापा वुद्धजुर थापा पालसिंध्या साक्षी मीराना राविल वनाकर उपाध्या यसधर कुँअर रामसिंघ थापा विष्णुसिंह विसराम खत्रि अमृत खड्ग दारावान गनिदेव थापा विकवसंत जोइसी मैचन्द्र कुंवर अनुक्षण जन साखि संवत् १५७१ वैसाष सुदी इति

***

**-बाबुराम आचार्यः**

**'तनहूँको सेनवंश' भानुभक्त स्मारक ग्रन्थ :**

**नेपाली साहित्य सम्मेलन, दार्जिलिङ** (सं. १९९७)

---

४. परिशिष्ट खण्डः अभिलेख संख्या २

अभिलेख २

# जुमली राजा विवोष शाहीको ताम्रपत्र
# शक सं. १४२०

ॐ स्वस्ति ॥ स्वस्ति कस्तुरिका मोद प्रमोदित जगत्त्रये । सेंजाभिधा नगरे विष्यात भुवन त्रये, तत्र । समस्त क्षोणीरक्षा क्षम दक्षिण निज भुज दंडाग्र जाग्रत्कर कमल कलित करवालधारा ध्वस्तविपक्ष पक्ष लक्षित भोग मुख रसिका प्रआत्त विग्राषर्वित सुर चुडाविधुतोग्गोथ वुटषाल्लसरम शतस्तुति संतोषित स सत्य विद्वजनता उत्तर धरित्रिधर वप्र विक्षण श्रीघनाराधन प्राप्त सतत जणद्ध जयराज प्रताप मार्तण्ड ताज सइगजसिंह रिपुराज प्रभावांधकार जगज्ज्योतिशाहृण कल्याल समुद्र सौर्योदायां गांभिर्यचातुरि (प्रभृति) गुण मणि समुद्र महाराजाधिराज कार्वरिक काशीश्वरोस्तर श्रीगत राज राम रवातरत्तल्लगर्व राज सर्वत्त्र हरत प्रविण व्रतति यथार्थ विरुद् विराजमान विवोष साइ पादानां सपुत्र परिवारं समाशास्ति-

श्रीशाके १४२० मासे ८ मार्गसिर मासे वारे ५ नक्षत्रे ८ तिथौ १५ छिनासिम॰रजस्थाने विवोषसाइ सकुमारा मया यसि यक्षराज गुरठगुर आला ३ मोप्लाका विशेष राजकिथप शुदा चौघान चौर शुदा वगरका निवापालेकका सिलाका सुवाडा मया भै सिजा पंचाशत्तारिका ५० षेत राषरेषा मया भैछ । कवा वरुण सत्री षानु मया भैछ, ज्युकवाको आलो १ चतुको टालो चुडको षानु, कवालाको आलो १ कोटिलाको टालो रोकायाको षानु ज्युकवाको आलो भागन्तोलिको टालो महाताराको षानु वरुन्याषर्क उवो चोरमाटा उदो सामा (पा)षा जवो गर्गिपऱ्हो मया भै ज्यु विवोष साइको धर्म.....

भूमंडलका साक्षि हितसाइराज चामराज विशुद्धराज वंशराज प्युउसराज विष्ट जैतु डागि रामसींह वुडो जैसिंह वुडो परिज कार्ज्य राम रोकाया जगधर जोइसि वलि थापो रामसिंह छत्याल सिमषाडा गरढो जोइसि शुमुदु महत्र लिषित साचि धोकर्म टः ॥ ॥

टः = टमटा = तमोट

***

**स्रोतः छिनासिमकोट, जुमला**
**- योगी नरहरिनाथः**
**- इतिहास प्रकाश : भाग-१ (सं. २०१३)**

# परिच्छेद ११

# रत्न मल्लको संसामयिक भारत र तिब्बत

जुनवेला नेपाल-मण्डलमा रत्न मल्लको दवादवा बढिरहेको थियो त्यतिखेर भारतमा मुगल साम्राज्यको स्थापना भएको थिएन । तर, यसका संस्थापक बाबरले भारती उपमहाद्वीपमा हमला गर्ने आफ्नो पूर्व तैयारी भने गर्दै थिए ।

बाबर मध्य-एशियामा एउटा सानो राज्य 'फरगना' का राजा थिए । उनका काका अहमद मिर्जा मध्य एशियाकै अर्को ठूलो राज्य 'समरकन्द' मा राज्य गर्थे । बाबरलाई सानो देखेर अहमद मिर्जाले बाबरको राज्य फरगनामा हमला गरे । तर, मिर्जाको मृत्यु अकस्मात् त्यहीं भयो । अब, उल्टो भाग्यले बाबरको साथ दिएर काकाको राज्य समरकन्द नै बाबरको हातमा पऱ्यो । परन्तु, दुर्भाग्यवश समरकन्दमा बाबर ठूलो विरामी परे । उनका काजीहरूले बाबर मरेको प्रचार गरिदिए । फरगनामा उनका भाइ जहागीरलाई राजा घोषित पनि गरिदिए । यता समरकन्दमा रहेका बाबर बिस्तारै विरामीबाट उत्रेर आफ्नो फरगना राज्य फर्काउन समरकन्दवाट हिडे । तर, फरगना उसले फर्काउन सकेन । उता समरकन्दमा पनि उनका भतिजा अलीले कब्जा गरिहाले । यसरी दुबै राज्यबाट बाबरले हात धुनुपऱ्यो । ऊ कहिंको पनि राजा रहेन । उनी अब फिरन्ते जीवन विताउन लागे ।

केही समयपश्चात् फौज जम्मा गरी पैतृक राज्य फरगना फिर्ता लिन बाबर सफल भए । अनि, नेसं. ६२० (ई. १५००) मा उनले समरकन्द पनि दोस्रोबाजि हात लगाए । तर, उजवेगहरूले समरकन्दमा उनलाई टिक्न दिएनन् । त्यतिभएपछि पैतृक राज्य फरगना पनि उनले धान्न सकेनन् । तव, बाबर निराश भएर आफ्नो जन्मभूमि नै छाडेर अन्यत्रै आफ्नो भाग्यको अजमाइस गर्न हिडे । उनी कावुलमा आएर त्यहाँको राजनैतिक गडबडीबाट पूरा फाइदा उठाई ने.सं. ६२४ (ई. १५०४) मा त्यहींको राजा बने ।[१] यसरी कावूलमा जमेर त्यसबेलादेखि फेरि राजाकै हैसियतले बाबरले भारतमा हमला गर्न तैयारी गर्दै अवसर पर्खिरहे । अनि, ने.सं. ६४६ (ई. १५२६) मा बाबरले दिल्ली नजिक पानीपतको युद्ध फत्ते गरी भारतमा आफ्नो नयाँ साम्राज्य खडा गर्न सफल हुँदा नेपाल-मण्डलमा रत्न मल्ल परलोक भइसकेका थिए ।

यता, दिल्लीमा भने रत्न मल्लको समयताका लोदी वंशले शासन गर्दै थिए । ने.सं. ६४० मा रत्न मल्लको मृत्यु हुँदा भारतमा दिल्लीको तखतमा ईब्राहिम लोदी थिए । तिनै इब्राहिमलोदीलाई पानीपतको युद्धमा परास्त गरी बाबरले दिल्लीमा अधिकार गरेका थिए । यसै बेलादेखि भारतमा मुगल साम्राज्यको जग खडा भयो ।

---

१. V.D. Mahajan: Mughal Rule in India, 11th edition (1976), S. Chand & Company Ltd. Ram Nagar, New Delhi.

हुन त यसअघि पनि दिल्लीमा मुसलमानी शासन रहँदा त्यसको राजनैतिक असर नेपालमा पनि आएको थियो । दिल्लीका सुलतान गयासुद्दीन तुगलकले मिथिला राज्यको राजधानी सिमरौन गढ ध्वस्त पारे पछि त्यसको परिणामले नेपालको इतिहासमा प्रभाव नपारी छाडेन । नेपाल मण्डलको राजवंश नै यसले वदलिदियो । त्यस्तै, वंगालबाट समशुद्दीनको आक्रमण पनि यहाँनिर स्मरणीय हुन्छ । तर, यस्ता एकलादुकला घटनाहरूले नेपालको शासन पद्धति र परंपरामा भने खास केही असर परेको थिएन । भारतमा मुगल साम्राज्यको जग बसेर त्यसको क्रमिक विस्तार हुँदा भने स्थिति अर्कै भएर आएको पाइन्छ, यद्यपि नेपालमा मुगल हमला भने हुँदै भएन । भारती उपमहाद्वीपमा मुगल शासनको असर नेपालमा कुन कुन क्षेत्रमा कसरी पर्दै आएका थिए त्यसवारेमा वेग्लै-अध्ययन गर्नुपर्ने छ । त्यसैको निमित्त यहाँ संकेतसम्म गरिएको हो । खास गरी भारतमा मुगल शासनले गर्दा नेपालको मध्यस्थ व्यापारस्थितिमा विलकूल सकारात्मक प्रभाव रहयो भने यही मुगल शासन पतनोन्मुख हुँदा त्यसले नेपालकै राजनैतिक एकीकरणको ढोका पनि खोलिदियो ।

नेपालमा मुसलमानहरूको प्रवेश रत्न मल्लकै समयमा भएको एकथरि परंपराद्वारा ज्ञात हुन्छ । यस सम्बन्धमा तात्कालिक खास विवरण भने अहिलेसम्म उपलब्ध छैन । तथापि, भाषा वंशावलीकारले यो कुरा लेखेको हुँदा विचारणीय भने छदैछ । तर, यसरी मुसलमानहरूको उपस्थितिका पछाडि पनि तिब्वतसितको व्यापार नै देखापर्छ । कुनै राजनैतिक कारण कतै देखिंदेन । अतः यो विषय तल कतै व्यापारको प्रसंगमा चर्चा गर्नु उपयुक्त हुनेछ ।

## रत्न मल्लको समयमा छिमेकी तिब्बतको स्थिति

नेपालमा रत्न मल्लको शासन चलिरहेका वखत दक्षिणतर्फ भारतको मैदानमा हुन लागेको राजनैतिक परिवर्तनको झलक देखिसकेपछि उत्तरतर्फ तिब्बतको राज्यमा धार्मिक-राजनैतिक स्थिति के कस्तो गरी देखापर्दै थियो त्यसको पनि एउटा झाँकी प्रस्तुत गर्नु उपयुक्त हुनेछ । भोटसित नेपालको व्यापारस्थितिमा रत्न मल्लले ल्याएको परिवर्तनले गर्दा केही तिब्बतीहरू असन्तुष्ट रहेको छनक पनि 'कुकु' भोटेहरूले नेपालको सीमा क्षेत्रभित्र पसेर गरेका उपद्रो वारेमा माथि परिच्छेद ७ मा चर्चा भइसकेको छ ।

हुन त त्यतिखेर नेपाल-तिब्वत सम्बन्धलाई प्रष्ट गर्ने ऐतिहासिक लिखतहरूको अभाव त छदैछ । तर, यतिकुरा निश्चित छ रत्न मल्लको समयमा नेपालको वाटो गरी हुने गरेको तिव्वतको व्यापारमा कतै व्यवधान आएको थिएन । परन्तु, तिब्बतभित्र धार्मिक-राजनैतिक स्थिति परिवर्तनको संघारबाट गुज्रँदै गइराखेको दृश्य भने टडकारो देखापर्छ । त्यतिखेर तिब्बतको धार्मिक क्षेत्रमा जोङ्खा-पाको युग प्रारम्भ भइसकेको थियो । त्यतिबेला प्रचलित बौद्धभिक्षु लामाहरूको जीवन शैलीमा विकृति आएकाले त्यसमा सुधारको निमित्त लामा जोङ्खा-पाले (ने.सं. ४७७-५३९ अर्थात् ई. १३५७-१४१९) पहल गरेका थिए । उनी शुरूमा तिब्बती बौद्ध धर्मको का-दान संप्रदायमा दीक्षित भएका थिए तापनि पछिबाट उनले अन्य संप्रदायका राम्रा

कुराहरू समेत लिएर नयाँ 'गे-लुग' संप्रदायको सिर्जना गरे । उनले ने.सं. ५२९ (ई. १४०९) मा ल्हासाको जो-खाङ मठमा आफ्नो संप्रदायको पहिलो प्रार्थना सभा विशाल रूपमा सम्पन्न गरेर सोही वर्ष उनले 'गा-दान' गुम्बाको पनि निर्माण गरे । यही नै गे-लुग् संप्रदायको पहिलो गुम्बा थियो । त्यसपछि जोङखा-पाको आखिरी समयमा (ने.सं. ५३६ अर्थात् ई. १४१६) उनका शिष्य टा-शि-पाल-देनले पश्चिमी ल्हासामा 'ऱ्ह-पुङ' गुम्बाको निर्माण भव्य रूपमा गरेर देखाए । जोङखा-पाको मृत्यु भएपछि उनका शिष्यहरूले गुरुको परंपरालाई अगाडि बढाएको कारणले उनका एकजना शिष्य शा-क्या-ये-शे लाई चीनको मिङ वादशाहले ने.सं. ५५४ (ई. १४३४) मा 'महान् धर्मराजकुमार' को उपाधि दिए । उनैले उत्तरी ल्हासामा 'सेऱ्ह' गुम्बाको निर्माण गरे । जोङखा-पाकै अर्को शिष्य गे-दुन-राव्ले ने.सं. ५६७ (ई. १४४७) मा सि-गात्सेमा प्रसिद्ध टा-शि-ल्हुनपो गुम्बाको निर्माण गरे । यिनै चार ओटा गुम्बाहरूले गर्दा तिब्बतमा 'गे-लुग' संप्रदायको ज्यादै प्रचार भएर ने.सं. ६१८-६३७ (ई १४९८-१५१७) सम्ममा राजधानी ल्हासा लगायत तिब्बतको अत्यधिक भागमा प्रभावित गऱ्यो । जोङखा-पा नै खूद दीक्षित भएको पुरानो संप्रदाय 'का-दान' का सारा गुम्बाहरू पनि यसै नयाँ 'गे-लुग' संप्रदायमा विलीन भएर वहुमत स्थापित भयो । अनि, लगत्तै अरू संप्रदायहरूमा खास गरी 'का-ग्यु-पा' का अनुयायीहरूले ईर्ष्यावश ल्हासामा 'गे-लुग्' को वार्षिक प्रार्थना सभा विथोलिदिए । त्यसपछि त तिनीहरूले सशस्त्र सेना पठाई गे-लुग् संप्रदायका गुम्बा र सभाहरूमा सगेत हमला गर्न थाले । यस्तै धार्मिक संप्रदायहरूका बीच सशस्त्र संघर्ष तिब्बतमा चलिरहेका वखत ने.सं. ६४० मा (ई. १५२०) नेपालका हर्ताकर्ता रत्न मल्लको देहान्त भयो ।

तर, 'गे-लुग' संप्रदायले विस्तारै तिब्बतमा आर्थिक दृष्टिले जरो गाड्दै गइराखेका थिए । यसको मूल कारण, तिब्बतभरमा दासहरूका धनी (Serf-owners) सामन्त वर्गको समर्थन यसै संप्रदायपट्टि जुटाइसकेका थिए । अतः यस संप्रदायको शक्ति बढ्दै गयो तिव्बतमा । अन्तमा ने.सं. ६६६ (ई. १५४६) मा 'ऱ्ह-पुङ' गुम्बाका पदाधिकारी लामाहरूले सो-नाम्-ग्या-त्सो भन्ने तीन वर्षको वालकलाई 'गे-लुग' संप्रदायको अवतारी लामा स्वीकार गरे । वास्तवमा यसैबाट तिब्बतमा अवतारी 'दलाई लामा' शासनको शुरुआत मानिएको छ ।[२]

२. Highlights of Tibetan History: Wang Furen & Suo Wenquing New World Press, Beijing 1984

परिच्छेद- १२

# रत्न मल्लको आखिरी समय तथा राष्ट्रिय-अन्तरराष्ट्रिय परिदृश्यको एक झलक

रत्न मल्ल नेपाल-मण्डलमा लामोलामो समयसम्म शासन गर्ने शासकहरूमध्ये पर्दछ। ने.सं. ६०२ (सं. १५३८) मा यक्ष मल्लको मृत्यु भएदेखि यता नेपाल-मण्डलको अत्यन्त प्रभावशाली शासक भएर ठूलो संघर्षमा नै उनको लामो आयु व्यतित भयो। ने.सं. ६४० (सं. १५७७) भाद्र शुक्ल द्वादशी शनिवारको दिन कान्तिपुरमा रत्न मल्लको मृत्यु भयो। मृत्यु हुँदा उनको उमेर के कति थियो त्यो खुल्न सकेको छैन। यस बारेमा अहिलेलाई एउटा अनुमानसम्म गर्ने आधार पाइन्छ।

ने.सं. ५७३ (सं. १५०९) मार्ग महिनामा यक्ष मल्लको जेठा छोरा राय मल्ल २ वर्ष ९ महिनाको उमेरमा सिकस्त विरामी परेका थिए। त्यस वखत उनको निमित्त तुला पुरुष दान गरिएको थियो।[1] यस हिसाबले राय मल्लको जन्म समय ने.सं. ५७० फागुनतिर पर्न आउँछ। त्यहीँबाट रत्न मल्लको जन्म समय पनि अनुमान गर्न सकिन्छ। यसको एक वर्ष जति पछि नै रत्न मल्लको जन्म भएको मानेका खण्डमा मृत्यु हुँदा उनको उमेर लगभग ७० वर्ष जतिको अनुमान हुन्छ।

यक्ष मल्लकै पालाको ने.सं. ५७२ (सं. १५०८) चैत्र महिनाको ललितपुर, लुभुको अभिलेखमा सर्वप्रथम जेठा राय मल्लको अतिरिक्त माहिला रत्न मल्ल र कान्छा रण मल्लको उल्लेख पनि गरिएको छ।[2] यताबाट पनि रत्न मल्लको जन्म ने.सं. ५७१ (सं. १५०७) तिर भएको अनुमान गर्न सकिन्छ।

रत्न मल्लको लगभग ३८ वर्षसम्मको सुदीर्घ शासनकाल नेपाल मण्डलको इतिहासमा निकै रोमाञ्चकारी रहेको छ। त्यतिमात्र होइन, उनको मृत्युले नेपाल मण्डलमा स्थिति मल्लको उदयकासाथ जुन महिमाभण्डित जाग्रत युगको सिर्जना गरेको थियो, त्यसको पनि अन्त्य भयो। त्यस कारण, रत्न मल्लको मृत्यु पनि नेपालको इतिहासमा साँच्चिकै युगान्तकारी घटना सावित भएको छ।

---

१. परिशिष्ट खण्ड : अभिलेख संख्या- १

२. परिशिष्ट खण्ड : अभिलेख संख्या- २

रत्न मल्लको मृत्यु सम्बन्धी घटना उसै वखत सारिएको 'अमरकोष' को एउटा हस्तलिखित पुस्तकमा यसरी टिपिएको छः

*"अब्दे नेपाल वृत्ते गगन युग रसे मासे भाद्रे च शुक्ले,*
*द्वादश्याञ्चातिगण्डे श्रवण सहगते वासरे सूर्य पुत्रे ।*
*त्यक्त्वा सप्ताङ्ग लक्ष्मीं विपुलधन महाक्रन्दितानेक लोकै,*
*हा स्वामी रत्न मल्लो दश युवतिसहा रुद्रलोके च यग्मु॥"*

**स्रोतः**
**अमर कोष, ग्रन्थ संख्या ३४९०**
**नेपाल राष्ट्रिय पुस्तकालय**
**इतिहास संशोधनको प्रमाण-प्रमेय पृष्ठ १४०**
**संशोधन मण्डल (सं. २०१९)**

[ने.सं. ६४० (सं. १५७७) भाद्र शुक्ल द्वादशी अतिगण्ड योग श्रवण नक्षत्रमा शनिवारको दिन अपार धन तथा सप्ताङ्ग राज्यलक्ष्मी त्यागेर अनेकौं लोकजनलाई ठूलो शोकमा चुर्लुम्म डुवाएर राजा रत्न मल्ल रुद्रलोकमा गए । दशजना युवतीहरू सती गईन् ।

रत्न मल्लको वडा महारानी मालतीदेवी हुन् । उनी यतिखेर जीवित रहेको आभास पाइँदैन । राजाकासाथ सहगामिनी हुनेमा दशजना युवतीहरू भए भनेर यहाँ पद्यमय जुन वर्णन गरिएको छ त्यसबाट सतीजाने स्वास्निमानिसहरूमा 'मालतीदेवी' परेको देखिँदैन ।

## राजनैतिक दूरदर्शिता

रत्न मल्लको ठूलो राजनैतिक दूरदर्शिता के थियो भने उनले काठमाडौंलाई पुनः राजधानीको रूपमा स्थापित गरे । इतिहासमा लिच्छवि कालपछि गुमिएको यो प्रतिष्ठा 'काष्ठ मण्डप' महानगरले पुनः प्राप्त गर्नु त्यतिखेरको एउटा अत्यन्त सुझबुझको राजनैतिक घटना मान्नु पर्नेछ । रत्न मल्लले राजधानी बनाएपछि कान्तिपुरलाई एउटा सुदृढ गढको रूपमा परिणत गरिदिए । तिब्बत र भारतका बीच हुने आकर्षक व्यापारको मार्गमा परेको यस महानगरलाई नेपाल मण्डलको राजधानीको रूपमा विकसित गर्नुको पछाडि स्पष्टतः आर्थिक कारण निहित थियो । यसले गर्दा काठमाडौं उपत्यकाकै श्रीवृद्धि गर्न ठूलो टेवा मिल्यो ।

रत्न मल्लको अर्को महत्त्वपूर्ण राजनैतिक सुझबुझ थियो व्यापारलाई राजनीतिसित मिसिन नदिनु । व्यापार नायक भएर बसेका महापात्रहरूले सामन्त शासकको अधिकार पाउँदा उहिल्यैदेखि व्यापार र राजनीति एकै ठाउँमा मिसिएर आर्थिक शोषणको द्वार खुल्ला रह्यो । त्यसलाई एक तर्फी गराउन महापात्रहरूको राजनैतिक अधिकार खोस्ने काम रत्न मल्लले गरे । यस कार्यमा

उनले खेलेको भूमिका बडो राजनीतिक चतुरतापूर्ण थियो । कान्तिपुरका महापात्रहरूलाई समाप्त गर्न उनले ललितपुरका महापात्रहरूलाई पहिले हात लिए । त्यसपछि उनले अर्को व्यापार केन्द्र नुवाकोटमा रहेका महापात्रहरूलाई पनि समाप्त गरिदिए । यसबाट ललितपुरका महापात्रहरू उनीदेखि सशंकित भए । रत्न मल्लको नीतिमा तगारो हाल्ने काममा ललितपुरका महापात्रहरू लागे । यो देखेर रत्न मल्ले उनीहरूलाई अर्कै रूपमा प्रयोग गरी आफ्नो राजनैतिक आकांक्षा पूरा गरे । उनीहरूलाई भक्तपुरको आश्रयबाट छुटाएर आफ्नै अधीनता ग्रहण गर्न वाध्य तुल्याए । कान्तिपुर र नुवाकोटमा जस्तै ललितपुरका महापात्रहरूलाई राजनीतिबाट अलग राख्न उनले सकेनन् । तथापि, उनीहरूलाई भक्तपुर 'त्रिपुर दरवार' को बदला आफैंप्रति उत्तरदायी बनाएर राख्न भने रत्न मल्ल सफल रहेको मान्नु पर्दछ । यसको निम्ति 'त्रि-पुर राजकुल' कै नेतृत्व आफूले गरेको सिद्ध गरिदिए । तर, यस काममा 'दोलखा' का महापात्रहरूलाई भने उनले कज्याउन सकेनन् । उनीहरू केन्द्रीय सत्ताबाट स्वतन्त्र भएर रहन थाले । यसको पछाडि रत्न मल्लले आफ्नै भाइहरूसित राजनैतिक संघर्षमा धेरै वर्ष विताउनु परेको कुराले नै खास भूमिका निर्वाह गरेको पाइन्छ ।

रत्न मल्ललाई नेपालमण्डलमा राजनैतिक परंपरा जस्तै भएर टाँसिएको 'संयुक्त शासन' पद्धतिमा विश्वास थिएन । दाज्यूभाइहरूका बीच मात्र होइन, काका-भतिजा, बाजे-नाति तथा मामा-भानिज समेतको उभय, त्रिभय, चौभय शासनले गर्दा मध्यकालिक नेपालमा शक्ति संघर्षको थलो मात्र जताततै देखापर्दै आएका थिए । यस प्रवृत्तिलाई हटाउन रत्न मल्लले जीवनभर संघर्ष गर्दै रहे । यसप्रकार संयुक्त शासन पद्धतिलाई क्रमशः पन्छाउन कान्तिपुर र ललितपुरमा उनी सफल रहेता पनि पुरानो राजनीतिको गढ भक्तपुरमा भने उनी सफल हुन सकेनन् । यसो हुँदा नै रत्न मल्लपछि नेपाल-मण्डल टुक्रिन वाध्य भएको हो ।

## जनसंख्याको संरचनाले राजनैतिक भूमिका राख्ने

अर्कोतिर, राजनीतिमा जनसंख्याको वनोटले वा चरित्रले महत्त्वपूर्ण स्थान पाउने तथ्य पनि कसैले लुकाउन सक्तैन । तिब्बतसितको व्यापार मार्ग भएर लुटपाट गर्न आउने केरूङ-भोटको सीमावर्ती 'कुकु' भोटेहरूलाई तत्काल तह लगाउन र तिनीहरूद्वारा भविष्यमा हुने संभावित उपद्रो समेत रोकथाम गर्न रत्न मल्लले नजिकको छिमेकी पाल्पा सेनराज्यबाट खस सैनिक सहायता स्वरूप लिएका थिए । तिनै सैनिकहरूलाई रत्न मल्लले नेपाल मण्डलको राष्ट्रिय सुरक्षाको दृष्टिले आफ्नै राज्य अन्तरगत पहाडी प्रदेशमा ठाउँठाउँमा स्थायी रूपमा राख्ने नीति लिंदा खसहरूको 'पूर्वविस्तार' को आर्थिक-प्रक्रियामा नै ठूलो टेवा हुन गयो । यसैबाट ती प्रदेशहरूमा पछि 'स्वतन्त्र' राज्यहरूको गठन हुन समेत निकै सघाउ पुगेको थियो । अर्को शब्दमा भनौं भने, नेपाल-मण्डल टुक्रिनमा एउटा ठूलै कारकको भूमिका यसले निर्वाह गऱ्यो ।

नेपालको इतिहासमा मध्यकालको थालनीदेखि नै नेपाल-मण्डल विखण्डन गर्न उद्यत रहेका खसहरूले पश्चिमबाट र कर्णाटहरूले दक्षिणबाट नेपालको भू-भागमा धावा वोल्ने काम थालेर

जुन त्रासदी अथवा आतङ्क फैलिएको थियो त्यसबाट नेपाल-मण्डललाई उन्मूक्त राख्न स्थिति मल्लदेखि गर्दै आएको राष्ट्रिय एकताको निरन्तर अभियान जारिराख्ने प्रयास अथवा त्यस युगलाई थाम्न रत्न मल्लले यहाँ अन्तिम संघर्ष गरेका थिए । त्यस युगको पनि अब रत्न मल्लको मृत्युका साथसाथै अन्त्य भयो । नेपाल-मण्डल विखण्डित हुनुबाट वचाउन समर्थ कुनै राजनैतिक व्यक्तित्व पनि आउँदो अढाइ सय वर्षसम्म यहाँ पैदा हुन सकेन ।

नेपालको इतिहास र संस्कृतिलाई अत्यन्त प्रभावित पार्दै आएको भारती उप-महाद्वीप पनि यसैताका ठूलो परिवर्तनको संघारबाट गुज्रिरहेका थिए । भारतमा यवन शासनको अर्को चरण शुरु हुनहुनै लागेको थियो । यो थियो बाबरद्वारा मुगल साम्राज्यको जग वसाल्ने तैयारी । उता उत्तरतिर, छिमेकी तिब्बतमा जोङखा-पाको युग थालनी भएर उनैको संप्रदाय गे-लुगको दवदवा बढ्दै गइराखेको थियो भने यसका प्रतिद्वन्दी अन्य धार्मिक समुदायले यसमाथि खनिएर सशस्त्र संघर्षको वाटोमा गई एक प्रकारको गृहयुद्ध जारी थियो । तथापि, यस संप्रदायले आर्थिक रूपमा जरो गाड्दै गएर तिब्बतमा अवतारी 'दलाई लामा' को शासन पद्धति शुरू हुने तरखर गर्दै थियो । यस प्रकारले अन्तरराष्ट्रिय परिदृश्य पनि फेरिन लागेकै वखत नेपाल-मण्डलका हर्ताकर्ता रत्न मल्लको अस्त भयो ।

## नेपालको मध्यस्थ व्यापार स्थिति

उपर्युक्त ढंगले राष्ट्रिय तथा अन्तरराष्ट्रिय राजनैतिक परिदृश्य नेपाल-मण्डलको हितको प्रतिकूल परिवर्तित हुँदै गइराखेको भए तापनि नेपालको मध्यस्थ व्यापारस्थितिमा भने कुनै प्रतिकूल अवस्था आएन । वरू, पहिलेभन्दा झन्झन् अनुकूल हुँदै गएको पाइन्छ । यसको भविष्य द्रष्टा नेपालमण्डलमा रत्न मल्ल देखापरेको छ ।

तिब्बतसंग हुने नेपाल-मण्डलको व्यापारमा दोहरो भूमिका राख्ने महापात्रहरूको उन्मूलन गरेर रत्न मल्लले नेपालको आर्थिक श्रीवृद्धिको द्वार नै खोलिदिएको मान्नु पर्नेछ । रत्न मल्लको यस नीतिको प्रतिविम्ब नेपालमा आउँदो अढाइ सय वर्षसम्म सांस्कृतिक उत्थान र विकासमा देख्न पाइन्छ । नेपाल मण्डलको संस्कृति विश्व संपदामा दरिन लायक हुने गरी यसै अवधिमा विकसित भएर त्यसको प्रतिफल आधुनिक नेपालले अहिलेसम्म भोग्दै आएका छन् । अझ, भविष्यमा पनि कति भोग्दै रहने हुन् ।

## मौद्रिक सुधार

रत्न मल्ल नेपालमा मौद्रिक सुधारको स्वप्नद्रष्टा राजाको रूपमा पनि चिनिन्छ। यतिञ्जेल नेपाल मण्डलमा अघि शिवदेवले चलाएको 'शिवका' मुद्रा नै प्रचलित थियो। त्यसबाट जनसाधारणको आर्थिक कारोवारमा कठिनाइ परेको देखेर रत्न मल्लले तामाको मुद्रा प्रचलनमा ल्याइदिए। यसको संझना गर्दै भाषा वंशावलीकार लेख्दछन् :

*"राजा रत्न मल्लले प्रजाहरू हातमा लिई तामाखानीबाट तामा मगाई छाप बनाइ अधिका सिंह छाप मनाही गरी पैसाका चलन नेपाल भरमा चलाया।"*

**-भाषा वंशावली, भाग-२**

**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३) पृष्ठ ५२**

भाषा वंशावलीमा दिइएको उपर्युक्त सूचना ऐतिहासिक विश्लेषणको निमित्त पर्याप्त हुँदैन। तर, यहाँ पूर्वमध्यकालदेखि चलेर आएको मुद्रा 'शिवका' चलनचल्तीबाट हटाउने कुराले आर्थिक क्षेत्रमा अति गहनता राख्दछ। फेरि, तामाको मुद्रा चलनमा ल्याएर अर्थतन्त्रको मौद्रिकीकरण जनसाधारणको तहसम्म पुऱ्याउनु पनि यस सुधारको अर्को पक्ष भन्न सकिन्छ। यसको निमित्त तामाखानीको उत्खनन काठमाडौं उपत्यकादेखि वाहिर दक्षिण चितलाङ, भेकमा गरिएको थियो जसको प्राविधिक जिम्मा ललितपुर ओकु वहालका मदनाम शाक्यलाई दिइयो। यिनै मदनामका छोरा अभयराज शाक्यले (रत्न मल्लको नाति अमर मल्लको समकालिक) पाटनको प्रसिद्ध महाबौद्ध मन्दिरको निर्माण कार्य प्रारम्भ गरेका थिए। यहींको संघमा रहेको 'पर्वगूठी थ्यासफू' मा टिपिएका पुराना घटनाक्रममा उक्त तामाखानीको तामाबाट रत्न मल्लका पालादेखि नयाँ टक्सार (मुद्रा) संचालन गरेको चर्चाले स्थान पाएको छ।[३] चितलाङमा त्यतिखेरको टक्सार भनिने स्थान अझै प्रसिद्धिमा रहेको छ। सो टक्सार पछि अभयराज शाक्यले पनि चलाएका थिए।

मध्यकालिक मुद्राहरूमा एकथरि तामाको अं. १x१ से.मी. आकारमा करीव २ ग्राम (१२ लाल बराबर) तौलको सानो चारपाटे मुद्रा पाइन्छ। यसलाई रत्न मल्लको मुद्रा भन्ने वहुश्रुत परंपरा छ। यस मुद्रामा एकापट्टि रत्न चिन्ह (त्रि-रत्नको प्रतीक) र अर्कोपट्टि खड्गको शिरानमा दाँया-बाँया 'श्रीश्री' अंकित छन्। भक्तपुर निवासी श्रीसुरेशज्योति शाक्यसँग रहेको यस मुद्राको चित्र तल प्रस्तुत गरिएको छ :

३. हेमराज शाक्य :
महाबुद्ध मन्दिर- संक्षिप्त इतिहास (सं. २०४५)

रत्न मल्लले ललितपुरमा आफ्नो अधिकार स्थापित गरेपछिको यो घटनाक्रम संभावित हुनाले ने.सं ६१५ पश्चात् यस मुद्रा उद्योगको थालनी भएको मान्न सकिन्छ। तथापि, उनले चलाएको नयाँ मुद्राको परिभाषा के कस्तो थियो त्यसको अनुसन्धान हुन बाँकी नै हुनाले यस बारेमा अधिकारकासाथ वोल्न सकिनेचाहिँ भएन।[४]

परन्तु, यसले गर्दा पछि दोलखा राज्यमा पहिलोपल्ट चाँदीको मुद्रा प्रसार गर्न र पछि कान्तिपुरमा पनि चाँदीकै महेन्द्र मल्लीको प्रसार गर्ने वाटो चाहिँ वनाइदिएको मान्न सकिन्छ। व्यापारको विकासमा मौद्रिक सुधारले अनन्य स्थान ओगट्ने कुरा चाहिँ यहाँ भनिरहनु पर्दैन। मौद्रिक क्षेत्रमा तिब्बतको आँखा खोलिदिने काम पनि नेपालबाटै भएको थियो। यसमा त रत्न मल्ललाई अवश्य पनि अगुवा मान्नु पर्दछ।

## व्यापारमा मुसलमानी प्रवेश

नेपालबाट तिब्बतसंग हुने परंपरागत व्यापारमा मुसलमानहरूको प्रवेशलाई अनुमति दिने पहिलो राजा पनि रत्न मल्ल देखिएको छ। तिब्बतमा मुसलमान व्यापारीहरूको प्रवेशका सम्बन्धमा हाम्रोतर्फ अध्ययन अनुसन्धान भएकै छैन।

भाषा वंशावलीकारले परंपरादेखि सुनेर आएको कुरा मात्र संक्षेपमा यसरी टिपेका छन्:

*"यिनै वर्षमा रत्न मल्लले ('कुकु' भोटेहरूलाई दमन गरेको वर्ष) यवन भन्याका मुसलमानहरूको नेपाल विषये प्रवेश भयो।"*

**-भाषा वंशावली, भाग-२**

**नेपाल राष्ट्रिय पुस्तकालय**

**पृष्ठ ५२** (सं. २०२३)

## संन्यासीहरूको प्रसंग

फेरि, तिब्बतको व्यापारमा जोगी संन्यासीहरूको भूमिका पनि कम महत्त्वको थिएन। भाषा वंशावलीमा रत्न मल्लले पशुपतिनाथको पुजारीमा सोमेश्वरानन्द भन्ने संन्यासीलाई नियुक्त गरेको विवरण पनि यहाँनिर चाख लाग्दो नै छ :

---

४. यस किसिमका मुद्राको चित्र वाल्स (walsh) ले Coinage of Nepal मा पनि विनापरिचय दिएका छन्। काठमाडौंमा यस्ता मुद्रा बराबर पाइँदै रहेकाले परंपराको आधारमा अहिलेलाई यो छोटो परिचयसम्म यहाँ दिइएको छ।

-लेखक

*"यिन राजाका (रत्न मल्ल) पाला मध्यदेशदेखि सोमेश्वरानन्द नाम षोढान्यासी एक स्वामी आया र तिनकन श्रीपशुपतिनाथका पूजक योग्य ठहराई पूजाहारी गरिदिया। शंकराचार्य स्वामीले रीत चलाई गयामा पूजाहारि दक्षिणेभट्ट ब्राह्मण मात्र हुन्। यिन राजाका पालामा स्वामी पूजाहारि भया। ......*

*"फेरि यिनै स्वामीकन गुरू पदवी गरी देशरक्षा निमित्त दक्षिणकाली आवाहन गरी पशुपतिनाथका नैऋत्यकोणमा पारी नवग्रह सन्धि मातृकागण सहित गरी स्थापना गराया। ...*

*यी स्वामीले धेरै वर्ष श्रीपशुपतिनाथकन नित्य पूजा गरी मातृका सन्धि समाधि राखी प्राणायाम गरी ब्रह्मद्वार खोली शून्यमा गया।"*

**-भाषा वंशावली, भाग-२**
**नेपाल राष्ट्रिय पुस्तकालय**
**पृष्ठ ५२ (सं. २०२३)**

उपर्युक्त भाषा वंशावलीका कथनहरूले पशुपतिमा संन्यासी पूजारीको परंपरालाई संकेत गर्छ। यी संन्यासीहरू तिब्बतमा पुगेर व्यापार समेत गर्ने हुनाले तिनै संन्यासीहरूलाई हात लिन रत्न मल्लले यो व्यवस्था वांधेको कुरामा विश्वास गर्न सकिन्छ। रत्न मल्लपछि कान्तिपुरका राजा शिवसिंहले पनि पशुपतिमा सन्यासी पुजारी नियुक्त गरेको घटना वंशावलीमा उल्लेख हुनाले यसको पछाडि पनि तिब्बतसितको व्यापार नै भन्नु पर्नेछ। यी सन्यासीहरू तिब्बततर्फ जाँदा बाटामा आत्मरक्षाको निमित्त हतियार समेत लिएर हिंड्थे।

पशुपतिनाथ नेपालको धार्मिक दृष्टिले मात्र होइन, राजनैतिक कारणले पनि आराध्य छन्। 'पशुपति' को नाममा यहाँ हुने गरेका राजनीतिको विश्लेषण नेपालको इतिहासकै वैशिष्ट्यको रूपमा अध्ययन गर्न सकिन्छ।

## सामाजिक-धार्मिक अवस्था

रत्न मल्लको समयमा नेपाल-मण्डलको जनसंख्या अत्यधिक वौद्ध धर्मावलम्वी थिए। अझ, खास गरी कान्तिपुर तथा ललितपुरमा बौद्ध विहारहरू मात्र जताततै देखिने हुँदा बाहिरबाट आउने जो सुकै आगन्तुकलाई नेपाल-मण्डल बौद्ध जगत्कै एउटा नक्षत्रका रूपमा चिनिने वा चिनाइने गरिन्थ्यो। यो पक्षको अध्ययन पनि यहाँ अहिलेसम्म हुन सकेको छैन।

तर, तान्त्रिक अनुष्ठानमा भने नेपाल-मण्डल अझ अगाडि नै बढेको थियो। यसले बौद्ध संस्कृतिको पनि अभिन्न अंगका रूपमा विकसित हुँदै थियो। त्यसमा एउटा थप रत्न मल्लले गरेका थिए 'तुलजा' को स्थापनाद्वारा।

रत्न मल्लले नेपालको पुरानो राजधानी भक्तपुर छाडेर नयाँ राजधानीमा आफ्नो भाग्य अजमाइस गर्न कान्तिपुरमा वस्न आएको हुँदा उनको निम्ति इष्टदेवी तुलजाको स्थापना गर्नु यहाँ अनिवार्य पनि भयो। फेरि, तुलजाको मन्त्र वावु यक्ष मल्लबाट यिनैले पाएको हुँदा यिनी खास उत्तराधिकारीको हैसियतले पनि यहाँ 'तुलजा' को स्थानान्तर भएको मानिन लागे। नेपालमा तान्त्रिक पद्धतिको केन्द्र विन्दु अवश्यमेव 'तुलजा' नै थियो र हो पनि। यसबारेमा भाषा वंशावलीको परंपराले पनि यसरी व्यक्त गरिएको पाइन्छ :

*"रत्न मल्ल राजासित तुलजा जगाउन्या मन्त्र सिद्धि हुनाले नानादेवता सन्धि सूक्ष्म मन्दिर बनाई तुलजा स्थापना गऱ्या।"*

**-भाषा वंशावली, भाग-२ (पृष्ठ ५२)**
**नेपाल राष्ट्रिय पुस्तकालय (सं. २०२३)**

यसै तुलजाको मन्त्रका कुरामा भक्तपुरमा नै दाजु राय मल्लसित रत्न मल्लको वैमनस्य भएको कुरा भाषा वंशावलीकारले रत्न मल्लका वारेमा लेख्दा उत्थानमै चर्चा गरेका छन्। यसले त्यतिखेरको समाजमा रत्न मल्लको उदयको निमित्त एउटा वलियो पृष्ठभूमि तैयार गरिदिएको मान्न सकिन्छ। उसवखत जनमानसको झुकाउ रत्न मल्लतिर आकृष्ट गर्नमा यसले ठूलो सघाउ पुऱ्याएकोले तत्कालको लागि एउटा सशक्त 'जनमत' नै सावित हुन्छ। अतः यो पक्षले नेपाल-मण्डलको राजनैतिक इतिहासलाई नै प्रभाव नपारी छाड्दैन।

## परिशिष्ट खण्ड

अभिलेख-१

# यक्ष मल्लको छोरा राजकुमार राय मल्लको निमित्त तुलादान ने.सं. ५७३

**'सुमति सिद्धान्त'** ग्रन्थको अलग पानामा रहेको प्रलेख-

स्वस्ति ॥

श्रीश्रीजय जक्ष मल देव ठाकुरस ॥ काय कुम्हर श्रीश्रीजय राय मल देव कुम्हरत्वम् शरीर पीड्डा जुयाव ॥ श्रीश्रीजय जक्ष मल देवठाकुरस्यं: तोला पुरस दान याये ज्याङ तया ॥ सम्वत् ५७३ मार्ग शिर कृष्ण ॥ (अ) मावाशी घटि १२ विघटि ५ थ्व ग्रासस ॥ श्रीश्री जय जक्षमल देव ठाकुरस्यं: सुवर्ण्ण तोला पुरस ग्वल्वं श्रीश्रीदेवलस दान याङा श्रीश्रीजय राय मलदेव कुम्हर ठाकुरस्यं: वर्ष २ मास ९ ... थ्व तोला पुरस यातम् यन्हं श्रीयेथ वहारन दोयका भार्थ प्याखन चव अंक ।

***

**स्रोत:**

**केसर पुस्तकालय, संख्या ८२**

**'पूर्णिमा' पूर्णाङ्क ३६ (२०३४)**

अभिलेख-२

# यक्ष मल्लका पालाको लुभु, क्वलाछी टोल नारायणथानको अभिलेख ने.सं. ५७२

[आंशिक उद्धरण]

.......

श्रीमान् स्वपक्ष जना (नन्द) दायक श्रीश्रीयक्ष मल्ल इति राजति भूपतिः श्री । तस्यात्मजः श्रीजय राय मल्लो मध्यानुजः श्रीजयरत्न मल्लः । सुराजते श्रीरण मल्लदेवः कनिष्ठ पुत्रः कहरीश रूपः । ......

सम्वत् ५७२ चैत्र शुक्ल एकादश्यांतिथौ ॥ मघ नक्षेत्रे ॥ वृद्धि योगे । शुक वासरे। थ्व दिन कोन्हु॥ प्यन्हु यज्ञ याङ गजुडिनो ध्वजाजो छाया॥ ॥

श्रीश्रीजय जक्षमल्ल देव ठाकुरस विजय राजस ।

कोट नायक न्हेदयराज मुलमीस प्रज्यायस ॥ ........

***

**सन्दर्भ**

D.R. Regmi

Medieval Nepal III (1966)

# नेपाल-मण्डलमा घटेका रत्न मल्लको पालाका महत्त्वपूर्ण घटनाक्रम

**यक्ष मल्लको मृत्युः** ने.सं. ६०२ माघ कृष्ण दशमी ।

**त्रिभय-शासनः**

राय मल्ल + रत्न मल्ल + रण मल्लको संयुक्त शासन ।

रत्न मल्लले कान्तिपुरमा आएर राजधानी स्थापना र यहाँका

सामन्त शासक महापात्रहरूलाई हटाएको । ने.सं. ६०४ (वैशाखशुक्ल एकादशी)

**भक्तपुरमा चौभय-शासन**

राय मल्ल + रत्न मल्ल + रण मल्ल + भीम मल्ल (भानिज) को संयुक्त शासन

**राजधानी कान्तिपुरमा उभय शासन**

रत्न मल्ल + अरि मल्लको संयुक्त शासन

**नुवाकोटमा महापात्रहरूको विद्रोह र रत्न मल्लद्वारा तिनको दमन** ने.सं. ६११

**'कुकु' भोटेहरूको आतङ्कः**

**दोलखामा महापात्र उद्धवदेवद्वारा स्वतन्त्र राज्य**

**ललितपुरमा रत्न मल्लको प्रभावः**

राजधानी कान्तिपुरको अधीनमा ललितपुर ने.सं ६१५ (ज्येष्ठकृष्ण त्रयोदशी)

**ललितपुरमा 'त्रि-पुर राजकुल' त्रि-भय शासनः**

रत्न मल्ल + अरि मल्ल + रण मल्लको संयुक्त शासन (ने.सं. ६१५-६३५)

**कान्तिपुरमा अरि मल्लको मृत्यु** (ने.सं. ६२३-६२४)

**रत्न मल्लकासाथ उपराज इन्द्र मल्ल** (ने.सं. ६२४)

**इन्द्र मल्लको विवाह** (ने.सं. ६२४ वैशाखकृष्ण पंचमी)

**राजधानी कान्तिपुरमा रत्न मल्लको एकल शासन** (ने.सं. ६२९-६४०)

**भक्तपुरमा राजा राय मल्लको मृत्यु** (ने.सं. ६३० मार्गकृष्ण सप्तमी)

**भक्तपुरमा रत्न मल्लद्वारा इन्द्र मल्लको हत्या** (ने.सं. ६३१ चैत्रकृष्ण द्वितीया)

**ललितपुरमा रत्न मल्लको एकल शासन** (ने.सं. ६३५-६४०)

**बनेपामा रण मल्लको स्वतन्त्र शासन** (ने.सं.६३६)

**भक्तपुरमा राजा भुवन मल्लको मृत्यु** (ने.सं. ६३९ माघशुक्ल दशमी)

**कान्तिपुर राजधानीमा महाराजाधिराज रत्न मल्लको मृत्यु** (ने.सं. ६४० भाद्रशुक्ल द्वादशी)

# रत्न मल्लका पालाको घटनाक्रम वि.सं. र ई.सं. मा रूपान्तर

| ने.सं. | घटनाक्रम | सं. (विक्रम) | ई.सं. (A.D) |
|---|---|---|---|
| ६०२ | यक्ष मल्लको मृत्यु | १५३८ | 1481 |
| ६०४ | रत्न मल्लको राजधानी कान्तिपुर | १५४१ | 1484 |
| ६११ | नुवाकोटी महापात्रहरूको विद्रोह | १५४८ | 1491 |
| ६१५ | रत्न मल्लको अधीनमा ललितपुर | १५५२ | 1495 |
| ६२३-६२४ | उपराज़ अरि मल्लको मृत्यु | १५६०-६१ | 1503-4 |
| ६२४ | रत्न मल्ल + इन्द्र मल्लको संयुक्त शासन | १५६१ | 1504 |
| ६२९ (उपरान्त) | राजधानी कान्तिपुरमा रत्न मल्लको एकल शासन | १५६६ (उपरान्त) | 1509 (onwards) |
| ६३० | भक्तपुरमा राय मल्लको मृत्यु | १५६६ | 1510 |
| ६३१ | भक्तपुरमा इन्द्र मल्लको हत्या | १५६७ | 1510 |
| ६३५ | रत्न मल्लको ललितपुरमा एकल शासन | १५७२ | 1515 |
| ६३६ | बनेपामा रण मल्लको एकल शासन | १५७३ | 1516 |
| ६३९ | भक्तपुरमा राजा भुवन मल्लको मृत्यु | १५७६ | 1519 |
| ६४० | कान्तिपुरमा महाराजाधिराज रत्न मल्लको मृत्यु | १५७७ | 1520 |

# सन्दर्भ ग्रन्थहरू


१. शंकरमान राजवंशी :

भूमि सम्बन्धी तमसूक ताडपत्र भाग- १ (सं. २०४०)

भूमि सम्बन्धी तमसूक ताडपत्र भाग- २ (सं. २०४१)

[राष्ट्रिय अभिलेखालय]

२. शंकरमान राजवंशी :

भक्तपुर शिलालेख सूची (सं. २०२०)

[वीर पुस्तकालयः हाल राष्ट्रिय अभिलेखालय]

३. बनेपा : सातगाउँ

बनेपा नगरपालिकाको स्मारिका- ३ (सं. २०५३)

४. कुलचन्द्र कोइराला :

'मत्स्येन्द्रनाथ'

गूठी संस्थान (सं. २०५२)

५. योगी नरहरिनाथ :

इतिहास प्रकाश (भाग-१) सं. २०१३

इतिहास प्रकाश (भाग- २) सं. २०१३

६. मोहनप्रसाद खनाल :

चाँगुनारायणको ऐतिहासिक सामग्री

CNAS त्रि.वि. (सं. २०४०)

७. धनवज्र वज्राचार्य-टेकबहादुर श्रेष्ठ :

दोलखाको ऐतिहासिक रूपरेखा (सं. २०३१)

नुवाकोटको ऐतिहासिक रूपरेखा (सं. २०३२)

CNAS त्रि.वि.

८. मोहनप्रसाद खनाल :

नेपालका केही मध्यकालीन अभिलेख (सं. २०२९)

९. भीमप्रसाद श्रेष्ठ (संपादक)
कर्णाली प्रदेश : एक विटो अध्ययन
सामाजिक अध्ययन समुदाय, (सं. २०२८)

१०. भानुभक्त स्मारक ग्रन्थ :
नेपाली साहित्य सम्मेलन
दार्जिलिङ्ग (भारत) सं. १९९७

११. हेमराज शाक्य :
महाबुद्ध मन्दिर - संक्षिप्त इतिहास (सं. २०४५)

१२. V.D. Mahajan
Mughal Rule in India, (1976),
S. Chand & Company Ltd. Ram Nagar, New Delhi.

१३. Wang Furen & Suo Wenjing:
Highlights of Tibetan History
New World Press, Beijing (1984)

१. * हरप्रसाद शास्त्रीः सूचीपत्र, भाग- १
* वीर पुस्तकालयः वृहत् सूचीपत्र भाग- ३
* 'पूर्णिमा' पूर्णाङ्क ३७ (सं. २०३४), संशोधन मण्डल

